# रेडियो वचन

*लेखक*
रघु मैनाली

*डिजाइन*
रविन सायमि

*कम्प्युटर*
बेबिना श्रेष्ठ

*पहिलो संस्करण*
२०५९

*छापिएको प्रति*
१०००

**ISBN:- 978-99946-856-3-9**
(यो ISBN- २०६५ सालमा अंग्रेजी संस्करणका लागि लिएर इन्टरनेट नेपाली संस्करणमा पनि प्रयोग गरिएको हो ।)

*मुद्रक*
द प्रेस अन लिमिटेड प्रा.लि, सामाखुसी, फोन न. ४३५६३९५

*प्रकाशक*
फ्रि-भ्वाइस दि नेदरल्यान्ड(Free Voice, The Netherlands) को सहयोगमा
सामुदायिक रेडियो सहयोग केन्द्र/नेपाल वातावरण पत्रकार समूह
थापाथली, काठमाडौं
E-mail : crsc@nefej.org.np, URL : www.crscnepal.org

*मूल्य :-* रु. ९९/-

# लेखकीय

मैले सुनेको थिएँ- विवेक शक्ति हो । मैले पढेको थिएँ- ज्ञान शक्ति हो । म अहिले भोग्दै छु- सूचना शक्ति हो । पेशाले सञ्चारकर्मी भएको हुँदा म दोहोऱ्याएर स्वीकार्न चाहन्छु- सूचना शक्ति हो ।

शक्तिसँग सृष्टि र संहार दुवै गर्न सक्ने क्षमता हुन्छ । शक्तिको सही ढंगले प्रयोग गर्न सकेमा समाजमा युगान्तकारी परिवर्तन ल्याउन सकिन्छ । नयाँ-नयाँ अवसर र सम्भावनाहरू फेला पर्छन् ।

शक्तिको दुरुपयोग हुने गरेको कहालीलाग्दा इतिहास हाम्रासामु छन् । शक्तिको दुरुपयोगले संहार निम्त्याउँछ । तसर्थ शक्तिको प्रयोग गर्दा विवेक, ज्ञान र सीप तीनवटै चेतना र सजगता चाहिन्छ । यसलाई व्यवस्थित गर्न निश्चित नियम र अनुशासन पालना गर्नुपर्ने हुन्छ । सीप र जुक्तिमा पोख्त हुनुपर्छ । विवेक र ज्ञान खारिएको हुनुपर्छ ।

जुक्ति र सीपका लागि हामी तालिम लिन्छौं । ज्ञानका लागि हामी अवलोकन र अध्ययन गर्छौं । र, विवेकका लागि प्रत्येक घटनाको निष्कर्ष निकाल्न नैतिक गुणहरूको सही प्रयोग गर्छौं । यही नैतिक गुणहरूको शृङ्खलाबद्ध धरातल नै आचारसंहिता हो भन्ने निचोडबाट यो पुस्तक लेखनको थालनी भएको हो ।

पुस्तकको पहिलो अध्यायमा आचारसंहिताको इतिहास तथा अवधारणाका बारेमा संक्षिप्त उल्लेख गर्नुका साथै आचारसंहितालाई परिभाषित गर्ने प्रयास गरिएको छ । दोस्रो अध्यायमा नेपाली पत्रकारितामा आचारसंहिताका प्रयास तथा तिनको कार्यान्वयनको स्थितिका बारेमा समीक्षा गरिएको छ । तेस्रो अध्यायमा सामुदायिक रेडियोलाई परिभाषित गर्दै सामुदायिक सञ्चार कार्यमा देखा पर्ने आचारसंहिताका मुद्दा तथा क्षेत्रहरूका बारेमा व्याख्या विस्तार गरिएको छ । चौथो अध्यायमा आचारसंहिता जड वा निरपेक्ष विधान नभएको हुँदा बद्लिँदो परिस्थिति सँगसँगै पेशागत हिसाबले आचारसंहितामा आउन सक्ने फेरबदललाई

औंल्याउन खोजिएको छ । पाँचौं अध्यायमा सूचना सम्प्रेषणको कार्यमा आकर्षित हुने कानुनहरूलाई समेट्ने प्रयास गरिएको छ । छैटौं अध्यायमा अलग-अलग विशेषता बोकेका आचारसंहिताहरूलाई अनुवाद गरी राखिएको छ । जसले आचारसंहिताको तुलनात्मक अध्ययन गर्नलाई सहयोग पुऱ्याउनेछ । साथै नेपालमा हालसम्म जारी गरिएका आचारसंहितालाई संकलन गरी अनुसूचीमा समावेश गरिएको छ ।

बदलिँदो सामाजिक सन्दर्भ र परिस्थितिअनुसार हाम्रा पेशागत चिन्तनहरू बदलिएनन् भने त्यही क्षँणदेखि पत्रकारिता क्षैत्रमा दीर्घरोग सुरु हुन्छ । यहाँनेर नयाँ तथ्य र परिस्थितिहरू कहिल्यै गलत हुँदैनन् तर तिनको उपयोग र सामान्जस्य सही भएन भने परिणाम गलत आउँछ भन्ने कुरालाई सर्वप्रथम स्वीकार्नु जरुरी छ । सामुदायिक सञ्चार कार्यमा त पूर्णतया सहभागी हुनैपर्ने अवस्था आउँछ । यसको अर्थ सामुदायिक सञ्चारकर्मी घटनाको आलोचक वा टिप्पणीकर्तामात्र कदापि होइन । उसले त्यो विषयमा समझदारीको रणनीति तयार गर्न सक्नुपर्छ । कुनै कुरामा विवाद सिर्जना गर्ने होइन उसको दायित्व सहमतिको साझा धरातल फेला पार्नेमा हुन्छ । सामुदायिक सञ्चारकर्मी घटनाको स्वतन्त्र विश्लेषक हुन सक्तैन, ऊ अन्तरनिर्भरता भित्रको स्वतन्त्र व्यक्ति हुन्छ । सामाजिक जटिलताहरूलाई खोतल्ने र मात्रात्मक रूपले मात्र होइन गुणात्मक हिसाबले समेत परस्पर सन्तुलन खोज्ने कार्यमा सामुदायिक सञ्चारकर्मी लाग्नुपर्ने हुन्छ ।

एउटा पुरानो कहावत स्मरण गरौं- मेरो स्वतन्त्रता त्यहाँ पुगेर टुंगिन्छ, जहाँदेखि तपाईंको नाक सुरु हुन्छ । बस् आचारसंहिताको न्यूनतम विन्दु यही हो ।

अन्त्यमा रेडियो वचन पुस्तक तयार पार्ने क्रममा धेरै जनाको प्रत्यक्षँ समय र श्रमको लगानी भएको छ । पुस्तक लेखनका लागि आवश्यक सामग्रीहरू जुटाउन राजेश घिमिरे, घमराज लुइँटेल, धातृ सुवेदी, अर्जुन ढकाल, गोपाल तिवारी, महेश नेपाल, रिञ्छेन योञ्जनले

सहयोग गर्नुभएको छ । पुस्तकको विषयवस्तुलाई परिस्कृत गर्ने अभिभारा झन्झट नमानी स्वीकार गरिदिनु हुने सञ्चारविद् पी. खरेलेप्रति आभार व्यक्त गर्दछु । पुस्तकको केही भाग पढेर महत्त्वपूर्ण सुझाव दिनुहुने लेखक घनश्याम भूसाल र जीवनाथ खनाल धन्यवादका पात्र हुनुहुन्छ । पुस्तक तयारीका क्रममा सुरुदेखि अन्त्यसम्म निरन्तर सहयोग गर्नुहुने बद्री पौड्यालप्रति कृतज्ञता व्यक्त गर्न चाहन्छु ।

यसैगरी शुद्धाशुद्धिको जिम्मेवारी बहन गरिदिनु हुने गोपाल तिवारी, डिजाइनको निमित्त रविन सायमि र कम्प्युटर लेआउटका लागि बेबिना श्रेष्ठप्रति कृतज्ञ छु । पुस्तक तयारीको जिम्मेवारी सुम्पेकोमा सामुदायिक रेडियो सहयोग केन्द्र, नेपाल वातावरण पत्रकार समूहप्रति अत्यन्त आभारी छु ।

धन्यवाद ।

*रघु मैनाली*

# विषय सूची

## पहिलो खण्ड



## दोस्रो खण्ड

## तेस्रो खण्ड



## चौथो खण्ड

## पाँचौं खण्ड

## आचारसंहिता र कानुनी सन्दर्भ ११५



## छैटौं खण्ड

## आचारसंहिता : नेपाली सन्दर्भ २५



## अनुसूची– १ १५९

## इतिहास

लोककल्याणको सन्दर्भले आचारसंहितालाई परापूर्वकालदेखि नै कुनै न कुनै रूपमा अस्तित्वमा ल्याएको छ । सबैखाले धर्महरूले लोककल्याणको गफ आदिमकालदेखि गर्दै आएका छन् । धर्मशास्त्रहरूले समाजमा मूल्य स्थापित गरेर आ-आफ्ना विधि-विधान निर्धारण गरेका छन्, आचार-व्यवहार तय गरेका छन्, जसले नैतिक र अनैतिक कार्यको परिभाषा निर्धारण गर्छ । हिन्दुको वेद तथा भागवत गीता, मुसलमानको कुरान तथा क्रिश्चियनको बाइबलले पाप र पुण्यलाई आचारसंहिताको आधार बनाएका छन् । यी तीनवटै धर्म ग्रन्थहरूलाई एकै साथ राख्ने हो भने एउटै कुरा पाप र धर्म दुवै हुन्छ । हिन्दुहरूका लागि गाईको मासु खानु महापाप हो तर क्रिश्चियन तथा मुसलमानका लागि दैनिक भोजनको विषय हो । यसरी धर्महरूले पाप, पुण्य, सत्य, परोपकार, हितजस्ता कुराहरूलाई अलग-अलग र आ-आफ्नै तरिकाले व्याख्या गरेका छन् । ईसापूर्वको यो काल आचार-व्यवहारहरू आस्था र विश्वासद्वारा निर्धारण हुन्थे । यो समयमा ठीक र बेठीकलाई भगवान्को इच्छाका रूपमा स्वीकार गरिन्थ्यो- 'यो कुरा ठीक छ किन भने भगवान्ले यसै भनेका छन् ।' आज्ञाकारी हुन त्यसबेला आचारसंहिता पालनको मूलशर्त थियो ।

वेदब्यास, गौतम बुद्ध, आचार्य विष्णु गुप्त, पैगम्बर मोहमद, शंकराचार्यजस्ता पूर्वीय विद्वान्देखि सुकरात, प्लेटो, अरिस्टोटलजस्ता पश्चिमा दार्शनिकहरूले आचारसंहितालाई परोक्ष जगत् वा आध्यामिक विषयका रूपमा परिभाषित गरेका छन् । उनीहरूले परलौकिक कल्याणमा जोड दिएका छन् ।

रोमन साम्राज्यको युग नैतिक दर्शनशास्त्रको अत्यधिक विकासको युग मानिन्छ । सुकरात, प्लेटो, अरिस्टोटललगायतका दार्शनिकले यस विषयमा गहन सिद्धान्तहरू प्रतिपादन गरे । सुकरातले सबभन्दा पहिला ईश्वर, असल र सौन्दर्यजस्ता विषयमा केन्द्रित रहेर दार्शनिक दृष्टिकोणहरू अघि सारे । उनले त्यसबेला दर्शनशास्त्रलाई प्राकृतिक विज्ञानबाट

अलग्याए। जसबाट तथ्य र मूल्यबीचको भेद छुट्याउने प्रयास भयो। त्यस्तै उनले दर्शन र धर्मबीचको भिन्नता पनि राम्ररी केलाए।

सुकरातले ठीक र बेठीकबीचको सोधखोजलाई आचारसंहिताको दायरामा ल्याए। उनले पहिलेको तर्कभन्दा भिन्न व्याख्या गरे- 'भगवान्ले त्यो कुरालाई ठीक भनेका छन् किन भने त्यो ठीक छ।' यो तर्कले धर्मशास्त्रहरूद्वारा भगवान्को इच्छाका रूपमा परिभाषित गरिँदै आएको ठीक र बेठीकलाई भगवान्को इच्छाबाट अलग्याएको छ। तर पनि उनको परिभाषाले आचारसंहितामा भगवान् वा ईश्वरको सर्वव्यापकतालाई स्वीकार गरेको छ।

ईसापूर्व पाँचौं शताब्दीमा जन्मिएका हिपोक्रेट्स र प्लेटो तथा मौर्य कालका विष्णु गुप्तले मूल्यलाई विशिष्टीकरण गरेर नयाँ आयाम दिए। उनीहरूले पनि आचारसंहितामा स्थापित मूल्य तथा आत्माको अस्तित्वलाई अनुसरण गरे। त्यसबेलाको आचारसंहिता ज्ञान, सत्य र अस्तित्वजस्ता आध्यात्मिक पक्षसँग केन्द्रित थियो। मान्छेको आन्तरिक शुद्धि वा चित्त शुद्धिलाई आचारसंहिताले प्रमुख चासो दिन्थ्यो। आधुनिक औषधि विज्ञानका पिता हिपोक्रेट्सले चिकित्साशास्त्रमा, पश्चिमा दार्शनिक प्लेटोले रिपब्लिकन लेखेर राजनीतिशास्त्रमा र पूर्वीय विद्वान् विष्णु गुप्तले कौटलीय अर्थशास्त्र लेखेर अर्थशास्त्रमा विधागत मूल्यको सुरुवात गरे।

प्राचीन आचारशास्त्रीहरू सुकरात, प्लेटो, विष्णु गुप्त, अरिस्टोटलहरूले अघि सारेको आध्यात्मिक आचारसंहिताको मान्यता झन्डै दुई हजार वर्षसम्म कायम रह्यो। ईस्वीको सत्रौं शताब्दीमा मात्र आधुनिक आचारसंहिता सुरु भयो। आधुनिक आचारशास्त्रीहरूले परोक्ष जगत् र आध्यात्मिक पक्षभन्दा ज्यादै भिन्न प्रत्यक्ष जगत् र व्यावहारिक पक्षलाई आचारसंहिताको विषय बनाएका छन्।

आधुनिक आचारशास्त्रीहरूमा थोमस हब्स, डेबिड ह्युम, जेरोमी बेन्थम, जोन स्टुआर्ट मिलजस्ता दार्शनिकको नाम आउँछ। थोमस हब्स (Thomas Hobbes) ले सत्रौं शताब्दीमा पहिलोपटक आचारसंहितामा नयाँ आयाम थपेका हुन्। हब्सले शान्तिपूर्ण सहअस्तित्वलाई

आचारसंहिताको आधारभूमि मानेका छन् । यो व्याख्यासँगै हब्सले आधुनिक नैतिक दर्शनशास्त्रको सुरुवात गरे । हब्सले आत्माको अस्तित्वलाई स्वीकार गरेनन् । उनले आचारसंहितालाई भौतिक संसारभित्रै खोजे । हब्सले यो संसारमा जेजस्ता घटना घट्छन्, ती सबै भौतिक संसारभित्रै खोजे । हब्सले  यो संसारमा जेजस्ता घटना घट्छन्, ती सबै भौतिक वस्तुकै परिणाम हुन् भनी किटान गरेका छन् । उनका अनुसार असल र खराबको सम्बन्ध मान्छेका चाहना र वितृष्णासँग रहेको हुन्छ । यसैगरी अठारौं शताब्दीका अर्का दार्शनिक डेबिड ह्युमले मानवतालाई नैतिकताको स्रोतका रूपमा व्याख्या गरेका छन् । उनका अनुसार नैतिक संवेदनाले मान्छेलाई खराब र असलबारेको सन्देश दिन्छ ।

आधुनिक आचारसंहितामा पनि विभिन्न धाराहरू छन् । एकथरी आचारशास्त्रीहरूले आचारसंहितालाई कर्तव्यसँग जोडेका छन् भने अर्कोथरी आचारशास्त्रीहरूले आचारसंहितालाई उपयोगितासँग जोडेर व्याख्या गरेका छन् ।

कर्तव्य निर्वाह गर्दा अपनाउनुपर्ने सिद्धान्तका पक्षधर आचारशास्त्रीहरूले कुनै कार्यको परिणाम कस्तो आउँछ भन्नेभन्दा पनि विकल्पहरूको खोजी गर्नु आचारसंहिताको काम हो भनेका छन् । दायित्व पूरा गर्ने बेलामा व्यक्तिले के के कुराको अनुसरण गर्नुपर्छ ? जस्ता पक्षमा उनीहरूले विशेष जोड दिएका छन् ।

उपयोगितावादी सिद्धान्तका पक्षधर आचारशास्त्रीहरू जेरेमी बेन्थम, जोन स्टुअर्ट मिल पुँजीवाद मौलाउँदो युगका दार्शनिक हुन् । पुँजीवादले थपिनु (Pluses) लाई आनन्द र घट्नु (minuses) लाई पीडाका रूपमा चरम व्याख्या गरेको छ । पुँजीवादबाट प्रेरित हुँदै जे बेन्थम र  जे एस मिलले आचारसंहितालाई अन्तिम परिणामतर्फ केन्द्रित गरेका छन् । राम्रो परिणामको चाहना राखेर गरिने जस्तासुकै काम पनि आचारसंहिताअनुरूप नै हुन्छन् भन्ने तर्क उनीहरूको छ ।

मानव इतिहासकै भयानक नरसंहारकारी विध्वंस दोस्रो विश्वयुद्धपछि सामाजिक उत्तरदायित्वको भावना एकाएक पलायो । शान्ति स्थापनाका

लागि संयुक्त राष्ट्रसंघको गठन भयो । सामाजिक उत्तरदायित्वप्रतिको सजगताले सबैखाले पेसामा संलग्न व्यक्तिलाई घचघच्यायो । यसरी १९४७ पछि सामाजिक अमनचयनका आधारमा विश्वव्यापी हिसाबले पेशागत आचारसंहिताको थालनी भयो ।

## अवधारणा (Approach)

शान्ति प्राप्तिका लागि नैतिक आचरण र ज्ञानको जरुरत हुन्छ । आचारसंहिता नैतिक दर्शनशास्त्रको व्यापक अध्ययनको विषय हो । यसले हरेक घटना, कार्य र क्षेत्रसँग सम्बन्ध राख्छ । तर यो पुस्तकमा आमसञ्चार गर्दा सामूहिक कार्यले ल्याउने समस्या तथा व्यक्तिगत स्वर्थले सिर्जना गर्ने द्वन्द्वका बारेमा विषयवस्तुलाई केन्द्रित गरिनेछ । अर्को शब्दमा भन्दा दायित्व निर्वाह गर्दा लिनुपर्ने सजगता तथा परिणामले सिर्जना गर्ने पेशागत दुविधाहरूका बारेमा विषयवस्तुलाई सीमित गरिनेछ ।

कार्य सम्पादन गर्दा आइपर्ने समस्याहरूको समाधानका लागि केही सर्वस्वीकार्य मान्यताहरूको आवश्यकता पर्छ, जसको अनुसरणले सबै पक्षलाई पारस्परिक फाइदा पुर्‍याओस् । आफ्ना सामुन्नेमा रहेका परिस्थितिको समीक्षा गर्नु, त्यसको सामाजिक असर निर्धारण गर्नु, तत्काल लिइनुपर्ने निर्णय पहिल्याउनु र यो निर्णयले असर पार्ने व्यक्ति वा समूहको परिचाहन गर्नु, त्यस्तो स्थितिसँग संलग्न अन्य व्यक्ति वा समूहको आस्था र विश्वास पत्ता लगाउनु र आफूले गरेको निर्णय तथा कार्यले ल्याएको परिणामलाई मूल्यांकन गर्दै भविष्यमा त्यस्तो स्थितिप्रति अपनाइनुपर्ने व्यवहारबारेमा निष्कर्ष निकाल्न सजिलो होस भनेर यो पुस्तकमा केही महत्त्वपूर्ण सन्दर्भहरू उठाइनेछ । यस्ता सन्दर्भको विवेचनाले पत्रकारलाई आप्नो नैतिक धरातल तथा अवस्थाप्रति परिचित गराउँछ, जसले निश्चित समयमा उसको सूचना प्रवाहको क्षमतालाई स्वस्फूर्त रूपले निर्देशित गर्छ ।

## परिभाषा

आचारसंहिताको परिभाषाका बारेमा आचारशास्त्रीहरूबीच मतऐक्य छैन । तर आचारसंहिताको अध्ययनका विषयमा भने धेरै आचारशास्त्रीहरूले सहमति जनाएका छन् । उनीहरूका अनुसार आचारसंहिताको अध्ययन क्षेत्र भन्नाले सामाजिक मूल्यको प्रकृति र व्यक्तिका स्वभावबीचको द्वन्द्व र समझदारीलाई बुझाउँछ ।

यस सन्दर्भमा हाम्रा सामु झन्डै-झन्डै समान अर्थ दिने केही शब्दहरू छन्- मूल्य-मान्यता, नैतिकता, कानुन र आचारसंहिता । यहाँ सबभन्दा पहिला यी शब्द तथा तिनले बोक्ने भाव र कर्तव्यबीचको भेद छुट्याउने प्रयास गरौं ।

सबैलाई थाहा भएकै कुरा हो- संस्कृति फरक हुनेबित्तिकै मूल्य-मान्यता, नैतिकता तथा कानुनहरू फरक-फरक हुन सक्छन् । उदाहरणका लागि नेपाली कानुनले नजिकको आफन्तसँग हुने वैवाहिक सम्बन्धलाई हाडनाता करणी भनी अपराधको कोटीमा राखेको छ । तर नेपालभित्रै केही जातजातिहरू छन्, जसको वैवाहिक सम्बन्ध फुपूचेला-मामाचेनाबीच नै कायम हुनुपर्छ । मूल्य-मान्यता र नैतिकतामा पनि यस्तै विभिन्नता लागू हुन्छ ।

तर के संस्कृति फरक हुँदैमा आचारसंहिता फरक हुन्छ त ? हामीले निधार खुम्च्याएर घोत्लिनुपर्ने प्रश्न यही हो । सांस्कृतिक हिसाबले लिम्बू, तामाङ, राई, बाहुन, नेवार, थारू जातिहरू भिन्न-भिन्न छन् । तर बाहुनले रेडियोमा काम गर्दा, लिम्बूले गर्दा वा थारूले गर्दा कार्यक्रम उत्पादनको आचारसंहिता फरक हुनुहुँदैन, फरक हुनै सक्तैन ।

यहाँनेर हामीले मूल्य-मान्यता, नैतिकता, कानुन र आचारसंहिताबीचको आधारभूत भेद केलाउँदा के पाउँछौं भने मूल्य-मान्यता, नैतिकता तथा कानुन प्रारम्भिक रूपमै सामाजिक हुन्छन् । यिनीहरूले व्यक्तिका समाज निर्देशित बानी-व्यवहारलाई जनाउँछन् । मूल्य-मान्यता, नैतिकता र कानुनहरू समाजद्वारा निर्मित, निर्देशित तथा कार्यान्वित हुन्छन् । तर आचारसंहिता प्रारम्भमै वैयक्तिक हुन्छ । यसले

व्यक्तिका स्वस्फूर्त बानी-व्यहोरासँग सरोकार र सम्बन्ध राख्छ। यो व्यक्ति स्वयंद्वारा निर्मित र निर्देशित हुन्छ।

यस सन्दर्भमा परिभाषित गर्दा पत्रकारहरूका लागि आचारसंहिता भनेको व्यक्तिका विवेकपूर्ण व्यवहारहरूको मौन सिद्धान्त हो। अर्को शब्दमा भन्दा आचारसंहिता त्यस्तो विवकेपूर्ण सजगता हो, जसले व्यक्ति (पत्रकार) का व्यवहारहरू तय गर्छ, निर्देशित गर्छ साथै ठीक-बेठीक, असर-खराब तथा जिम्मेवारी-गैरजिम्मेवारीबीचको भेद छुट्याउने आधारभूत चेतना दिन्छ। प्राध्यापक जोन मेरिलले आफ्नो पुस्तक इम्परेटिभ अफ फ्रिडममा भनेझैं आचारसंहिताले पत्रकारका कामकारबाहीको गुणस्तरसँग प्रत्यक्ष सम्बन्ध राख्छ।

कोलिन्स डिक्स्नेरी अफ सोसियोलजीका अनुसार आचारसंहिता दर्शनशास्त्रको त्यस्तो शाखा हो जसले नैतिकवान बन्नका लागि मान्छेले के कस्ता कार्य गर्नुपर्छ भन्ने कुरासँग सरोकार राख्छ।

निचोडमा पत्रकारहरूका लागि आचारसंहिता भनेको अहरणनीय तथा अविच्छिन्न प्रेस स्वतन्त्रता र सामाजिक उत्तरदायित्वबीचको सामानजस्य हो। आचारसंहिताले पत्रकारका लागि पेशागत जीवनमा आइपर्ने अनौठा परिस्थितिप्रति उचित व्यवहारको आधारभूमि तयार पार्छ। साथै यसको पालना भनेको पत्रकारले आफ्नो मनमस्तिष्कलाई यस्ता आधारभूत व्यवहार र आचारप्रति सधैं सजग गराइरहनु हो।

## आचारसंहिताको वर्गीकरण

नेपाली पत्रकारितामा कुनै निश्चित सिद्धान्त तय भएको छैन। मिसौरी विश्वविद्यालय, अमेरिकाका प्राध्यापकहरूको एउटा समूहले परिभाषित गरेका निरपेक्ष, स्वच्छन्द र सापेक्ष तीनवटै आचारसंहिता यहाँका पत्रकारले व्यावहारिक रूपमा अवलम्बन गर्ने गरेका छन्।

*निरपेक्ष आचारसंहिता :* यो आचारसंहितालाई मान्नेहरूसँग निश्चित सिद्धान्त हुन्छन्। उनीहरू निर्देशित सिद्धान्तबाट अलिकति पनि विचलित हुँदैनन्। यो अवस्था एक प्रकारको कानुनसरह हुन्छ। उनीहरूका लागि

चोरी अपराध हो भने सधैं नै अपराध हो ।

यो आचारसंहिताले बलात्कृत महिलाको नाम छाप्न अनुमति दिन्छ । त्यो समाचार प्रकाशनपछि ती महिलाले कति सामाजिक अपमान वा पीडा भोग्नुपऱ्यो भन्ने कुरासँग कुनै मतलव हुँदैन । उनीहरूका लागि घटनावस्तुको प्रभाव र परिणाम असान्दर्भिक हुन्छ । घटनाहरूको गणितीय निचोड नै निरपेक्ष आचारसंहिता हो ।

*स्वच्छन्द आचारसंहिता :* स्वच्छन्द आचारसंहिताका अनुयायीहरू सबैखाले नियमलाई इन्कार गर्छन् । उनीहरूका विचारमा पूर्वनिर्धारित व्यवहार र नैतिक नियम हुँदैनन् । उनीहरूका लागि कार्य र परिस्थिति भविष्यवाणी गर्ने तथा योजनाबद्ध बनाउन नसकिने खालका हुन्छन् । उनीहरू मनसाय, बाध्यता र परिणामसँग सरोकार राख्दैनन् । आफ्नो निर्णय प्रक्रियालाई निर्देशित गर्ने कुनै सिद्धान्त हुँदैन । उनीहरू घटना वा विषयवस्तुप्रति आफ्नो स्वस्फूर्त प्रतिक्रिया दिनसक्ने क्षमतामाथि पूर्ण विश्वास राख्छन् ।

*सापेक्ष आचारसंहिता :* यो आचारसंहिता परिस्थितिमा निर्भर गर्छ । यस्तो आचारसंहिता मान्नेहरू केही सूत्रवाक्यप्रति जानकार हुन्छन् र तिनीहरूलाई स्वीकार गर्छन् । तर उनीहरू परिणामप्रति सधैं संवेदनशील हुन्छन् । उनीहरूका निर्णयहरू कुनै परिस्थितिमा मूल्य-मान्यता, नैतिकता तथा कानुन निर्देशित पनि हुनसक्छन् । चोर्नु अपराध हो भन्ने कुरा उनीहरू स्वीकार गर्छन् । तर चोर्नु कहिलेकाहीँ ठीक हुन पनि सक्छ भन्ने सम्भावनालाई नकार्दैनन् । एउटा परिस्थिति कल्पना गरौं- हरि भन्ने व्यक्ति केही दिनदेखि भोकै छ र अझै खान पाएन भने उसको  मृत्यु हुन्छ भन्ने कुरा निश्चित छ । त्यस्तो अवस्थामा हरिले खानेकुरा चोरेर खायो । ऊ बाँच्यो । यहाँ हरिको चोर्ने नियत आफ्नो ज्यान बचाउनसँग मात्र सीमित छ । यस्तो अवस्थामा सापेक्ष आचारसंहिताले त्यो चराइलाई ठीक मान्छ ।

यस्तै अमेरिकी पत्रकारका लागि गाईको मासु खानु दैनिक भोजन

हो । तर सापेक्ष आचारसंहिता मान्ने अमेरिकी पत्रकार नेपाल आयो भने उसले गाई मार्नु अपराध हो भन्ने कुरा नेपालको सन्दर्भमा स्वीकार गर्छ । यो आचारसंहिताका अनुयायीहरूका लागि मान्छे उच्च प्राथमिकतामा पर्छ । परिस्थितिले उनीहरूका सामुन्ने निश्चित विकल्पहरू छोडेको हुन्छ । ती विकल्पमध्ये मानव हितका लागि उत्तम विकल्प छान्नु उनीहरूको आचारसंहिता हो । परिस्थितिसँगै उनीहरू आफ्नो विवेक र बौद्धिक क्षमता प्रयोग गर्छन् ।

## पेशागत संहिता : तुलनात्मक अध्ययन

मानवता अवमूल्यनको भयावह अवस्थाको पीडादायी अनुभव संगालेको विश्वले दोस्रो विश्वयुद्धपछि मानव अधिकार र सामाजिक उत्तरदायित्वको भावनालाई ग्रहण गर्‍यो । यो अमानवीयता फेरि नदोहोरियोस् भन्नका लागि उनीहरूले संयुक्त राष्ट्रसंघ स्थापना गरे ।

संयुक्त राष्ट्रसंघको लक्ष्य पूर्ति गर्नका लागि विभिन्न पेशामा संलग्न व्यक्तिहरू संगठित हुन थाले । यसरी पेशागत संगठनको निर्माण सुरु भयो र व्यावसायिक आचारसंहिता जारी हुन थाल्यो । यहाँ हामी जनतासँग प्रत्यक्ष सरोकार राख्ने केही पेशाहरूमा आचारसंहिताको थालनीका बारेमा छोटो चर्चा गरौं । जसले आचारसंहिता पत्रकारहरूका लागि मात्र होइन भन्ने कुरालाई प्रष्ट पार्छ ।

## चिकित्सक

विश्वभरिका डाक्टरहरूलाई एउटै छातामुनि ल्याउन सन् १९४७ सालमा विश्व मेडिकल एसोसिएसन गठन भयो । यो एसोसिएसनले स्थापनाको एक वर्षपछि सन् १९४८ मा पहिलो पटक डाक्टरहरूका लागि अन्तर्राष्ट्रिय संहिता जारी गर्‍यो । यसको १६ वर्षपछि मानव शरीरमाथि अनुसन्धान गर्दा अपनाइनुपर्ने आचरणका बारेमा हेल्सिन्की घोषणापत्र जारी गरिएको छ ।

यसभन्दा पहिले डाक्टरहरूले मान्यताका रूपमा औषधि विज्ञानका

पिता भनेर चिनिने हिपोक्रेट्सका नाममा शपथ लिने गरेका थिए । ईसापूर्व पाँचौं शताब्दीमा जन्मिएका हिपोक्रेट्स आफैंले त्यो शपथको व्यहोरा लेखे/लेखेनन् यकिन छैन । तर यो उनकै जीवनकालमा तयार भएको मानिन्छ र ईस्वीसंवत्को पहिलो शताब्दीदेखि डाक्टरहरूले हिपोक्रेट्सको भनाइलाई आदर्शका रूपमा ग्रहण गरेको पाइन्छ । चौथो शताब्दीपछि कुनै पनि डाक्टरले अभ्यास गर्नुअघि हिपोक्रेटिक शपथ खानुपर्ने बाध्यात्मक व्यवस्थासमेत सुरु भएको थियो ।

## नर्स

सन् १८९७ सालमा अमेरिकन नर्सेज् एसोसिएसन गठन भयो । नर्सहरूलाई आफ्नो पेशाप्रति संवेदनशील बनाउन आचारसंहिताको आवश्यकता यसैबेलादेखि नै महसुस गरिए पनि झन्डै आधा शताब्दीपछि सन् १९५० अमेरिकन नर्सेज् एसोसिएसनले औपचारिक रूपमा आचारसंहिता पारित गऱ्यो । यही आचारसंहितासँग मिल्ने गरी सन् १९७३ मा इन्टरनेसनल काउन्सिल अफ नर्सिङले नर्सका लागि अन्तर्राष्ट्रिय आचारसंहिता जारी गऱ्यो । यो आचारसंहितामा पेशा, सहकर्मी, समाज तथा बिरामीप्रति नर्सको उत्तरदायित्व बोध गराइएको छ । यसभन्दा पहिला नर्सिङ पेशा फ्लोरेन्स नाइटिङ्गेलको आदर्शबाट प्रेरित हुँदै अगाडि बढेको थियो ।

## वकिल

विश्वका ३४ राष्ट्रका कानुन व्यवसायीहरू सन् १९४७ साल फेब्रअरीमा अमेरिकाको न्युयोर्कमा भेला भएर अन्तर्राष्ट्रिय बार एसोसिएसन गठन गरे । यो एसोसिएसन स्थापनाको केही समयसम्म लगभग निष्क्रिय रह्यो । स्थापनाको झन्डै एक दशकपछि सन् १९५६ सालमा कानुन व्यवसायीहरूको अन्तर्राष्ट्रिय आचारसंहिता जारी भयो । कानुन व्यवसायीहरूमा आचारसंहिताको इतिहास केलाउँदा सत्रौं शताब्दीदेखि नै

बेलायतमा क्यानन्स् अफ लिगल इथिक्स (Canons of Legal Ethics) लाई अवलम्बन गरिएको पाइन्छ ।

## पत्रकार

पत्रकार कामकारबाहीलाई निर्देश गर्ने मान्यताको आवश्यकता महसुस गरी अन्तर्राष्ट्रिय पत्रकार महासंघले सन् १९५४ मा नौबुँदे आचारसंहिता जारी गऱ्यो । यो आचारसंहिता जारी गर्दा पत्रकारहरूको पेशागत व्यवहारको मानवका रूपमा लिइएको थियो ।

यसरी जनतासँग प्रत्यक्ष सरोकार राख्ने व्यवसायहरूमा आचारसंहिताको आवश्यकता बीसौं शताब्दीको मध्यतिर आएर महसुस भयो । यी आचारसंहिता समय-समयमा संयुक्त राष्ट्रसंघले जारी गर्ने घोषणापत्र, अन्तर्राष्ट्रिय सन्धि तथा अभिसन्धिका आधारमा परिमार्जनसमेत हुने गरेका छन् । तर अझै पनि आचारसंहिताहरूमा अन्तर्राष्ट्रिय सहमति भने कायम हुनसकेको छैन ।

पेशागत समूहहरूबीच आचारसंहिताको परिभाषा केही भिन्न छ । डाक्टर, नर्स र वकिलका लागि आचारसंहिता पेशागत समूहद्वारा निर्मित तथा निर्देशित हुन्छ । यसको कार्यान्वयनका लागि निश्चित संयन्त्र खडा गरिएको हुन्छ । उनीहरूले पेशा सुरु गर्नका लागि मेडिकल काउन्सिल, नर्सिङ काउन्सिल र बार काउन्सिलजस्ता आ-आफ्नो पेशासँग प्रत्यक्ष सरोकारवाला संस्थाबाट अनिवार्य इजाजत लिनुपर्छ । आचारसंहिता उल्लंघन गरेको खण्डमा इजाजत रद्द हुन्छ । यसर्थ उनीहरूका लागि आचारसंहिता बाध्यात्मक हुन्छ ।

तर पत्रकारहरूका हकमा यस्तो बाध्यात्मक अवस्था छैन । इजाजत दिने अधिकारीसँग नियन्त्रणको अधिकार पनि सुरक्षित रहने हुँदा वाक तथा प्रकाशन स्वतन्त्रताको ग्यारेन्टीका लागि पत्रकारहरूले पत्रकारिता गर्नलाई कसैबाट इजाजत लिनु नपर्ने प्रचलन छ । पत्रकारका लागि आचारसंहिता लागू गर्ने कुनै संयन्त्र हुँदैन । यो स्वेच्छिक हुन्छ । प्रेस काउन्सिल वा मिडिया काउन्सिलजस्ता संस्थाले पत्रकारलाई बेलाबेलामा

आचारसंहिताप्रति सजग रहन आह्वानमात्र गर्न सक्छ ।

## छापा माध्यम

नेपालमा छापा पत्रकारिताको इतिहास एक शताब्दी लामो छ । गोरखापत्र यसको जीवन्त इतिहास हो । तर गोरखापत्रका सुरुका दिनहरू पत्रकारिताबाट थालनी भएका भने होइनन् । राणा प्रधानमन्त्री देवशमशेरका पालामा प्रकाशन थालिएको गोरखापत्र गजेटकै रूपमा प्रकाशित हुन्थ्यो । गोरखापत्रमा के छापिन्छ र के के छाप्न हुन्न भन्ने कुरा कानुनी ढंगबाटै स्पष्ट गरिएको र प्रकाशनमा ल्याउनुअघि तोकिएको ओहदाका व्यक्तिलाई जचाई निजको हस्ताक्षर हुनुपर्ने स्थिति थियो (मणिराज- २०५९) ।

वि.सं. २००७ सालमा आएको परिवर्तनपछि नेपाली पत्रकारिताले खास अर्थमा पाइला सुरु गरेको हो। खुल्ला समाजको सुरुवातले जन्माएका अनगिन्ती आकांक्षामध्ये पत्रकारिता पनि एक थियो। त्यस समयमा नेपाली पत्रपत्रिकाको एकखाले बाढी नै आयो। तर दलगत राजनीतिक स्वार्थपूर्ति गर्नु त्यसबेलाका पत्रपत्रिकाको लक्ष्य भयो । पत्रिकाहरूको प्रकाशन सँगसँगै नेपाली पत्रकारहरूले संगठित हुनु आवश्यक ठानेर २००८ सालमा नेपाल पत्रकार संघको स्थापना गरे । यो संगठित प्रयास डेढ दशकसम्म राजनीतिक खिचातानी र कलहमा रुमल्लियो । यो अवधिमा पत्रकार संघले पत्रकारितालाई व्यवस्थित गर्नेतर्फ सोच्न पनि सकेन । एक दशकपछि फेरि पत्रकारहरूमा एकताको भावना जाग्यो । अलग-अलग संघमा आबद्ध नेपाली पत्रकारले २०२३ सालमा एकता सम्मेलन गरे। यो सम्मेलन पहिलो सम्मेलन भयो (गृष्मबहादुर- २०५१) ।

यो सम्मेलनले नेपाली पत्रकारिताका लागि २२ बुँदे आचारसंहिता पारित गऱ्यो । आचारसंहिता निर्माण कार्यमा संलग्न तीन जनामध्ये एक समाज दैनिकका तत्कालीन सम्पादक मणिराज उपाध्याय भन्नुहुन्छ, त्यसबेला पत्रकारिता विभिन्न खेमामा विभाजित थियो । पत्रिकाले जनतालाई सुसूचित गर्नेभन्दा पनि सूचना र जानकारीहरूको ढाकछोप

गर्ने अभ्यास बढी भयो । यो स्थितिको अन्त्यका लागि हामीले आचारसंहिता जारी गर्नु आवश्यक ठान्यौं । त्यसबेलाका पत्रपत्रिकाको अध्ययन गर्दा नेपाली पत्रकारिता भारत, चीन र सोभियत संघ गरी तीनवटा प्रष्ट खेमा फेला पर्छन् । खेमा-खेमामा विभाजित पत्रकारिताले मुलुकको परराष्ट्र मामिलामा समेत असहज स्थिति सिर्जना गरेको थियो ।

**नेपाल पत्रकार संघको एकता सम्मेलनले पारित गरेको नेपाली पत्रकारिताको आचारसंहिता,** २०२३ *(गृष्मबहादुर- २०५१):*

(१) समाचार र विचारको आदान-प्रदान तथा प्रकाशनद्वारा देशमा स्वच्छ एवं स्वस्थ जनमत र जनव्यवहारको सृष्टि तथा विकास गर्ने प्राथमिक साधन पत्रकारिता भएकाले पत्रकारहरूले आफ्नो व्यवसायलाई सार्वजनिक विश्वासप्राप्त गहन जिम्मेवारी ठानेर सार्वजनिक स्वार्थ र विश्व मानवताको शान्तिको संरक्षक र सेवकका रूपमा अघि बढ्न कटिबद्ध हुनुपर्छ ।

(२) आफ्नो कर्तव्य पालनामा पत्रकारहरूले मौलिक, मानव र सामाजिक अधिकारहरूलाई पूर्णकदर गर्नु र राष्ट्रमा हिंसा तथा उपर्युक्त (मस्यौदाकारमध्येका एक पत्रकार मणिराज उपाध्यायसँग कुराकानी गरी गृष्मबहादुरको पुस्तकमा उल्लेख उपयुक्त शब्द संशोधन गरिएको) व्यवहारविरुद्ध तथा राष्ट्रका विभिन्न जाति, समुदाय र क्षेत्रका बीच एकता र परस्पर सद्भावना निम्ति आफ्नो शान्ति र क्षमताको विशेष उपयोग गर्नुपर्छ ।

(३) समाचार तथा विचारको प्रकाशनमा पत्रकारहरूले विश्वास, इमानदारी र न्यायपरायणतालाई आफ्नो व्यवसायको मौलिक कर्तव्यका रूपमा स्वीकार गर्नुपर्छ र जानी-जानीकन कुनै पनि यस्तो सार्वजनिक प्रकाशित गर्नुहुँदैन, जो असत्य, सार्वजनिक स्वार्थविपरीत सार्वजनिक स्वार्थसित कुनै सम्बन्ध नराखी व्यक्तिविशेषको हित वा अहितसित सम्बन्ध राख्ने खालका मात्र

होउन्, नत जानी-जानी वा विशेष उद्देश्यले त्यस्ता समाचारको प्रकाशनलाई रोक्न वा समाचारलाई लुकाउन हुन्छ, जसले सामाजिक जीवनमाथि प्रभाव पार्न सक्दो हो ।

(४) प्रकाशित समाचार वा विचार निम्ति जिम्मेवारी बहन गर्नुपर्छ । त्यस्तो जिम्मेवारी लिइएको छैन भने त्यसको प्रष्ट उल्लेख हुनुपर्छ ।

(५) आफूमाथि राखिएको विश्वासको कदर गर्नैपर्छ र व्यावसायिक गोपनीयताको रक्षा गर्नैपर्छ ।

(६) प्रकाशित समाचार असत्य ठहरेको थाहा पाएपछि वा त्यस्ता समाचारमाथिको टिप्पणीलाई पत्रकार आफैंले सच्याउनुपर्छ । प्राप्त खण्डन वा शुद्धिलाई सम्बन्धित समाचारलाई दिइएको महत्त्वअनुसार प्रचार गरिदिनैपर्छ, यदि यस्ता खण्डन वा शुद्धिले समाचारको मूल मर्ममाथि प्रभाव पारेको छ भने ।

(७) मतभेदले पत्रकारहरूबीच मनोमालिन्य जन्माउनुहुँदैन न त एकले अर्को व्यवसायमा आघात पुऱ्याउने, प्रकाशन वा पत्रकारका रूपमा अर्कोको अस्तित्वको औचित्यलाई लिएर प्रश्न गर्ने वा सार्वजनिक सम्बन्ध नभएको विषयमा व्यक्तिगत कारणवश सार्वजनिक वादविवाद वा आक्रमण/प्रत्याक्रमण चलाउनु हुन्न ।

(८) पत्रकारले निजी स्वार्थलाई व्यावसायिक स्वार्थमाथि प्रभाव पार्न दिन, पत्रकारले आफ्नो पूनीत व्यवसायलाई गैरपत्रकारिताको इष्टसिद्धिमा लगाउन कदापि हुँदैन ।

(९) कुनैपनि समाचार वा विचारको प्रकाशन वा विरोध गर्ने उद्देश्यले पत्रकारले आफ्नो निजी स्वार्थपूर्ति निम्ति आर्थिक वा कुनै प्रकारको भौतिक सहायता वा प्रोत्साहनका निम्ति कसैसित माग गर्नु वा प्राप्त गर्नु अत्यन्तै गर्हित ठहर्छ ।

(१०) समाचार तथा तथ्यहरूको इमानदार संकलन तथा प्रकाशनको स्वतन्त्रता तथा उचित आलोचना र टिप्पणी गर्ने अधिकार यस्ता सिद्धान्त हुन् जसलाई पत्रकारहरूले सदासर्वदा अनुमोदन र रक्षा गर्नुपर्छ ।

(११) समाजका कुनै पनि तहका व्यक्तिको निजी जीवनबारे हल्ला वा खुकुला चर्चालाई स्थान दिनु सुहाउँदो कुरा ठहर्दैन । समाजको सार्वजनिक जीवनमाथि प्रभाव पार्ने खालका छैनन् भने व्यक्तिको निजी जीवनका सत्य ठहर्ने घटनाहरूले पनि ठाउँ पाउनुहुँदैन ।

(१२) दुराचार वा अपराधले प्रश्रय वा प्रोत्साहन पाउने सामग्रीको प्रकाशनबाट छापाहरूले विमुख रहनुपर्छ ।

(१३) एकताबद्ध र अंगीभूत राष्ट्रभाव देशका जनताको अधिकार र लक्ष्य भएकाले पत्रकारले आफ्नो सम्पूर्ण प्रयासलाई त्यतै लगाउनुपर्छ र देशभक्ति र राष्ट्रिय भावनामा जनमतलाई प्रोत्साहित गर्नुपर्छ ।

(१४) जाति, समुदाय, वर्ण, धर्म वा क्षेत्रको सीमित स्वार्थलाई राष्ट्रको सर्वाङ्गीण स्वार्थको मातहत राख्नुपर्छ ।

(१५) जनतामा अस्वस्थ विग्रह खडा गर्ने वा मुलुकलाई खण्डित गर्नेतर्फ कुनै पनि व्यक्ति वा डफ्फाको कोसिसलाई निन्दा गर्नुपर्छ ।

(१६) जनताबीचको मतभेदलाई समाधान गर्न हिंसालाई उत्साहित गर्ने सबै प्रयासलाई नि:संकोच निन्दा गर्नुपर्छ ।

(१७) राष्ट्रिय एकता र सम्मान, विकास, राष्ट्र निर्माण, शिक्षा, स्वास्थ्य संस्कृतिसम्बन्धी राज्य र सार्वजनिक गतिविधिका समाचारलाई प्रमुखता दिँदै जानुपर्छ ।

(१८) राष्ट्रिय संकटको समयमा प्रेस स्वतन्त्रता स्वभावत: सीमित हुन जान्छ भन्ने कुरालाई यो व्यवसायले स्वीकार गरी त्यस्तो अवस्थामा जनताको साहस, नैतिकता र सहयोगी भावनालई राज्य प्रयासअनुकूल गराउनु छापाको अविभाज्य कर्तव्य हो ।

(१९) राष्ट्रिय सुरक्षालाई कायम राखेर बलसमेत पुऱ्याउनुमा छापामाथि विशेष उत्तरदायित्व रहने भएकाले यो सुरक्षाको गोपनीयता कुनै पनि प्रकारले भंग हुन नदिनेमा पत्रकारले सकेसम्म जागरुकता लिनुपर्छ ।

(२०) राज्यका आधारभूत सामाजिक र आर्थिक कार्यक्रम र नीति दिशाप्रति पत्रकारले समाचार दिँदा विवेक, सन्तुलन, सहानुभूति र सहयोगी भावनालाई आफ्नो मूल्यांकनको मूल आधार बनाउनुपर्छ ।

(२१) समाचार र विचार प्रकाशित गर्दा शिष्ट भाषाको अवलम्बन गर्नु र आलोचना प्रत्यालोचनामा ग्राम्य भाषा वा शैलीलाई ठाउँ नदिनुमाथि सकेसम्म ध्यान दिनु आवश्यक छ ।

(२२) यौन र अपराधकर्मका समाचारहरू प्रकाशित गर्दा उत्तेजनावाद, भावनात्मक विकृति, स्याडिजम् र उच्छृङ्खलताले ठाउँ नपाउन् भन्नेतिर विशेष ध्यान दिई यी प्रवृत्तिले नेपाली पत्रकारितामा प्रवेश र प्रोत्साहन नपाउन् भन्ने विचार राख्नुपर्छ ।

पत्रकारहरूकै तर्फबाट गरिएको यो प्रयासभन्दा झन्डै एक दशकअगाडि तत्कालीन प्रधानमन्त्री डा. केआई सिंहले २०१४ सालमा वहालवाला न्यायाधीश कृष्णप्रसाद चापागाईंको अध्यक्षतामा पत्रकार गोपालदास श्रेष्ठ र रामराज पौड्यालसमेत भएको सात सदस्यीय प्रेस कमिसन गठन गरेका थिए । यो कमिसनले १८ बुँदे आचारसंहिता तयार गरी श्री ५ को सरकारसमक्ष पेश गरेको थियो (रामराज- २०२७) ।

स्वच्छ पत्रकारिताको विकास गर्न विश्व प्रचलनमा रहेको प्रेस काउन्सिल नेपालमा २०२७ असोजमा गठन भयो । प्रेस काउन्सिलकै अवधारणाअनुसार २०२४ सालमा प्रेस सल्लाहकार समिति गठन भएको थियो । यो समितिलाई परिमार्जन गरी केही समयपछि सल्लाहकार परिषद्मा परिणत गरिएको थियो । न्यायाधीश नैनबहादुर खत्रीको अध्यक्षतामा गठित सो परिषद्ले २१ बुँदे पत्रकार आचारसंहिता जारी गऱ्यो । नेपालमा छापाखाना र प्रकाशनसम्बन्धी ऐन २०३२ ले प्रेस काउन्सिललाई छापाखाना र प्रकाशन आचारसंहिता जारी गर्ने अधिकार प्रदान गऱ्यो । जसअनुसार श्री ५ को सरकारबाट स्वीकृति पाएपछि मात्र आचारसंहिता जारी गर्नुपर्ने हुन्छ । 'राष्ट्रिय दृष्टिकोण एवं राष्ट्रिय हितलाई ध्यानमा राखी देश, नरेश र दलविहीन पञ्चायती व्यवस्थाप्रति पूर्ण आस्थावान् हुने पत्रकारिताको विकासका लागि भन्ने उद्देश्य राखेर श्री ५ को सरकारको स्वीकृति लिई प्रेस काउन्सिलले २०३३ सालमा २२ सूत्रीय छापाखाना र प्रकाशन आचारसंहिता जारी गऱ्यो ।' (नेपालमा पत्रकार आचारसंहिता-२०५६) समय-समयमा यसरी लागू गरिएका

आचारसंहिताहरू लागू नभएपछि छापाखाना र प्रकाशन ऐन २०३९ ले प्रेस काउन्सिललाई अझ सशक्त बनाउने प्रयास ग¥यो । नयाँ व्यवस्थाअनुसार आचारसंहिता उल्लंघन गर्ने पत्रकारको प्रेस प्रतिनिधि प्रमाणपत्र निलम्बन गर्न वा खारेज गर्न श्री ५ को सरकारलाई काउन्सिलले सिफारिस गर्न पाउने भयो । २०४० माघ महिनामा काउन्सिलले फेरि ११ बुँदे आचारसंहिता जारी ग¥यो । यो आचारसंहिताले २०३७ सालमा भएको जनमत संग्रहले ल्याएको परिवर्तनलाई समेत समेटेको थियो ।

२०४२ सालमा पत्रकारहरूकै तर्फबाट आचारसंहिता निर्माणमा अर्को प्रयास भएको थियो । पत्रकारितालाई स्वनियन्त्रित र मर्यादित बनाउन त्यसबेलाका प्रतिष्ठित दैनिक र साप्ताहिक गरी १४ वटा पत्रिकाका सम्पादकहरूको हस्ताक्षरमा १० बुँदे आचारसंहिता जारी भएको थियो । २०४७ सालमा प्रजातान्त्रिक संविधान नेपाल अधिराज्यको संविधान जारी भएपछिको भिन्न परिस्थितिमा पेशागत मर्यादाको पालनाका लागि प्रेस काउन्सिलले फेरि आचारसंहिता २०४७ जारी ग¥यो । नयाँ संविधानको मर्मअनुसार २०४८ सालमा प्रेस काउन्सिल ऐन लागू भयो । यो ऐनको अधिकार प्रयोग गरी २०४७ सालमा  जारी गरेको आचारसंहितालाई परिमार्जन गरी पत्रकार आचारसंहिता २०४९ जारी भयो ।

२०५० सालमा फेरि एकपटक पत्रकारहरूकै तर्फबाट आचारसंहिताको पहल भएको थियो । नेपाल पत्रकार संघको आयोजनामा २०५० सालमा भएको एक भेलाले आचारसंहिताको आवश्यकतालाई महसुस गरी वीरगञ्ज घोषणापत्र जारी ग¥यो । यो घोषणापत्रमा १४ बुँदे आचारसंहिता समावेश थियो । नेपाल पत्रकार संघले यो आचारसंहिता लागू गर्नका लागि कानुनविद् वासुदेव ढुंगानाको संयोजकत्वमा पाँच सदस्यीय आचारसंहिता अनुगमन समिति पनि गठन ग¥यो । तर पटक-पटकका यी प्रयासले पनि पत्रकारिता पेशालाई मर्यादित बनाउन नसकेपछि भिन्न प्रयास थाल्नु जरुरी थियो । यही प्रयासस्वरूप २०५५ सालमा नेपाली पत्रकारहरूको पेशागत संगठन नेपाल पत्रकार महासंघ (पहिलेको

संघलाई नै हाल महासंघको रूप दिइएको) र प्रेस काउन्सिल दुवै मिलेर सात बुँदे पत्रकार आचारसंहिता, २०५५ जारी गरे । यस आचारसंहितामा केही अस्पष्ट र भ्रामक कुरा पनि छ। तर बिगतका आचारसंहिता प्रकाशनसँग मात्र केन्द्रित रहने गरेकोमा यो आचारसंहिताले प्रकाशन र प्रसारण दुवै पक्षलाई ध्यान दिएको छ ।

आचारसंहिताको पालनाका लागि दायित्वबोधको आवश्यकता पर्छ । आचारसंहिताका लागि नेपालमा यतिधेरै प्रयास हुँदाहुँदै पनि नेपाली पत्रकारका प्रवृत्ति र अभ्यासहरूले आचारसंहितालाई अनुसरण गर्न सकेका छैनन् । हामीकहाँ आचारसंहिताको उल्लंघन हुने गरेका घटना प्रशस्त छन् । हरेक दिनजसो नै एउटा न एउटा आचारसंहिताभन्दा बाहिरका समाचार पढ्नु र सुन्नु नेपाली पत्रकारितामा सामान्य भएको छ । आचारसंहितालाई प्रभावकारी बनाउन महासंघ र काउन्सिलले संयुक्त रूपमा आचारसंहिता जारी गर्नुपर्छ भनी पहल गर्ने महासंघका तत्कालीन महासचिव र पछि सभापतिको समेत कार्यभार सम्हाली सक्नुभएका पत्रकार सुरेश आचार्य भन्नुहुन्छ- “हामीकहाँ स्वभावले समेत पत्रकार हुनेहरूको संख्या ज्यादै कम छ । अरूको एजेन्डालाई सफल बनाउन पत्रकारका नाममा सक्रिय हुनेहरूको संख्या बढी छ । जसले गर्दा पत्रकार आचारसंहिता हामीकहाँ लागू हुन सकेको छैन । परिणामस्वरूप पत्रकारिताप्रतिको जनविश्वास दिनदिनै खस्कँदै गएको छ । यो सबैका लागि दुर्भाग्यपूर्ण स्थिति हो ।”

आधा शताब्दी लामो पत्रकारिता गरिसक्नुभएका मणिराज उपाध्याय आचारसंहिता लागू हुन नसक्नुमा पत्रकारहरू उद्देश्यप्रति स्पष्ट हुन नसक्नु हो भन्ने निष्कर्षमा पुगनुभएको छ । उहाँ भन्नुहुन्छ- “सरकार र महाजनसँग डराउने पत्रकारिता हामीकहाँ छ । यस्तो पत्रकारिताका लागि आचारसंहिताले कुनै अर्थ राख्दैन ।”

## प्रसारण माध्यम

रेडियो तरङ्ग सार्वजनिक सम्पत्ति वा वस्तु हो। रेडियो तरङ्ग र पत्रपत्रिकाबीच स्वामित्वका हिसाबले आधारभूत रूपमै भिन्नता छ। पत्रिकाको च्यानल (माध्यम) कागज हो। सवा दुई करोड नेपालीले पत्रिका प्रकाशित गर्छुभन्दा च्यानलका हिसाबले सम्भव छ। तपाई आफ्नो गोजीको पैसाले पत्रिकाका लागि च्यानल किन्न सक्नुहुन्छ। कति रिम कागज किन्नुहुन्छ र पत्रिका छाप्नुहुन्छ त्यो तपाईको निजी निर्णय हो। पत्रिका प्रकाशनमा च्यानलको स्वामित्व निजी हुन्छ।

तर रेडियो प्रसारणका लागि पैसा जतिसुकै तिर्छु भने पनि च्यानल चाहेजति किन्न सक्नुहुन्न। रेडियोका लागि च्यानलहरू प्राविधिक हिसाबको ज्यादै सीमित छन्। एएम ब्यान्डबाट रेडियो तरङ्ग फाल्नका लागि इन्टरनेसनल टेलिकम्युनिकेसन युनियनको नियमभित्र रहेर सीमित फ्रिक्वेन्सीमात्र एउटा राष्ट्रले लिन सक्छ।

त्यस्तै एफएम प्रसारणकै कुरा गर्ने हो भने कुनै एउटा क्षेत्रमा ८८ देखि १०८ मेगाहर्ज भित्रका जम्मा २० वटा फ्रिक्वेन्सी छुट्याइएको हुन्छ। यति सीमित फ्रिक्वेन्सीबाट सबैले एफएम रेडियो प्रसारण गर्छु भन्ने कुरा असम्भव छ। जुन समूह वा व्यक्तिले रेडियो प्रसारण अनुमति पाएको छ। उसले त्यस क्षेत्रमा बसोबास गर्ने थुप्रै बासिन्दाको रेडियो तरङ्ग उपभोग गर्ने स्वामित्वको अधिकारलाई समाप्त पारिदिएको हुन्छ। यसरी रेडियो च्यानलको स्वामित्व कहिल्यै निजी हुन सक्तैन। यसर्थ रेडियो सञ्चालकहरूले रेडियो तरङ्ग फाल्दा अरूको अधिकारको प्रतिनिधित्व गर्ने कुरामा सधैं चनाखो रहनुपर्छ। त्यस क्षेत्रका बासिन्दा र समाजप्रतिको उत्तरदायित्वलाई अनिवार्य रूपमा निर्वाह गर्नुपर्छ। यसको अर्थ रेडियो प्रसारकले त्यो समाजमा विभिन्न जातजाति, भाषाभाषी, धर्म, सम्प्रदाय, संस्कृति तथा विचारका मान्छेहरू बस्छन् र उनीहरूका इच्छा, आकांक्षा, आवश्यकता तथा स्वभावहरू भिन्नभिन्न हुन्छन् भन्ने यथार्थलाई स्वीकार गर्नुपर्छ। उनीहरूलाई आदर गर्न सक्नुपर्छ ।

कानुनको मान्यता राख्नु, आधारभूत मानवअधिकारको सम्मान गर्नु, प्रजातान्त्रिक भावनाको कदर गर्नु, समाजप्रति इमानदार रहनु, वाक तथा अभिव्यक्ति स्वतन्त्रताको सही उपयोग गर्नु, जनकल्याणका लागि दत्तचित्त हुनु, समाजको उन्नति र प्रगतिका लागि कार्यरत रहनु, स्थानीय संस्कृति, विवेक, ज्ञान र सीपको संरक्षण, परिस्कार र निरन्तरताका लागि सक्रिय रहनुलाई रेडियोकर्मीले आफ्नो प्रारम्भिक दायित्व हो भनी आत्मसात गर्नुपर्छ । रेडियो प्रसारण प्राविधिक प्रश्नमात्रै होइन यसमा सामाजिक र नैतिक विषयहरू सोझै संलग्न हुन्छन् भन्ने कुरालाई बिर्सनुहुँदैन ।

नेपालका राष्ट्रिय प्रसारणहरू रेडियो नेपाल र नेपाल टेलिभिजनले अहिलेसम्म औपचारिक रूपमा प्रसारण आचारसंहिता नै भनेर केही पनि लागू गरेका छैनन् । तर पनि कामकारबाही अगाडि बढाउनका लागि यी संस्थाले विशेष गरी समाचार नीति तयार गर्ने गरेका छन् । नेपाल टेलिभिजन र रेडियो नेपालका लागि समाचार नीति भनेर पछिल्लोपटक २०५७ वैशाख ६ गते तीस बुँदे नीति जारी भएको छ । यही नीतिमा तोकिएको क्रम नै रेडियो नेपालले समाचार तयार गर्दा अवलम्बन गर्ने प्राथमिकताको क्रम हो ।

## रेडियो नेपाल तथा नेपाल टेलिभिजनको समाचार नीति, २०५७

सरकारी आमसञ्चार माध्यमहरूको विश्वसनीयता र आधिकारिक पक्षलाई कायम राखी व्यावसायिक प्रतिस्पर्धामा समेत उत्रनुपर्ने परिवर्तित सन्दर्भमा परम्परागत समाचारको ढाँचामा समयानुकूल परिवर्तन ल्याउन आवश्यक छ । नेपाल अधिराज्यको संविधान २०४७ को मर्म, भावना र मूल्य मान्यताअनुरूप जनताको सुसूचित हुने अधिकारको प्रावधानलाई प्रवर्द्धन तथा सार्थक तुल्याउने गरी श्री ५ को सरकारको नियन्त्रणमा रहेका विद्युतीय सञ्चारमाध्यमहरूबाट समाचार, समाचारमूलक कार्यक्रम तथा जानकारीहरू सम्प्रेषण गर्ने सन्दर्भमा निम्नलिखित नीतिगत प्राथमिकताहरू निर्धारण गर्नु उपयुक्त हुने देखिन्छ ।

(१) बहुदलीय प्रजातन्त्र, संवैधानिक राजतन्त्र र संविधानले निर्दिष्ट गरेका अन्य निर्देशक सिद्धान्तहरूको सम्प्रेषण गर्ने अवधारणा मुख्य प्राथमिकतामा रहनेछ ।

(२) सरकारी सञ्चार माध्यमहरूमा प्राथमिकता निर्धारण गर्दा राष्ट्रका अतिविशिष्ट सम्मानित संस्था वा व्यक्तित्वसँग सम्बन्धित समाचारबाहेक अन्य समाचारहरूका सम्बन्धमा व्यक्तित्वको मर्यादाक्रमलाई भन्दा घटना वा विषयवस्तुको महत्त्व, गाम्भीर्य र सार्वजनिक चासोलाई उच्चतम प्राथमिकता दिनुपर्छ । जसअनुसार समाचारको प्राथमिकता विशेषगरी:

(क) श्री ५ महाराजाधिराज सरकार,

(ख) प्रधानमन्त्रीको समाचारलाई मात्र मर्यादाक्रम कायम गरी अन्य समाचारलाई समाचारीय मूल्य र महत्त्वका आधारमा मात्र समाचारमा त्रमागत स्थान दिने ।

(३) समाचारलाई निर्वाधरूपमा प्रवाह गर्दा कुनैपनि घटनाको समाचारीय महत्त्वलाई ध्याद दिने र कुनै पनि घटनाको समाचारीय महत्त्व भएमा मात्र दिने ।

(४) श्री ५, प्रधानमन्त्री, राष्ट्रिय मान्यता प्राप्त राजनीतिक दलका राष्ट्रिय महत्त्वका सन्देशहरू समाचारको प्राथमिकतामा पार्ने ।

(५) संसद्को गतिविधि, सर्वोच्च अदालतद्वारा राष्ट्रिय महत्त्वका मुद्दाको फैसला, श्री ५ को सरकारको राष्ट्रिय महत्त्वका निर्णयलाई समाचारमा प्राथमिकता दिने ।

(६) राष्ट्र, राष्ट्रियता, राष्ट्रिय संस्कृति र सामाजिक मूल्य र मर्यादालाई प्राथमिकता दिने ।

(७) संविधान, संवैधानिक राजतन्त्र, राष्ट्रिय अखण्डता तथा बहुदलीय प्रजातन्त्रको मूलभूत धारणा तथा संसद्, अदालत एवं अन्य संवैधानिक निकायको गरिमामा आँच आउने समाचार नदिने ।

(८) श्री ५ को सरकारले प्रतिपादन गरेका नीति निर्देशन, कार्यान्वयन गरेका कार्यक्रमहरू, विकास निर्माण एवं जनतालाई

दिएको राहतका समाचारलाई विशेष प्राथमिकता दिई प्रसार गर्ने ।

(९) मुलुकको शान्तिसुरक्षा, भ्रष्टाचार नियन्त्रण र सुशासनजस्ता सरकारका प्राथमिकताका विषयलाई महत्त्व दिने तथा माओवादी हिंसा र आतंकप्रति वितृष्णा पैदा हुने खालका समाचारलाई प्राथमिकता दिने ।

(१०) समाजमा अवाञ्छित उत्तेजना जगाउने खालको समाचार नदिने । तर आतंक र हिंसाबाट सामान्य जनजीवनमा परिरहेको नकारात्मक असरसम्बन्धी समाचार दिँदा आपराधिक कार्य तथा अपराधीहरूप्रति वितृष्णा उत्पन्न हुने किसिमले दिने ।

(११) मुलुकको कुनै भागमा कुनै कारणले आतंक फैलिन गयो वा कुनै घटना हुन गई गोली चलाउनुपर्ने स्थिति आई कसैको ज्यान गयो वा धनमालको नोक्सानी भयो भने त्यस्ता समाचार दिँदा श्री ५ को सरकारको सम्बन्धित प्रवक्ता वा अन्य विश्वसनीय स्रोतबाट प्राप्त समाचारमात्र प्रसारण गर्ने ।

(१२) प्रमुख प्रतिपक्षलगायत अन्य राजनीतिक दल, ती दलका नेताहरूद्वारा राष्ट्रका महत्त्वपूर्ण विषयमा गरिएका अभिव्यक्तिलाई प्राथमिकताका साथ समाचारमा प्रयोग गर्ने ।

(१३) राष्ट्रिय मान्यता प्राप्त राजनीतिक दलहरूको समाचारलाई समानुपातिक रूपमा महत्त्व दिने ।

(१४) राष्ट्रिय मान्यता नपाएका राजनीतिक दलहरूको समाचारलाई पनि समाचारीय मूल्यको आधारमा यथोचित स्थान दिने ।

(१५) असंलग्न परराष्ट्र नीतिअनुरूप वैदेशिक सम्बन्ध सुदृढ हुने समाचारलाई प्राथमिकता दिने, छिमेकी मित्रराष्ट्र विशेष गरी भारत र चीनको विरोध हुनसक्ने समाचार नदिने ।

(१६) अन्तर्राष्ट्रिय समाचार संप्रेषण गर्दा खासगरी सार्क मुलुकहरू र नेपाललाई आर्थिक सहायता प्रदान गर्ने मुलुकहरूको समाचारलाई प्राथमिकता दिने र ती देशहरूसँग नेपालको

कूटनीतिक र मैत्रीपूर्ण सम्बन्धमा आँच आउन सक्ने समाचार प्रसार नगर्ने ।

(१७) राष्ट्रिय, अन्तर्राष्ट्रिय र सार्वजनिक महत्त्वका व्यापकस्तरको विषयवस्तुबाहेक विभागीय तथा कुनै विभाग विशेषको सभा, सम्मेलन तथा गोष्ठीहरूको समाचार प्राथमिकतामा नराख्ने ।

(१८) सभा, सेमिनारको समाचार प्रसारण गर्दा त्यस सेमिनार, गोष्ठीको विषय र हुने उपलब्धि वा सुझावलाई महत्त्व दिने ।

(१९) समाचारको महत्त्वलाई ध्यान दिने सन्दर्भमा कुनै समाचार महत्त्वपूर्ण वा समाजलाई उत्प्रेरित गर्ने र सकारात्मक असर पार्ने भएमा त्यस्ता व्यक्ति वा पदाधिकारीको पद सानो भए पनि त्यस समाचारलाई समाचारमा दिने ।

(२०) विकास निर्माणका गतिविधि र तिनका उपलब्धिसम्बन्धी समाचार प्राथमिकता पार्ने ।

(२१) कूटनीतिक व्यक्तित्वहरूको नियमित भेट तथा छलफलबाहेक सोसँग सम्बन्धित विशेष विषयवस्तुमात्र समाचारको प्राथमिकतामा पार्ने ।

(२२) संसद्का विभिन्न समितिहरूद्वारा समय-समयमा हुने राष्ट्रिय महत्त्वका निर्णयहरूलाई समाचारमा स्थान दिने ।

(२३) सरकारका कमीकमजोरी, त्रुटि आदिलाई औंल्याएर सम्बन्धित जिम्मेवार निकायबाट गरिएका रचनात्मक आलोचना, टीकाटिप्पणी र समालोचनालाई पनि स्थान दिने ।

(२४) राष्ट्रिय व्यक्तित्व एवं सार्वजनिक जीवनमा ख्यातिप्राप्त व्यक्तित्वसम्बन्धी घटना एवं उनीहरूको सम्मान र मृत्युसम्बन्धी समाचार समावेश गर्ने ।

(२५) मानवीय चासोका समाचारहरूलाई पनि यथोचित स्थान दिने ।

(२६) राष्ट्रिय नेतृत्वका आधारमा अन्तर्राष्ट्रिय सभा-सम्मेलनमा सहभागी हुने घटनाको समाचारबाहेक सामान्य प्रकारका सहभागिताको समाचारलाई प्राथमिकता नदिने ।

(२७) विमोचन, विद्यालय वार्षिकोत्सव, रक्तदान कार्यालयीय समीक्षा बैठकजस्ता घटनाहरूलाई सामान्यतया प्राथमिकता नदिने ।

(२८) धार्मिक असहिष्णुता ल्याउने धर्म, वर्ग, जाति, समुदाय, क्षेत्र आदिबीच वैमनश्यता फैलाउन सक्ने समाचार दिने ।

(२९) समाचार बुलेटिन प्रसारण हुनुभन्दा रेडियोको हकमा आधा घन्टा र टेलिभिजनको हकमा एक घन्टाअघि समाचार कक्षमा आएका समाचारलाई पनि तत्कालको बुलेटिनमा समावेश गर्न प्रयास गर्ने ।

(३०) समाचारको महत्त्व हेरी सामान्यतया तीनपटकभन्दा बढी कुनै पनि समाचार नदिने ।

कार्यक्रमहरूका हकमा रेडियो नेपालले अवलम्बन गर्ने नीतिका बारेमा कार्यक्रम निर्देशक राजेन्द्र शर्मा भन्नुहुन्छः

*कार्यक्रमतर्फ नेपालको संविधान र ऐन-नियमहरूको पालनाका साथै आपसी समझदारी, मेलमिलाप, राष्ट्रिय एवं जातीय र भाषिक विविधतालाई समेत मध्यनजर राखी सम्पूर्ण नेपालीलाई एकताको सूत्रमा बाँध्न मद्दत पुग्ने प्रकृतिका कार्यक्रमहरू रेडियो नेपालले प्रसारण गर्छ ।*

*अश्लील सामग्री, कुनै जाति वा धर्मलाई होच्याउने सामग्री वा स्वतन्त्र नागरिकको मर्यादालाई ठेस पुऱ्याउने खालका सामग्री प्रसारण गरिँदैन । यस्ता संवेदनशील कुराहरूको पूर्ण परिभाषा दिन वा व्याख्या गर्न ज्यादै कठिन भएकाले विवेकको प्रयोग गरी निर्णय गरिन्छ । रेडियो नेपालबाट प्रसारण हुने कार्यक्रमहरू श्रवण समितिले सुनेर वा अनुगमन गरेरमात्र प्रसारण गराउने प्रचलन छ । यसरी योग्य भनी ठहऱ्याएका सामग्रीमात्र रेडियो नेपालबाट प्रसारण हुन्छन् ।*

# घटनावलीको अध्ययन




यो फोटो जनआस्था साप्ताहिकमा सर्वाङ्ग नग्न रूपमा प्रकाशित थियो ।

# श्रीषा कार्कीको आत्महत्या प्रकरण

## सारांश

जनआस्था साप्ताहिकले मिति २०५९ असोज २३ गते बुधबार पहिलो पृष्ठमा एउटा विवादास्पद समाचार छाप्यो । जसको शीर्षक थियो- फिल्म नगरीको रङ्गीन रात । समाचारको विषयवस्तु फिल्मी जगत्का थुप्रै नायक, नायिका, गायक, पूर्वमन्त्री, उच्चपदस्य कर्मचारी तथा नेपाली उद्योगपतिहरूका यौन गतिविधिसँग सम्बन्धित थियो । यो समाचारसँग एउटा नाङ्गो फोटो पनि छापिएको थियो । त्यो फोटो नायिका श्रीषा कार्कीको थियो । समाचारको विषय यौन लीलामा संलग्न नायिकाहरू 'पेशेवर धन्दावाल' हुन् र उनीहरू



पैसाका लागि यो काम गर्छन् भन्दै रातको पाँचदेखि दस हजार रुपैयाँसम्म उनीहरूको दर हो भन्ने कुरा उल्लेख गरेको थियो ।

## परिणाम

आफ्नो नाङ्गो फोटो प्रकाशित भएपछि नेपाली समाजको स्वाभावअनुसार पक्कै पनि नायिका श्रीषा कार्कीले नकार्नै नसकिने सामाजिक अपमान बेहोर्नुपर्‍यो । पत्रिका बजारमा आएको एक हप्ताभित्रै असोज २८ गते उनले आत्महत्या गरिन् । उनका आफन्तहरूमा स्वभाविक आक्रोश बढ्यो । फिल्म जगत् आन्दोलित भयो । महिला अधिकारवादीहरू कस्सिएर लागे । पीत पत्रकारिता गरेको आरोप सिङ्गो नेपाली पत्रकारितामा लाग्यो । पछिल्ला दिनमा थप समाचारहरू छापिए श्रीषाको नाङ्गो फोटो प्रकरणमा पूर्व गृहमन्त्री, प्रहरी तथा फिल्म जगत्कै निर्माताहरूको समेत हात छ ।

प्लेकार्ड र ब्यानरहरूसहित काठमाडौंका सडकमा दोषीमाथि कारबाहीको मागसहित विरोध जुलुस निस्किए । पत्रकारितामा अंकुश लगाउन माग भयो । यी सबै विरोध प्रदर्शनकारीहरूले पत्रकारितालाई एकमुष्ट आरोप लगाए । नेपाल प्रेस काउन्सिल र नेपाल पत्रकार महासंघले जनआस्थाका सम्पादक किशोर श्रेष्ठले आचारसंहिता उल्लंघन गरेको भनी सार्वजनिक रूपमा माफी माग्न निर्देशन दिए । सम्पादक श्रेष्ठ भूमिगत भए । पत्रिकाको कार्यालयमा प्रहरीले छापा मार्‍यो । राजा श्री ५ ज्ञानेन्द्रबाट दोषीमाथि कानुनी कारबाही गर्न अन्तरिम प्रधानमन्त्री लोकेन्द्रबहादुर चन्दलाई निर्देशन बक्स भयो ।



## विश्लेषण

प्रेस काउन्सिलको आपतकालीन बैठकले जनआस्थामाथि समाचारलाई माध्यम बनाएर अनुचित आर्थिक लाभ लिएको, उत्तेजक पोटो छापेको र गोपनीयताको हक हनन गरेको निचोड निकाल्यो । नेपाल प्रेस काउन्सिलको यो निर्णय आफैंमा विवादित छ । पत्रिका प्रकाशनपछि उत्तेजक फोटो छापेको तथा गोपनीयताको हक हनन गरेको कुरा त बुझ्न सकिन्छ । तर यो समाचार छापेर कसरी अनुचित आर्थिक लाभ लियो भन्ने कुरा आफैंमा आरोपमात्र भएको छ । कुनै प्रमाणबेगर सम्पादकमाथि यति ठूलो आरोप लगाउनु प्रेस काउन्सिलको गैरजिम्मेवारीपूर्ण अभिव्यक्ति हो । आचारसंहिता पालना गराउने संस्था स्वयं पूर्वाग्रही हुनु मुलुककै दुर्भाग्य हो ।

पत्रकार आचारसंहिताका प्रचलित तीनवटा धारामध्ये स्वच्छन्द आचारसंहिताका अनुयायीहरू सबैखाले नियमहरू इन्कार गर्छन् । उनीहरूका विचारमा पत्रकारिताका लागि पूर्वनिर्धारित व्यवहार र नैतिक नियम हुँदैनन् । उनीहरू मनसाय, बाध्यता र परिणामसँग रत्तिभर सरोकार राख्दैनन् । श्रीषा कार्कीको नाङ्गो फोटो छाप्न यो आचारसंहिताले छुट दिन्छ । यस अर्थमा प्रेस काउन्सिलले उत्तेजक फोटो छापेर आचारसंहिता उल्लंघन गर्‍यो भनी निकालेको निष्कर्ष आचारसंहिताका विभिन्न धारामा रहेको भिन्नतामात्र भने पुग्छ । गोपनीयताको हक हननको सन्दर्भचाहिँ अलग अलग आचारसंहिता अवलम्बनहरूले समेत उम्कन नसक्ने पक्ष हो । गोपनीयताको हक संविधान तथा कानुनले व्यक्तिको अधिकारका रूपमा सुरक्षित गरेको अधिकार हो । यसको उल्लंघन भनेको कानुनको समेत उल्लंघन हो ।

## घटनावलीको अध्ययन



अब एकछिन् प्रकाशित समाचारको विषयवस्तु तथा प्रस्तुतीकरणतर्फ केन्द्रित होऔं । यो सन्दर्भबाट हेर्दा चाहिँ समाचारमा गम्भीर कमजोरीहरू छन् । भाषा अत्यन्त आक्रामक छ । समाचार संकलन तथा लेखनका क्रममा संवाददाता इमानदार छैनन् । समाचारमा कतै पनि स्रोत खुलाइएको छैन, अवलोकन अत्यन्त सतही छ, तथ्यको पूर्ण अभाव छ, अनुमान र सम्भावनालाई जबरजस्ती मनोगत रूपमा पुष्टि गर्न खोजिएको छ । आरोपित पक्षको भनाइ राखिएको छैन । यसरी हेर्दा समाचार सन्तुलित, तथ्यपरक र पूर्वाग्रहरहित छैन । फोटोका सन्दर्भमा कुनै कुरा खुलाइएको छैन । तर सम्पादक किशोर श्रेष्ठले घटनापछि दिएको सार्वजनिक स्पष्टीकरणमा सार्वजनिक व्यक्तिका बारेमा लेख्न वा छाप्न पाइन्छ भनेका छन् । र, उनले अझै तर्क अघि सारेका छन्- वेश्यावृत्ति आपराधिक गतिविधि हो । उनकै तर्कलाई आधार मानेर छलफल सुरु गरौं । पक्का हो, सार्वजनिक व्यक्तिका सार्वजनिक गतिविधिका बारेमा लेख्न पाइन्छ । त्यो फोटो कहाँ खिचिएको थियो ? खुलामञ्चमा कि चारैतिर पर्दा लगाइएको बन्द कोठामा ? विषयवस्तु वा घटना कुन बेला सार्वजनिक मानिन्छ ? र गोपनीयताको प्रसंग कहाँबाट सुरु हुन्छ ? त्यो फोटो कुन अवस्थामा खिचिएको थियो ? कसैलाई निजी विश्वासमा दिइएको फोटो हो भने पारस्परिक विश्वास भंग भयो कि भएन ? निजी फोटो छाप्न मञ्जुरी दिएको थियो कि थिएन ? नेपाली कानुनले कस्तो व्यवहारलाई वेश्या भन्ने भनी किटान गरेको छ । जुन कुरालाई कानुनले निषेध गरेको छैन त्यो कार्य कसरी अपराध हो ? कुनै महिला वेश्या हो भनी किटान गर्ने आधार के ? वेश्या भनी दर्जा दिने अधिकार सञ्चारकर्मीलाई छ ? बिनाआधारका यी आरोपहरू गाली बेइज्जतीभित्र पर्दैनन् ?



यी प्रश्नको उत्तर खोज्दा जनआस्थाको त्यो समाचार पत्रकारिताका सामान्य सिद्धान्त तथा कानुनको समेत बर्खिलाप छ ।

आचारसंहिताले व्यक्तिका आदर्श व्यवहारहरूसँग सरोकार राख्छ । कुनै पेशामा आचारसंहिता पेशालाई गरिमामय र मर्यादित बनाउन अवलम्बन गरिन्छ । व्यक्तिका न्यूनतम व्यवहार तय गर्ने काम भनेको कानुनको हो । जुन विन्दुभन्दा तल कुनै पेशेवर वा सामान्य नागरिकसमेत जान हुँदैन । त्यो विन्दु नाघ्ने कार्य गैरकानुनी ठहर्छ । जसका लागि व्यक्तिले दण्ड सजाय भोग्नुपर्छ । जनआस्थाको यो समाचार तथा फोटो प्रकाशन आचारसंहिता उल्लंघनको प्रश्नै होइन । यो प्रकाशन आदर्श व्यवहारको परिभाषाभित्र कहिल्यै पर्दैन । यसले न्यूनतम विन्दुलाई समेत नाघेको छ । तसर्थ यो कानुनी सन्दर्भको विषय हो । यसले सिकाएको पाठ भनेको पेशाको आवरण हालेर कानुन मिच्च पाइँदैन भन्ने हो ।

## विद्यमान कानुन

**नेपाल अधिराज्यको संविधान, २०४७**

धारा १२ : स्वतन्त्रताको हक उपधारा २ खण्ड (क) को प्रतिबन्धात्मक वाक्यांश: यसमा भएका कुनै कुराले अधिराज्यको सार्वभौमसत्ता, अखण्डता वा विभिन्न जात, जाति वा सम्प्रदायहरूका बीचको सुसम्बन्धमा खलल पार्ने वा राजद्रोह, गाली बेइज्जती वा अदालतको अवहेलना हुने वा अपराध गर्न दुरुत्साहन दिने वा सार्वजनिक शिष्टाचार वा नैतिकताको प्रतिकूल हुने कार्यमा मुनासि प्रतिबन्ध लगाउने गरी कानुन बनाउन रोक लगाएको मानिने छैन ।

## घटनावलीको अध्ययन



धारा १३ : छापाखान तथा पत्रपत्रिकासम्बन्धी हक उपधारा १ को प्रतिबन्धात्मक वाक्यांश: नेपाल अधिराज्यको सार्वभौमसत्ता वा अखण्डता वा विभिन्न जात, जाति वा सम्प्रदायहरूका बीचको सुसम्बन्धमा खलल पार्ने वा राजद्रोह, गाली बेइज्जती वा अदालतको अवहेलना हुने वा अपराध गर्न दुरुत्साहन दिने वा सार्वजनिक शिष्टाचार वा नैतिकताको प्रतिकूल हुने कार्यमा मुनासि प्रतिबन्ध लगाउने गरी कानुन बनाउन रोक लगाएको मानिने छैन ।

धारा २२ : गोपनीयताको हक: कुनै पनि व्यक्तिको जीउ, आवास, सम्पत्ति, लिखत, पत्राचार वा सूचनाको गोपनीयता कानुनद्वारा तोकिएको अवस्थामा बाहेक अनतिक्रम्य हुनेछ ।

### गाली र बेइज्जती ऐन २०१६

दफा ३ : कसैले अरू कुनै व्यक्तिको इज्जतमा धक्का पुऱ्याउने नियतले वा धक्का पुग्ला भन्ने जानीजानी वा विश्वास गर्ने कारण भई लेखेर वा बचनले वा संकेतले वा बुझिने गरी आकार चिह्नद्वारा सो व्यक्तिलाई कुनै दोष लगाएमा वा त्यस्तो कुरा प्रकाशित गरेमा निजले सो व्यक्तिको बेइज्जती गरेको मानिनेछ ।

दफा ८ : आइमाईलाई अपमानित गर्ने नियतले कुनै काम कुरा गरेमा: कसैले कुनै आइमाईको अपमान गर्ने नियतले, निजले देख्ने सुन्ने गरी कुनै कुरा भनेमा वा कुनै किसिमको शब्द वा हाउभाग व्यक्त गरेमा वा कुनै वस्तु देखाएमा वा निजको गोपनीयतामा दलल दिएमा समेत सजाय हुन्छ ।

# सामुदायिक रेडियो

सामुदायिक प्रसारण त्यस्तो प्रक्रिया हो जसमा व्यक्तिहरू सामूहिक लक्ष्य प्राप्तिका लागि अन्तर्क्रिया गर्छन् । अन्तर्क्रियामा संलग्न व्यक्तिहरूबीचको सम्बन्ध कार्यात्मक हुन्छ, आपसी मित्रता र लगाव हुन्छ । समान भौगोलिक, सांस्कृतिक तथा प्राकृतिक अवस्थाले उनीहरूका भावना र उद्देश्य साझा हुन्छन् । जीवन सहिष्णुताको मूल आधार भावना, आवश्यकता तथा स्थानीयता प्रधान हुन्छ । उनीहरूबीच प्रतिस्पर्धा होइन आपसी समन्वय हुन्छ । सबैजना समूहमा मिलेर काम गर्न बानी परेका हुन्छन् ।

समुदायभित्र सबै व्यक्तिमा एउटै योग्यता, गुण, क्षमता तथा शक्ति हुने भए श्रम विभाजनको कुनै अर्थ रहने थिएन । व्यक्तिहरूबीच विभिन्नता हुने भएकाले नै यसको आवश्यकता तथा महत्त्व छ । यो सामाजिक कार्यविभाजनमा एक प्रकारको विशिष्टीकरण हो । सामुदायिक रेडियोमा संलग्नता भनेको पनि सामाजिक कार्यविभाजनको एउटा पक्ष हो ।

परम्परागत रूपमा नेपाली समाजले सञ्चारका लागि विशिष्ट शैली अपनाउँदै आएको छ । नेपालका विभिन्न ठाउँमा अझैसम्म कायम रहेको कटुवाल प्रथा यसैको एउटा ज्वलन्त उदाहरण हो । पहाडी भेगमा कटुवाल कराउने र तराई भेगमा चपराखी (गोराइत) का नामले प्रचलित यो प्रथाअनुसार गाउँलेलाई सभा, कचहरी बस्ने, गाउँमा महामारी फैलिएको जानकारी दिनेदेखि धान काट्ने, जमरा राख्ने, दशैंको टीका लगाउने साइतसम्मका काम तोकिएको व्यक्तिले गाउँको अग्लो डाँडाबाट ठूलो स्वरले कराएर दिने गर्छ । यसैको आधुनिक, अझ प्रभावकारी र व्यवस्थित स्वरूपको अर्थमा सामुदायिक रेडियोलाई लिनु उपयुक्त हुन्छ ।

कटुवाल प्रथाको तुलनामा सामुदायिक रेडियोको पहुँच र क्षमता व्यापक छ । माध्यम, श्रोता, विषयवस्तु तथा स्रोतजस्ता सञ्चारका आधारभूत स्वरूपमा नयाँपन आएको छ । तसर्थ स्थानीय बासिन्दाको हृदयको साह्रै नजिक तर पहुँचका हिसाबले अत्यन्त टाढा रहेका अगगिन्ती

अवसरहरू दैनिक जीवनमा सम्भव तुल्याउने प्रयत्नका लागि सामुदायिक रेडियोको विशिष्ट प्रयोग गर्नुपर्छ ।

सामुदायिक रेडियोकर्मीले स्थानीय बासिन्दाका दैनिक आवश्यकतालाई नजिकबाट पहिल्याउँछन् । कुनै पनि समुदाय वा व्यक्तिका लागि अत्यावश्यक विषयवस्तुहरू अन्तर्राष्ट्रिय, राष्ट्रिय र स्थानीय गरी तीन स्वभावका हुन्छन् । समुदायलाई यी तीनैखाले सूचना, सन्देश र शिक्षा चाहिन्छ । अन्तर्राष्ट्रिय सन्दर्भका विषयहरू विज्ञान तथा प्रविधि, वातावरण, मानवअधिकार, लैंगिक समानता आदि हुन् । यस्तै राजनीति, राष्ट्रिय अखण्डता, नागरिकता, विकास, आर्थिक अवस्था, नीतिनियमजस्ता विषयहरू समुदायलाई आवश्यक पर्ने राष्ट्रिय विषयहरू ठाउँअनुसार फरक फरक हुन्छन् । तराईवासीलाई स्याउ खेती कसरी लगाउने भन्ने ज्ञान र सीपको खासै जरुरत पर्दैन तर हुम्ला, मनाङ, मुस्ताङवासीका लागि अति जरुरी छ । तर सलह वा मुरुवा लागेर धान सखाप हुन लाग्दा कसरी जोगाउने भन्ने उपाय तराईवासीका लागि अपरिहार्य हुन्छ ।

सामुदायिक रेडियोले व्यक्तिका अनुभवहरूलाई सैद्धान्तिकीकरण गरेर समाजमा नयाँ-नयाँ ज्ञान थप्नका लागि मद्दत गर्छ । केवल शास्त्रका ज्ञानभन्दा प्रयोगात्मक वा अनुभवको ज्ञान बढी मूल्यावान हुन्छन् । सामुदायिक रेडियोले निरक्षर जनतालाई समेत व्यावहारिक तथा जीवन्त वातावरणमा शैक्षिक फाइदाहरू पुऱ्याउन सक्छ । जसले दोस्रो पुस्ताको ज्ञान मानिने किताबी ज्ञान र नोकरशाही तन्त्रीय वातावरणमा सीमित रहेको प्रचलित शिक्षा पद्धतिलाई नयाँ मोड दिन सक्छ ।

सामुदायिक रेडियोकर्मीको अभियान प्रविधिको रहस्यमयीकरण र पेशाकरणको विपक्षमा हुनुपर्छ अर्थात् प्रविधिलाई रहस्यपूर्ण बनाउने र सामुदायिक रेडियोको कामलाई जागिरका रूपमा प्रवृत्तिको विपक्षमा हुनुपर्छ । प्रविधिको रहस्योद्घाटनले मान्छे प्रविधिका लागि होइन, मान्छेलाई सहयोग गर्नका लागि प्रविधिको आविस्कार भएको हो भन्ने शाश्वत निचोडलाई आत्मसात गराउँछ । जुन निचोडले जनतालाई प्रविधि कहिल्यै हाउगुजी वा आफ्नो पहुँचभन्दा टाढाको विषय हो भन्ने भ्रमबाट मुक्ति दिन्छ । पत्रकारिताको गैरपेशाकरणले सर्वसाधारणलाई

रेडियोमा उनीहरूको सहभागिता कुनै जागिरका लागि नभएर समाजप्रतिको दायित्व निर्वाहका लागि हो भन्ने सन्देश दिन्छ । सामुदायिक रेडियोमा संलग्न व्यक्तिहरूबीचको सम्बन्ध प्रतिस्पर्धी होइन, समन्वयात्मक र परस्पर सहयोगीको हुनुपर्छ भन्ने भावना जगाउँछ ।

गतिवान समयले ल्याउने संक्रमणकालीन अवस्थाहरूमा सामाजिक र सांस्कृतिक सहिष्णुता कायम राख्नका लागि समेत सामुदायिक रेडियोको महत्त्वपूर्ण योगदान रहन्छ ।

## सामुदायिक रेडियोका विशेषता

(१) क्रियाशील प्रणाली: स्थानीय बासिन्दाको हृदयको साह्रै नजिक तर पहुँचका हिसाबले अत्यन्त टाढा रहेका सपनालाई साकार पार्ने प्रयत्नका लागि सामुदायिक रेडियो क्रियाशील रहन्छ । यस्तो संस्थामा प्रशासनिक झन्झट ज्यादै कम हुन्छ । संस्थाभित्र स्वतन्त्र र अनौपचारिक वातावरण हुन्छ । संस्थाको लक्ष्यप्रति सबैजना जानकार हुन्छन् । समूह केन्द्रित नेतृत्व हुने भएकाले खुला छलफल र एकअर्काप्रति आदरभाव हुन्छ । सोचाइ सकारात्मक र निर्णय प्रक्रिया सिर्जनशील हुन्छ । सन्तुष्टिको चेतनाले सबै मिलेर उच्च मनोबलका साथ काम गर्छन् । उनीहरू कार्यभन्दा परिणाममुखी हुन्छन् । सामुदायिक रेडियो जनसहभागिताका लागि सर्वकालिक तथा अविच्छिन्न नेटवर्कका रूपमा रहन्छ ।

सामुदायिक रेडियोसँग परिवर्तनको चुनौती छ । यसले एकातिर विश्वव्यापीकरणको लहैलहैका सामुन्ने स्थानीयताको गफ जमेर गर्छ । जसको अर्थ परिवर्तनको जगजगीले सांस्कृतिक मूल्यहरूको अवहेलना गर्ने खतराप्रति सजग रहनु हो । अर्कोतिर परम्परागत चलनले सिर्जना गरेर विभेदपूर्ण व्यवहारहरूलाई संशोधन गरी वैज्ञानिकता र आधुनिकताको मूलप्रवाहमा स्वाभाविक रूपले सामेल गराउन क्रियाशील हुनुपरेको छ । तसर्थ यथास्थितिभन्दा माथि उठेर स्थानीय स्वभाव र पनलाई सगौरव स्वीकार्दै गतिशील चिन्तन प्रणाली अवलम्बन गर्नु सामुदायिक

रेडियोको विशेषता हो ।

(२) मानवीय अन्तर्क्रिया: प्रसारक र श्रोताबीचको सम्बन्ध कार्यात्मक स्वतन्त्र, मित्रवत् र व्यावहारिक हुन्छ । यो सम्बन्धको आधारशीला स्थानीयता तथा समानताको भावना हो । श्रोता र प्रसारक दुवैका रहनसहन, स्तर, रीतिरिवाज लगभग समान हुन्छन् । यो सम्बन्धले करुणा, प्रेम, सहानुभूति, सहयोगजस्ता मानवीय गुणहरूको सञ्चार तथा विकास हुन्छ । स्थानीय बासिन्दाबीच मानवीय सम्पर्क स्थापित गर्छ, भावनाको आदान-प्रदान गराउँछ । एक व्यक्ति अर्को व्यक्तिको संवेदनाप्रति सजग र चनाखो रहन्छ । जसले भावनात्मक एकता कायम गर्छ । यसर्थ सामुदायिक रेडियो सामाजिक सुरक्षा प्रदान गर्न तथा सामाजिक सहमति कायम गर्न सक्रिय रहन्छ ।

(३) सामूहिक लक्ष्य: सामाजिक कार्यमा सक्रिय गैरसरकारी, सहकारी, गुठी, फाउन्डेसन र शिक्षालयजस्ता संस्थाहरूमा सामुदायिक रेडियोको स्वामित्व हुन्छ । सामुदायिक रेडियोहरू व्यापार वहाक माध्यम होइनन्, जसले  निजी फाइदाका लागि काम गरुन् । स्थानीय बासिन्दाहरू नै यसमा समय, श्रम र पैसा लगानी गर्छन् । अन्य सामाजिक वस्तुहरूभैंं जनविश्वास तथा जनअभिरुचिका कार्यहरूमा अनिवार्य रूपले चाहिने सार्वजनिक चासो सामुदायिक रेडियोमा पनि पूर्णरूपले समावेश हुन्छ । समग्र समाजलाई महत्त्वपूर्ण योगदान दिनसक्ने सार्वजनिक तथा सामुदायिक भावना सामुदायिक रेडियोको आत्मा हो । जसमा हामी भन्ने भावना प्रवल रहन्छ । समाज तथा नागरिकको सांस्कृतिक, सामाजिक, शैक्षिक, आर्थिक, धार्मिक, नैतिक, राजनीतिक, सार्वजनिक तथा वैयक्तिक जीवनका आवश्यकताहरूको पूर्ति गर्ने सामूहिक लक्ष्य नै सामुदायिक रेडियोको पनि लक्ष्य हुन्छ ।

(४) सामाजिक नियन्त्रण: सामुदायिक रेडियो समाजको विशिष्ट हित, आवश्यकता पूर्ति तथा स्वार्थसिद्धिको कार्यमा संलग्न रहन्छ । अन्य सामीजक संगठन र सामुदायिक रेडियोबीचको सम्बन्ध

सहकार्य, सहअस्तित्व र सहयोगी हुन्छ । परिवार, नाता-आफन्त, जात, छरछिमेक, परम्परागत विधिविधान, जनमत तथा कानुनहरूले स्थापित गरेका मूल्यहरूको एकखाले सत्ता प्रत्येक समाजमा कायम छ । सामुदायिक रेडियोकर्मीहरू यही सामाजिक सत्ताले निर्देश गरेको सम्बन्धमा बाँधिएका हुन्छन् । यो सम्बन्धभन्दा बाहिर जानेबित्तिकै असामाजिक र उच्छृङ्खल व्यक्ति वा संस्थाको कोटीमा पर्छ । समाजबाट बहिष्कृत हुन्छ ।

(५) भौतिक सामीप्यता: सामुदायिक प्रसारणका हिसाबले समुदायको अर्थ त्यस्ता व्यक्तिहरूको समूहसँग हुन्छ जो एउटा निश्चित भौगोलिक क्षेत्रमा बसोबास गर्छन् । प्रसारक र श्रोताका भौतिक, प्राकृतिक तथा मानसिक अवस्थाहरू समान हुन्छन् । एकै स्थानमा वर्षौंसम्म बसोबास र उठबास गर्नाले ठाउँप्रति अपनत्व र गर्व हुन्छ । व्यक्ति-व्यक्तिबीच निकटता हुन्छ । यिनै कारणले व्यक्ति-व्यक्तिबीच विभिन्न संस्थागत र सामाजिक सम्बन्ध कायम हुन्छन् । उनीहरूका आवश्यकता मौलिक छन् र पारस्परिक सम्बन्धहरू स्थायी छन् ।

## अन्य रेडियोसँग भिन्नता

| प्रकृति | सरकारी रेडियो पदीय | सामुदायिक रेडियो | व्यापारिक रेडियो |
|---|---|---|---|
| अवधारणा | सरकारी | सहभागितामूलक | बजारमुखी |
| स्वामित्व | निष्क्रिय | सामूहिक | निजी |
| श्रोता | शासकप्रति | सक्रिय | स्वच्छन्द |
| उत्तरदायित्व | औपचारिक | समाजप्रति | मालिकप्रति |
| शैली | खरो प्रचारबाजी | स्वभाविक | बनावटी |
| लक्ष्य | | सामूहिक कल्याण | नाफा आर्जन |

## स्वामित्व र स्थायित्व

आधा शताब्दी लामो इतिहास भएको सामुदायिक रेडियोको विकासक्रममा विश्वभरि हालसम्म खुलेका सामुदायिक रेडियोहरू गैरनाफामुखी संस्थाहरूको स्वामित्वमा सञ्चालित छन् । गैरसरकारी, स्थानीय सरकार, शिक्षण संस्था, गुठी, सहकारी र फाउन्डेसनजस्ता संस्थाले रेडियो सञ्चालन गर्दै आएको पाइन्छ । युरोप र अमेरिकातिर ट्रष्ट फाउन्डेसन र सहकारी संस्थाहरूले सामुदायिक रेडियो सञ्चालन गर्ने गरेका छन् । फिलिपिन्समा नगरपालिका तथा शिक्षालयहरू यो कार्यमा बढी मात्रामा संलग्न रहेका छन् ।

सामान्य परिभाषाअनुसार नेपालमा अहिलेसम्म चलेका ६ वटा रेडियोलाई सामुदायिक रेडियोहरूको कोटीमा राख्न सकिन्छ । नेपालमा गैरसरकारी, सहकारी तथा स्थानीय सरकार गरी तीनखाले संस्था सामुदायिक रेडियो सञ्चालन कार्यमा संलग्न छन् । रेडियो सगरमाथा (काठमाडौं) र रेडियो स्वर्गद्वारी (दाङ) गैरसरकारी संस्थाको स्वामित्वमा सञ्चालित छन् । रेडियो लुम्बिनी (रूपन्देही) र हिमचुली एफएम (कास्की) सहकारीले चलाएका रेडियो हुन् ।  मेट्रो एफएम (काठमाडौं) र रेडियो मदनपोखरा (पाल्पा) स्थानीय सरकारले सञ्चालन गरिरहेका छन् ।

स्थापना तथा सञ्चालन खर्चका लागि विश्वभरकै सामुदायिक रेडियोहरू प्रायः एकैखाले स्रोतमा भरपर्ने गरेको पाइन्छ । दाताहरूबाट प्राप्त अनुदान सहयोग, व्यक्ति तथा संस्थाहरूबाट प्रँ प्त चन्दा, नियमित सदस्यता शुल्क र कार्यक्रम प्रायोजन तथा विज्ञापन शुल्क नै सामुदायिक रेडियोका आम्दानी हुन् । कतिपय सामुदायिक रेडियोले कोष स्थापनाका लागि श्रोताहरूमाझ विशेष कार्यक्रमको पनि आयोजन गर्ने गरेका छन् । सामुदायिक रेडियो निरन्तर सञ्चालनका लागि महत्त्वपूर्ण शर्त हो- खर्च कम गर्नु । विभिन्न क्षैत्रमा रहेका सामुदायिक रेडियोबीच कार्यक्रम तथा सूचनाको आदान-प्रदान पनि गर्न सकिन्छ । जसले उत्पादन लागत घटाउँछ ।

सामुदायिक रेडियो वास्तवमा सामुदायिक संस्था हो । सामुदायिक संस्थाको मूल स्वभाव स्थायी र आत्मनिर्भर हुन्छ । स्थायित्व र आत्मनिर्भरताका लागि सामुदायिक रेडियो सञ्चालकहरूले भिन्न रणनीति तय गर्नुपर्छ । समाजमा सामाजिक पुँजी, मानवीय पुँजी, भौतिक पुँजी तथा वित्तीय पुँजीहरू हुन्छ । यी चारैखाले पुँजीको सही परिचालन गर्न सकेको खण्डमा मात्र सामुदायिक रेडियोले स्थायित्व पाउँछ ।

एउटा उदाहरण लिएर सन्दर्भलाई अघि बढाउँ । काठमाडौं उपत्यकाभित्र निर्माण भएका मठ, मन्दिर, देवल, चैत्य, गुम्बाहरूलाई मूल्यमा परिणत गर्ने हो भने खर्बौं रुपैयाँ बराबरका छन् । तर यी सम्पदाहरू जीवनभर एक रुपैयाँको नोट नदेखेका पुर्खाले निर्माण गरेका हुन् । अहिले हामी हजार र लाख रुपैयाँको कुरा गर्नेमात्र होइन, दैनिक जीवनमा कारोबार गर्छौं, सरकारले वार्षिक अर्बौं रुपैयाँको बजेट भाषण गर्छ तर पुर्खाले नासोका रूपमा छोडिदिएका यी सम्पदा मर्मत गर्न हामी विदेशी अनुदान पर्खन थालेका छौं । आखिर किन त ? उत्तर सरल छ- हामीले समाजमा विद्यमान सबैखाले पुँजीको प्रयोग गर्न जानेनौं ।

एक रुपैयाँको नोट जीवनभर नदेखेका पुर्खाले यति धेरै निर्माण कार्य कसरी गरे होलान् भनी एकछिन घोत्लिनु जरुरी छ । त्यसबेला एकअर्कामा विश्वास थियो । कसैले यस्तो काम गरौं भन्दा सबै तयार हुन्थे । प्रकृतिले रुखपात, ढुंगा, माटो र पानी दिएको थियो । जुक्ति र सीप हुनेले काठ काटे, ढुंगा खिपे, कुँदे । बल हुनेले काठ ओसारे, ढुंगा बोके, माटो मुछे । यही प्रक्रियाबाट पुर्खाहरूले हाम्रा नाममा यी अथाह सम्पदा छोडेर जान सफल भए । एकआपसको विश्वास सामाजिक पुँजी थियो  रुखपात, ढुंगा-माटो भौतिक पुँजी थिए । मान्छेसँग भएको ज्ञान, विवेक र सीप मानवीय पुँजी थियो । यी तीनवटा पुँजीको सहायताले अर्बौं मूल्य बराबरको बित्तीय पुँजी निर्माण गऱ्यो ।

बदलिँदो परिस्थितिसँगसँगै हामीले आपसी विश्वास गुमाएका छौं । समाजमा संग्रहित विवेक, ज्ञान र सीपलाई बेवास्ता गरेका छौं । प्रँकृतिक स्रोतहरूको सदुपयोग गर्न सकेका छैनौं । जुन कुराहरू वित्तीय पुँजीको

निर्माणका लागि आधारभूत स्रोतसमेत हुन् । यी पुँजीहरूको परिचालनबिना हामी वित्तीय पुँजीको पछि एकोहोरो ढंगले लागेका छौं । जसको परिणाम समाजमा भ्रष्टाचार, काला बजारी तथा तस्करी बढेको छ । यसले समाजलाई नैतिक तथा भौतिक दुवै रूपमा अधोगतितर्फ धकेलिरहेछ ।

सामुदायिक रेडियोको स्थायित्वका लागि अहिले बित्तीय पुँजीकै मात्र चर्चँ हुने गरेको छ । निरपेक्ष रूपमा खोजिएको यो बित्तीय पुँजी आर्जन गर्न सही रूपमा सम्भव छैन । तसर्थ सामुदायिक रेडियोहरू सधैँ संकटमा पर्ने गरेका छ । परियोजनाका रूपमा मात्र सामुदायिक रेडियोहरू सीमित भएका छन् । यसर्थ सामुदायिक रेडियोको स्थायित्व परियोजना वा संस्थाको स्थायित्व होइन । यसले समाजमा पार्ने प्रभावका आधारमा स्थायित्वलाई निर्धारण गर्नुपर्छ । तसर्थ सामुदायिक रेडियोको स्थायित्वका लागि रणनीति तयार गर्दा यी चारवटै पुँजी परिचालनमा जोड दिनुपर्छ ।

सामुदायिक रेडियोकर्मीसँग रेडियो तथा अडियो उपकरणहरू छन् । अर्को अर्थमा भन्दा माध्यम (च्यानल) विद्यमान छ । यो भौतिक पुँजी हो । यही पुँजीको प्रयोग गरेर त्यस क्षेत्रका बासिन्दाको विश्वास जित्न सक्नुपर्छ । सामाजिक पुँजी परिचालन गर्न सक्नुपर्छ । यो स्थितिले प्रत्येक व्यक्ति रेडियोमा कुनै न कुनै रूपमा निःशुल्क समय दिन तयार हुन्छ । निर्णय प्रक्रियामा सहभागी हुन, कार्यक्रम उत्पादन गर्न, सदस्यता वितरण गर्न वा विज्ञापन खोज्न यो स्वयंसेवी जमात दायित्वबोधको चेतनासहित सक्रिय रहन्छ । यो प्रयत्नले सामुदायिक रेडियोलाई आवधिक परियोजनाका रूपमा होइन एउटा निरन्तर प्रक्रियाका रूपमा अघि बढाउँछ ।

## आचारसंहितासम्बन्धी अवधारणा

पत्रकारिताको प्रचलित परिभाषाले आमरूपमा सूचना सम्प्रेषण गर्ने कलाको अर्थमा मात्र पत्रकार र समाजबीच सम्बन्ध कायम गरेको छ । तर सामुदायिक रेडियोकर्मीको भूमिका योभन्दा निकै फरक हुन्छ । ऊ सर्वप्रथमतः सामाजिक प्राणी हो । ऊ समाज परिवर्तनको अभियानमा प्रत्यक्ष सहभागी अभियन्ता हुन्छ । सामुदायिक रेडियोकर्मी निश्चित

समुदाय वा समाजसँग संलग्न हुन्छ । समाजमा घट्ने हरेक घटनाको मार उसले पनि भोग्नुपर्छ । समाजको सामुन्नेमा रहेका सम्भावित दुष्परिणामहरूलाई राम्रोतर्फ मोड्न उसले सामुदायिक सञ्चारकर्मीलाई अंगाल्नुपर्छ । यसको अर्थ सामुदायिक सञ्चारकर्मी घटनाको पर्यवेक्षक वा आलोचक वा टिप्पणीकर्तामात्र कदापि हुन सक्तैन । उसले त्यो विषयमा समझदारीको रणनीति तयार गर्न सक्नुपर्छ । कुनै कुरामा आपसी विवाद सिर्जना गर्ने होइन उसको दायित्व सहमतिका लागि साझा धरातल फेला पार्नेमा हुन्छ । सामुदायिक सञ्चारकर्मी घटनाको स्वतन्त्र विश्लेषक हुनसक्तैन, ऊ अन्तरनिर्भरताभित्रको स्वतन्त्र व्यक्ति हुन्छ । सामाजिक जटिलताहरूलाई खोतल्ने र मात्रात्मक रूपले मात्र होइन गुणात्मक हिसाबले समेत परस्पर सन्तुलन खोज्ने कार्यमा सामुदायिक सञ्चारकर्मी लाग्नुपर्ने हुन्छ ।

अर्को, परम्परागत पत्रकारिताले विवादास्पद विषय वा घटनाहरूप्रति तटस्थ रहनुपर्ने नीति अंगाल्दै आएको छ । मतभेदका विषयहरूमा पत्रकार कुनै मतको पक्षमा रहनुहुँदैन भन्ने कुरामा विद्यमान पत्रकारिताको तटस्थ नीतिले जोड दिन्छ । यो निरपेक्ष तटस्थ नीतिका कारण विद्यमान पत्रकारिता बौद्धिक पक्षघातको असाध्य रोगबाट ग्रस्त छ । सामुदायिक रेडियोकर्मी यो बौद्धिक पक्षघातको शिकार हुनुहुन्न । कसैलाई निन्दा वा पक्षपात नगरी जीवनका वास्तविकताहरूबारे सही निर्णय लिन विवादास्पद विषय वा घटनाहरूमाथि सामुदायिक सञ्चारको माध्यमबाट समुदायमा छलफल, विचार-विमर्श तथा मतमतान्तर चलाउनुपर्छ ।

सामुदायिक रेडियोकर्मी किनाराको साक्षी, रमिते वा प्रत्यक्षदर्शीमात्र भएर पुग्दैन । ऊ सामाजिक मूलप्रवाहमा सामेल हुनैपर्छ । आफू रहेको समाजलाई नजिकबाट चिन्नुपर्छ । त्यसको उन्नति र प्रगतिका लागि काम गर्नुपर्छ । दैनिक जीवनका आवश्यकता पहिल्याउनुपर्छ । सामाजिक सम्बन्धहरूलाई व्याख्या र विस्तार गर्नुपर्छ ।

राष्ट्रिय जनगणना- २०५८ ले नेपालमा ९१ वटा भाषा बोलिन्छ

भन्ने तथ्यांक सार्वजनिक गरेको छ । यसको अर्थ नेपाल अन्तरसांस्कृतिक समाज हो । अन्तरसांस्कृतिक संवादका समयमा आउने थुप्रै जटिलताहरूलाई पार गर्दा लिनुपर्ने निर्णय र अपनाउनुपर्ने व्यवहारहरू अत्यन्त भिन्न हुनसक्छन् ।

सामुदायिक रेडियो स्थानीय समुदायकै लगानी र सहभागितामा चल्नुपर्छ । श्रोताहरूबाटै पैसा उठाएर रेडियोबाट उनीहरूसँगै उपयोगी गफ गर्नुपर्छ । उनीहरूकै अनुभव आदान-प्रदान गर्नुपर्छ । यो सन्दर्भबाट हेर्दा प्रचलित पत्रकारिताले अवलम्बन गरेको आचारसंहिताका तटस्थता, स्वतन्त्र र पर्यवेक्षकको भूमिकामा रहनुपर्ने र समाचार वा प्रसारण सामग्रीलाई माध्यम बनाएर आर्थिक वा अन्य लाभ लिन नहुने भन्ने बुँदाहरू अर्थहीन बन्न जान्छन् । सामुदायिक रेडियोको स्थायित्व नै समुदायको सहयोगमा निर्भर हुन्छ । त्यसैले सामुदायिक रेडियोलाई समुदायकै लागि समुदायद्वारा नै सञ्चालित रेडियो पनि भन्ने चलन छ ।

सामुदायिक सञ्चारमा लाग्नका लागि पत्रकारिताको परम्परागत बाटोभन्दा निकै फरक बाटो हिंड्नुपर्ने हुन्छ । यसका लागि सामुदायिक रेडियोकर्मीले पेशाभन्दा माथि उठेर नयाँ चिन्तन प्रणाली अवलम्बन गर्नुपर्छ । नयाँ सन्दर्भबाट अगाडि बढ्दा आइपर्ने नैतिक तथा व्यावहारिक निर्णयका लागि निश्चित मूल्य र मापदण्ड स्थापित गर्नुपर्ने हुन्छ । सामुदायिक रेडियो अर्को एउटा समुदाय हो, जसको काँधमाथि समाजलाई गति र नेतृत्व दिने आधुनिक अभिभारा छ । सामुदायिक सञ्चारकर्मीले सधैंभरि सामाजिक परिवेशमा काम गर्नुपर्ने हुँदा उसमा विशिष्ट प्रकारका सामाजिक कुशलताहरू हुनुपर्छ । हामी यो अध्यायमा सैद्धान्तिक पक्षभन्दा प्रयोगात्मक आचारसंहितालाई प्रधानता दिएर सामुदायिक सञ्चारकर्मीका लागि निश्चित नैतिक गुणहरू तय गर्नेछौं ।

# आचारसंहिता : मुद्दाहरू

## (क) सूचनाको हक

राज्य सञ्चालनका गतिविधिहरूमा सर्वसाधारणको सोझो पहुँच प्रजातान्त्रिक व्यवस्थाको प्राण हो। प्रजातान्त्रिक व्यवस्थामा जनता सार्वभौम हुन्छन् । उनीहरू आ-आफ्नो काममा व्यस्त हुनेहुनाले राज्यका हरेक गतिविधिमा प्रत्यक्ष संलग्नता असम्भव हुन्छ । यसर्थ उनीहरूले राज्य सञ्चालनको जिम्मेवारी सुम्पन आफ्ना प्रतिनिधिहरू छान्छन् । ती प्रतिनिधिहरूले जनतामाथि शासन गर्ने होइन, जवाफदेहिता निर्वाह गर्नुपर्ने हुन्छ । जवाफदेहिता पूरा गरे/नगरेको जाँच्न उनीहरूका प्रत्येक काम-कारबाही थाहा पाउने हक जनतामा निहित हुन्छ । यो हक नै सूचनाको हक हो ।

नेपाल अधिराज्यको संविधान २०४७ ले सूचनाको हकका सम्बन्धमा प्रष्ट व्यवस्था गरेको छ । जसअनुसार प्रत्येक नागरिकलाई सार्वजनिक महत्त्वको कुनै पनि विषयको सूचना माग्ने र पाउने हक हुनेछ । सूचनाको हकसम्बन्धी यो व्यवस्थालाई नेपालको संविधानले नागरिकको मौलिक हकका रूपमा स्थापित गरेको छ । संविधानले यस्तो व्यवस्था गरेको भए पनि हालसम्म नेपालमा सूचनाको हकसम्बन्धी कानुन निर्माण भएको छैन ।

जनउत्तरदायी सरकार तथा असल शासनको मान्यतालाई सही रूपमा कार्यान्वयन गर्न सरकारी संयन्त्रका हरेक क्रियाकलापमा जनताको सहज पहुँच स्थापित गरिनुपर्छ । सूचनाको हकको प्रयोग यो कार्यका लागि अनिवार्य हुन्छ । यसर्थ प्रजातान्त्रिक शासन व्यवस्था भएका मुलुकहरूले सूचनाको हकलाई राज्यव्यवस्थाको महत्त्वपूर्ण शर्तका रूपमा स्वीकार गरेका हुन्छन् । विश्वका ४० वटा भन्दा बढी देशले सूचनाको हकलाई छुट्टै कानुनको निर्माण गरी व्यवस्थित गरेका छन् । अमेरिकामा सूचनाको स्वतन्त्रता ऐन १९६६ (संशोधनसहित) ले सरकारी लिखतहरू

सार्वजनिक जानकारीका लागि प्रवाहित गर्नुलाई सरकारी दायित्वकै रूपमा उल्लेख गरेको छ। स्वीडेनमा संविधानले नै गोप्य राख्नुपर्ने सूचनाहरूलाई सूचीकृत गरी त्यसबाहेकका सम्पूर्ण सरकारी कामकारबाहीलँ ई सार्वजनिक गर्न मिल्ने व्यवस्था गरी सूचनाको हकलाई प्रत्याभूत गरेको छ ।

मानवीय व्यक्तित्व विकासका लागि अपरिहार्य मानिएको अभिव्यक्ति स्वतन्त्रताको आधारका रूपमा सूचनाको हक रहन्छ । सत्यको उद्घाटन गर्न, निर्णय प्रक्रियामा जनसहभागिता जुटाउन, उचित निर्णय गर्न र सकारात्मक परिवर्तनको मार्ग पहिल्याउनका लागि सूचनाको विशेष महत्त्व रहेको हुन्छ (केशवप्रसाद उपाध्याय- २०५९)। प्रजातान्त्रिक व्यवस्थामा सरकारी कार्यको यथार्थ जानकारीबाटै स्वस्थ जनमतको निर्माण हुन सक्ने र स्वस्थ जनमत रहेसम्म सरकारी क्रियाकलापहरू गलत दिशातर्फ जान नसक्ने कारणले जनचाहनाबमोजिम सरकारलाई कार्य गराउन सूचनाको हकको सुनिश्चितता अपरिहार्य हुन्छ (काशीराज- २०५८)। नेपाल अधिराज्यको संविधान २०४७ ले मौलिक हकका रूपमा विचार र अभिव्यक्ति स्वतन्त्रताको हक, छापाखाना र पत्रकारितासम्बन्धी हक तथा प्रत्येक नागरिकलाई सुसूचित हुन पाउने हकको प्रत्याभूति गरेको छ । यी तीनवटै हकको समष्टिरूपलाई सञ्चार स्वतन्त्रताको हकको संज्ञा दिनु उपयुक्त हुन्छ (हरिहर दाहाल- २०५९) ।

अर्कोतिर सूचनाको निर्वाध प्रवाहको संस्कृति हामीकहाँ छैन । सरकारी कार्यालयका सम्पूर्ण कामकारबाहीलाई गोप्य राख्ने संस्कृतिमा हुर्किएको प्रशासनिक कार्यपद्धतिलाई सूचनाको हक अनुकूलको संस्कृतिमा परिणत गर्न सक्रिय हुनु जरुरी छ ।

यसै सक्रियतास्वरूप विगतमा केही कानुनी अभ्यास भएका छन् । सर्वोच्च अदालतले विगतमा सूचनाको हकसम्बन्धी केही महत्त्वपूर्ण सिद्धान्त प्रतिपादन गरेको छ । पुरेन्द्र अर्यालविरुद्ध निर्वाचन आयोगसमेतको मुद्दामा सर्वोच्च अदालतले सूचनाको अधिकार अनवरत र अकुण्ठित रूपले प्रँ प्त हुनु प्रजातान्त्रिक पद्धतिको कार्यान्वयनका लागि अनिवार्य

हुन्छ भन्ने सिद्धान्त कायम गरेको छ। गोपाल सिवाकोटी 'चिन्तन' विरुद्ध अर्थ मन्त्रालयसमेत भएको मुद्दामा सर्वोच्च अदालतले सूचनाप्रति नागरिकको हकलाई स्थापित गर्न आठ सूत्रीय निर्देशन जारी गरेको छ। श्री ५ को सरकारका नाममा जारी भएको यो निर्देशनले सूचनाको हकसम्बन्धी कानुन नबनेसम्म विशेष महत्त्व राख्छ।

## सर्वोच्च अदालतद्वारा जारी आठ सूत्रीय निर्देशनः

(१) निवेदकले सरकारबाट सम्बन्धित विषयमा के कुन लिखतहरू छ त्यसको सूची (फेहरिस्त) माग्ने

(२) सरकारले सात दिनभित्र सो सूची दिएमा निवेदकले सरोकार भएको लिखतको निरीक्षँणको माग गर्नुपर्ने

(३) निवेदकबाट माग भएमा सरकारले सो प्रयोजनका लागि समय, मिति र स्थान तोकी निवेदकलाई तीन दिनभित्र सूचना दिने

(४) निवेदकले निरीक्षँण गरिसकेपछि लिखतबाट टिपोटमात्र गर्ने र नक्कल सार्न आवश्यक भएमा सो सार्ने वा नक्कलका लागि तोकिएको पदाधिकारीलाई अनुरोध गर्ने

(५) नक्कल दिँदा नियमको अभाव भए लागेको यथार्थ खर्च दस्तुरका रूपमा लिएर नक्कल प्रमाणित गरेर दिने

(६) सम्बन्धित लिखतको आंशिक वा पूर्णरूपमा सूची दिन वा निरीक्षँण गर्न दिन र नक्कल दिन इन्कार गर्ने अवस्था भएमा सरकारले सोको कारण जनाई निवेदकलाई तीन दिनभित्र जानकारी दिने

(७) इन्कार गरेको कुरामा वा इन्कार गरेको कारणसँग निवेदकलाई चित्त नबुझेमा इन्कारीको सूचना पाएको सात दिनभित्र विवादको निरूपणका लागि सर्वोच्च अदालतमा उजुर गर्ने

(८) उजुरीमा कारबाही गर्दाको कार्यविधि सर्वोच्च अदालतको नियमावलीबमोजिम गर्ने/गराउने

यो निर्देशन सूचनाको हकको विषयमा एउटा कोशेढुंगा हो। तर पनि सूचनाको हकको प्रयोगलाई सही ढंगले परिभाषित गरिनु आवश्यक

छ । सूचना दिने व्यक्तिको दायित्व, सूचना माग्नेले पूरा गर्नुपर्ने प्रक्रिया, सूचना दिन नमिल्ने अवस्था र त्यसको उपचार पद्धतिलगायतका विषयमा स्पष्ट कार्यप्रणाली तय नभएसम्म सूचनाको हक संवैधानिक हक मानिए पनि त्यसको प्रयोग सहज रूपमा हुन सक्ने स्थिति नेपालमा छैन ।

कानुनविद्‌हरूले सूचनाको हकलाई सापेक्ष अधिकारका रूपमा व्याख्या गर्ने गरेका छन् । यस अर्थमा कानुनको व्यवस्थासमेत नभएको हाम्रो मुलुकमा सूचनाको हकसम्बन्धी अवधारणालाई निश्चित दिशाबोध गर्नु आवश्यक छ । सूचनाको हक अनियन्त्रित अथवा निरपेक्ष रूपमा रहन सक्तैन । सम्पूर्ण रूपमा अनियन्त्रित निरपेक्ष सूचनाको हक विश्वमा कहींकतै पनि प्रदान भएको पाइँदैन । वाञ्छित सीमाभित्र रहेर प्रदान गरिएको वा उपभोग गरिएको सूचनाको हकबाट नै हामीले अपेक्षा गरेअनुसारको प्रजातान्त्रिक पद्धतिको विकासमा योगदान पुग्छ (केशवप्रसाद उपाध्याय- २०५९) ।

## (ख) सूचित गर्नेको दायित्व

हामीकहाँ कसैले सूचना नमागीकनै सूचना संप्रेषित गर्ने सक्रिय सूचना प्रवाह पद्धति छैन । मागेर र खोजेरमात्र सूचना पाउने निष्क्रिय सूचना प्रवाह पद्धति भएको अवस्थामा जनताको सूचनाको हकलाई सार्थक बनाउने एकमात्र साधन पत्रकारिता हो । त्यसैले यो अंकुशरहित हुनुपर्छ । तर स्वतन्त्रताको प्रयोग गर्नेहरूले स्वतन्त्रताको मूल्य बुझ्नु अनिवार्य हुन्छ । यसर्थ काम थाल्नुअघि नै पत्रकारले कहाँसम्म स्वतन्त्रता हो र कहाँदेखि अराजकता सुरु हुन्छ भन्ने लक्ष्मण रेखा कोर्नु जरुरी छ ।

क्रियाशील पत्रकार भएका नाताले सामुदायिक रेडियोकर्मीले अरू व्यक्तिका सूचनाको हकसम्बन्धी निर्णय लिने र कार्य गर्ने जिम्मेवारी पाएको हुन्छ । यसका अतिरिक्त पत्रकारले समाजका अन्तरद्वन्द्वहरूको समाधानप्रति अलग-अलग धारणा राख्ने सरकार, नीति-निर्माता, विज्ञ तथा विचारकहरूसँग संलग्न भएर पनि काम गर्नुपर्ने हुन्छ । भिन्नभिन्न धर्म, सम्प्रदाय, आस्था र विश्वास भएका जनतासमक्ष थरीथरीका सूचना

प्रवाहित गर्नुपर्छ । घटनाक्रमहरूले समाजमा सिर्जना गर्ने नयाँ जटिलता तथा त्यसको परिणामले कार्यक्षेत्रमा पार्ने नैतिक विरोधाभाषको सही निराकरणका लागि पेशागत ज्ञान र सीपलाई चुस्त पनि बनाउनुपर्छ । यस अर्थमा सामुदायिक रेडियोकर्मी अरू व्यक्तिका सूचनाको आवश्यकता के के हुन् र के के होइनन् भनी निर्णय गर्ने हैसियतमा हुन्छ । अरूको तर्फबाट निर्णय लिनुपर्ने अवस्था भएको हुँदा सामुदायिक रेडियोकर्मीले निश्चित नैतिक दायित्व निर्वाह गर्नुपर्छ ।

आफ्नो भूमिकालाई सूचना प्रवाहित गर्ने काममात्रै हो भनेर परम्परागत शैलीमा उम्कन सामुदायिक रेडियोकर्मीले मिल्दैन । त्यो घटना वा विषय किन छानियो वा प्रसारण गर्ने निर्णय गरियो भन्ने कुरा सूचना छनोट प्रक्रियामा निर्णय गर्ने हैसियतसँग जोडिएको पक्ष हो । यस कुराले सूचनाको निर्णय गर्ने अधिकार पत्रकारमा केन्द्रित रहेको विषयलाई औंल्याउँछ ।

आचारसंहिता पालना गर्नमा त्रुटि रहेमा पत्रकारिता अपत्यारिलो हुन्छ । आचारसंहिताविपरीत कार्य के हुन् र किन यी कमजोरी हटाउनुपर्छ भन्ने चिन्तासम्म पनि हामीकहाँ अझै पलाउन सकेको छैन । यसर्थ नेपाली पत्रकारिताले आचारसंहितासम्बन्धी थुप्रै पक्षहरूको टड्कारो रूपमा सामना गर्नुपरिरहेको छ । जसका बारेमा केही चर्चा गरौं ।

*प्रतिबद्ध पत्रकारिता :* नेपाली पत्रकारिताले पाठक, श्रोता वा दर्शकलाई बारम्बार बिथोल्ने, बिच्क्याउने तथा दिक्दारी दिने गरेको छ । विद्वान्हरूका अनुसार प्रतिबद्ध पत्रकारिताले जिम्मेवारीको अपेक्षा गर्छ । मिसौरी विश्वविद्यालय, अमेरिकाका प्राध्यापक एडमन्ड बी. लम्वेथ आफ्नो पुस्तक कमिटेड जर्नालिजम्मा लेख्छन्- आचारसंहिताको हिसाबले पत्रकारहरूको भनाइ र आफ्नो स्वार्थअनुकूल सञ्चारमाध्यमको पुन:परिभाषाहरू वर्तमान पत्रकारिताका स्थायी स्वभाव भएका छन् । प्रतिबद्ध पत्रकारिता पत्रकार आफूले गरेका कामको दायित्वप्रति स्वीकारोक्ति चाहन्छ । तर हामी धेरै पत्रकारहरू सहजै भन्ने गर्छौं, 'म त्यसो गर्न

बाध्य थिएँ ।' यो अभिव्यक्ति आचारसंहिताका हिसाबले कमजोरी तथा पेशाका हिसाबले गैरजिम्मेवारीपनको प्रदर्शन हो ।

स्वच्छता : नेपाली पत्रकारिताको आचारसंहितासम्बन्धी सबभन्दा ठूलो कमजोरी भनेको विषयवस्तुलाई स्वच्छ र सन्तुलित ढंगले प्रस्तुत गर्न नसक्नु हो । शुद्धता, विश्वसनीय र स्वच्छ पत्रकारिता हुन नसकेको मात्र होइन, कतिपय अवस्थामा नेपाली पत्रकारिता पूर्वाग्रहीसमेत बनेको छ । पत्रकारिताका विद्वान्हरूले भनेका छन्- प्रकाशन वा प्रसारण सामग्रीहरू सिसाका झ्यालजस्ता हुनुपर्छ, जसले सूर्यका किरणलाई भित्रसम्म नै छिर्न दिन्छन् । प्रसारण वा प्रकाशन सामग्री यस्तो भएमात्र श्रोँता वा पाठकले विश्वको वास्तविक चित्र आफ्नो सामुन्नेमा पाउँछन् ।

गलत प्रतिनिधित्व : कतिपय कार्यक्रम सञ्चालक वा प्रसारकले कार्यक्रम प्रसारण गर्दा विषयवस्तु वा व्यक्तिका विचारको गलत प्रतिनिधित्व गर्ने गरेका घटना प्रशस्त छन् । अन्तर्वार्ता लिन जाँदा सैद्धान्तिक प्रश्न सोध्नु र सैद्धान्तिक हिसाबले दिएको उत्तरलाई पछि प्रसारण गर्ने बेलामा घटनाप्रधान बनाएर प्रसार गर्नु, मनगढन्ते कथा तयार गर्नु, घटनास्थलमै नपुगी स्थलगत विवरण भनेर कार्यक्रम प्रसारित गर्नु, आफैंले कुनै काल्पनिक नाम उब्जाएर प्रतिक्रिया उद्धृत गर्नु आचारसंहिता सोझै आकर्षित हुने विषय हुन् ।

आर्थिक दबाब : नेपाली रेडियो तथा छापा पत्रकारितामा सम्पादकीय विभाग तथा विज्ञापन विभागबीचको सम्बन्ध समस्याग्रस्त छ । विज्ञापन पाएकै कारण कतिपय घटनाहरू प्रसारण/प्रकाशन योग्य ठहरिन पुगेका छन् । प्रसारण संस्थाहरूको आर्थिक स्थिति कमजोर भएकै कारण हिजोआज कार्यक्रम र विज्ञापनको भेद छुट्याउने सीमारेखा ज्यादै पातलो भएको छ । कार्यक्रमसँगै झुक्किने गरी विज्ञापन बजाउनु, कार्यक्रम प्रस्तोता स्वयंले कुनै व्यापारिक उत्पादन वा वस्तुको बखान गर्नु यसको प्रष्ट

उदाहरण हो ।

*सार्वजनिक जीवन :* सार्वजनिक व्यक्तिका गलत कदमले समाजलाई पीडा दिने हुँदा पत्रकारिताले यस्ता पक्षहरूलाई उजागर गर्नुपर्छ भन्ने मान्यता छ । यो अत्यन्त सही कुरा हो । तर यस अवस्थामा हामीले बिर्सिनै नहुने कुरा के हो भने पत्रकार स्वयं सार्वजनिक व्यक्ति हो । ऊ हरेक पल-पलमा सार्वजनिक भइरहेको हुन्छ । यसको अर्थ हो- पत्रकारका गलत कदमले पनि समाजलाई पीडा दिन्छ । तसर्थ सबभन्दा पहिले त हामीले प्रसार गर्न लागेको विषयले समाजलाई पीडा दिन्छ कि दिँदैन भनेर नियाल्नुपर्छ । पत्रकारका प्रयासहरूले कसैको निजी जीवनमा हस्तक्षेप गर्नु हुन्न । त्यसो गरेको खण्डमा समाज पीडित हुन्छ ।

पत्रकारले व्यक्तिका निजी र सार्वजनिक जीवनको सीमारेखा कोर्नुपर्छ । सार्वजनिक व्यक्तिहरूले समाजमा विशेष स्थान ओगटेका हुन्छन् तर पनि उनीहरूको निजी जीवन बिताउने अधिकारको सम्मान हामीले गर्नैपर्छ । छलफलका लागि यहाँ एउटा प्रस्ताव अघि सारौं । कुनै एकजना मन्त्री हाम्रो छलफलको विषय छ । उसका कुन-कुन गतिविधि सार्वजनिक र कुनचाहिँ गतिविधि निजी भनेर हामीले छुट्याउनु छ ।

- *दृश्य नम्बर १- शनिबारको दिन, मन्त्रीज्यू यसअघि कहिल्यै सामाजिक नातासम्बन्ध नजोडिएकी महिलालाई सरकारी गाडीमा राखेर गोदावरीको कुनै लजतर्फ लाग्छन् ।*
- *दृश्य नम्बर २- रातको ८ बजे मन्त्रीज्यू सुरक्षा गार्ड साथमा लिएर भट्टी पसलमा मस्तराम छन् । राष्ट्रिय झन्डासहितको चिल्लो गाडी बाहिर सडकमा उनलाई पर्खिरहेको छ ।*
- *दृश्य नम्बर ३- मन्त्रीज्यू अनौपचारिक पोसाकमा निजी गाडीमा चढेर बिदा मनाउन कसैको साथमा घरबाट निस्कन्छन् ।*

पहिलो र दोस्रो दृश्यमा मन्त्रीज्यूले मन्त्री हुनुको अख्तियार प्रयोग गरेका छन् । सरकारी गाडी चढ्नु वा सुरक्षा गार्ड साथमा लैजानु मन्त्री

भएपछि राज्यले उपलब्ध गराएको सुविधा हो । यतिखेर सरकारी बिदाकै समय वा दिन भए पनि मन्त्रीज्यूले मन्त्रीकै अख्तियारी गरेका छन् । यो अवस्थालाई उनको निजी चर्या भन्न मिल्दैन । तर तेस्रो दृश्य अलि भिन्न छ । उनले मन्त्री हुनुको कुनै पनि सुविधा वा अख्तियारी प्रयोग गरेका छैनन् । र, उनी बिदामा छन् । यो अवस्थालाई चाहिँ उनको सार्वजनिक जीवन भन्न मिल्दैन । यसरी हेर्दा व्यक्तिको गोपनीयतालाई निर्धारण गर्ने तीनवटा तत्व छन् :

*सार्वजनिक हित :* व्यक्तिका कामकारबाहीले सार्वजनिक हितमा असर पुऱ्याएको छ भने त्यो काम निजी मामिलाभित्र पर्दैन ।

*बानीव्यवहार :* व्यक्तिको व्यवहार आपराधिक तथा असामाजिक छ भने त्यो व्यक्तिगत गोपनीयताको विषय होइन ।

*घटनास्थल :* कुनै व्यक्ति श्रीमतीसँग घरभित्र शारीरिक सम्बन्ध राख्छ भने त्यो सार्वजनिक चासोको विषय होइन । तर सार्वजनिक ठाउँमा ऊ श्रीमतीसँग शारीरिक सम्बन्ध राख्छ भने त्यो व्यक्तिगत मामिलामात्रै हुँदैन । यसरी सार्वजनिकस्थलमा भए/गरेका निजी मामिलासम्बन्धी कामकारबाही व्यक्तिगत गोपनीयताको विषय हुन सक्तैनन् ।

*विरोधाभाष :* तपाईंको मित्रता, नाता, राजनीतिक वा अन्य कुनै पदीय संलग्नता तथा पत्रकारिताबीचको स्वार्थ प्रष्ट बाझ्छ । एउटा पत्रकार कुनै कम्पनीको प्रेस सल्लाहकार छ भने उसले त्यो कम्पनीले उपभोक्तामाथि गरेको ठगी लेख्न सक्छ ? तपाईंले काम गर्ने रेडियोको बोर्ड सदस्य कुनै पार्टीको जुलुसमा दिनभरि सहभागी भएको छ भने तपाईं त्यो समाचारलाई बड्याइँचड्याइँ नगरी दिन सक्नुहुन्छ ? तपाईंको

ज्वाइँ उच्चपदस्थ अधिकारी छ र उसले करोडौंको भ्रष्टाचार गरेका तथ्यहरू फेला परेका छन् । के तपाईं छाप्न सक्नुहुन्छ ? यस्ता अनगिन्ती अवस्थाहरू हुन सक्छन्, जुन पत्रकारिताको पेशागत धर्मसँग मेल खाँदैनन् र तपाईंको पेशागत इमानदारी संकटमा पर्नसक्छ । यस्तो विरोधाभाषबाट जोगिन पत्रकारले कुनै पनि घटनामा पत्रकारका रूपमा सहभागी हुनुपर्छ, सहकर्मीका रूपमा होइन ।

*निराकार स्रोत :* नेपाली पत्रकारितामा स्रोतको प्रयोग र दुरुपयोग दुवै हुने गरेको छ । पत्रकारितामा चल्तीका केही शब्दहरू छन्, जसको आकार र स्वरूप केही हुँदैन । पत्रकारितामा प्रयोग भइरहेका यस्ता निराकार स्रोतहरू हुन्- पर्यवेक्ष्ँक, जिम्मेवार निकाय, प्रत्यक्ष्ँदर्शी, टिप्पणीकार, सूत्र, विशेषज्ञ, बुद्धिजीवी आदि-इत्यादि । कार्यक्रम उत्पादक वा रिपोर्टर स्वयंलाई कहिल्यै थाहा नहुने यी निराकार स्रँतको लगातार प्रयोगले स्टेशनको विश्वसनीयता घटाउँछ । श्रोतामा नकारात्मक छाप पर्दै जान्छ ।

पत्रकारहरूले स्रोत खुलाउन बाध्य हुनु नपर्ने अधिकार कानुनले नै प्रत्याभूत गरको छ । यसको मतलव जे मन लाग्छ त्यो प्रसारण गर्ने भन्ने होइन । हामीले कुनै कुरा प्रसारण गर्दा निश्चित प्रमाणहरू हुनैपर्छ । मनगढन्ते कुरा लेख्न मिल्दैन । कानुनले प्रत्याभूत गरेको स्रोत गोप्य राख्ने भनेको समाचार वा सामग्री प्रसारण गर्दा प्रसारकसँग प्रमाण हुन्छन् ती प्रमाण कहाँबाट र कसरी फेला परेको हो भन्ने स्रोतमात्र खुलाउनु नपर्ने अधिकार हो । तर प्रसारित सामग्री विवादास्पद भएमा त्यसको प्रतिरक्ष्ँाका लागि प्रसारकले प्रमाणहरू भने पेश गर्नैपर्छ भन्ने कुरालाई बिर्सिन हुन्न ।

*उपहार :* उपहारले मान्छेलाई पक्ष्ँपाती बनाउँछ । जसले उपहार ग्रहण गर्छ, उसले जानेर वा नजानीकनै उपहार दिनेको पक्षपोषण गर्न थाल्छ । यो मानवीय कमजोरी नै हो । कुनै हेलिकप्टर कम्पनीले

कम्पनी उद्घाटनका दिन केही पत्रकारलाई नि:शुल्क हिमाली क्षेत्रको उडान गराउन सक्छ अथवा कुनै विकासे संस्थाले आफ्ना गतिविधिको प्रचारका लागि तपाईंलाई विभिन्न स्थानमा आरामदायी भ्रमण गराउन सक्छ । यसरी उपहार दिने वा प्रायोजन गर्नेले जहिले पनि आफूसँग सम्बन्धित घटनाको सकारात्मक पक्षमा प्रसारण वा प्रकाशनको अपेक्षा राखेको हुन्छ । यस्तो अवस्थामा पत्रकारका सामुन्ने केही नैतिक प्रश्नहरू खडा हुन्छन् । के त्यो घटना वा विषय प्रायोजक नभेटिएको भए पनि प्रसारण गर्न लायक थियो ? के संस्थाले आफ्नै खर्चमा पठाएको भए पनि तपाई विषयवस्तुलाई त्यत्तिकै महत्त्वका साथ लेख्नुहुन्थ्यो ? के तपाईले प्रायोजक वा उपहार भेट्नुभो भन्दैमा श्रोताले तपाईंका बकवासलाई स्वीकार्नैपर्छ ? तपाईं पत्रकारितापूर्ण व्यवहार गर्दै हुनुहुन्छ कि हुन्न ?

*समाचार रोक्ने :* पत्रकारले निश्चित आर्थिक प्रलोभन वा सुविधा प्राप्तिका लागि समाचारलाई लुकाउनु हुँदैन । उदारहण लिऔं- कुनै निजी कम्पनीले उत्पादन गर्ने तेल जनस्वास्थ्यका लागि हानीकारक छ भनी गुणस्तर तथा नापतौल विभागले परीक्षणपछि तथ्य सार्वजनिक गऱ्यो । यो कुरा थाहा पाएर तेल उत्पादक कम्पनीले म विज्ञापन दिन्छु त्यो समाचार नछापिदिनुहोस् भनेर तपाईंलाई अनुरोध गर्न सक्छ । यस्तो अवस्थामा त्यो समाचार दबाउनु आचारसंहिताविपरीत हो । तर उपभोग्य वस्तु उत्पादन गर्ने कुनै सार्वजनिक संस्थानको उत्पादन निरीक्षण गर्दा कमसल खालको पाइयो र निरीक्षण टोलीको रिपोर्ट पाउनेबित्तिकै संस्थानले आफ्नो सम्पूर्ण उत्पादन बजारमा नपठाई डम्प गऱ्यो भने तपाईंले यो समाचार प्रकाशित नगर्नु राम्रो हुन्छ । यो समाचारले प्रसारित भएमा त्यो सार्वजनिक कम्पनीको साख गिराउन सक्छ, जसले गर्दा अरू व्यापारीलाई बढी फाइदा हुन्छ । सार्वजनिक प्रयास र लगानीलाई हतोत्साही नगर्नु पनि पत्रकारको एउटा कर्तव्य हो । यदि यो संस्थानले आफ्नो कमसल उत्पादन डम्प गर्ने निर्णय नगरेको भए तपाईंको कर्तव्य भनेको उपभोक्ता नठगिउन् भनी सजग गराउनु हो ।

*सामग्रीको प्रयोग :* प्रसारणका समयमा हामीले पहिल्यै सार्वजनिक भइसकेका केही सामग्रीहरू प्रयोगमा ल्याउनुपर्ने हुन्छ । अरूले गरेका अनुसन्धान वा रचना वा विचारहरू प्रयोग गर्दा कसरी गर्ने भन्ने सन्दर्भ पनि आचारसंहिताको विषय हो । रेडियो प्रसारकले कुनै संगीत रेडियो डकुमेन्ट्रीमा प्रयोग गर्दा प्रतिलिपिसम्बन्धी अधिकारलाई कसरी हेर्ने ? पुरानो सामग्री दोहोर्‍याउँदा श्रोतालाई भ्रम नपर्ने गरी कसरी प्रसारण गर्ने ? यी प्रश्नहरूमा घोत्लिँदा अरूका अनुसन्धान र विचारलाई उद्धृत नगरीकन भन्नु भनेको आचारसंहिताविपरीत मात्र नभएर गैरकानुनीसमेत हुन्छ (हेर्नुहोस् यसै पुस्तकको पाँचौं अध्याय: आचारसंहिता र कानुनी सन्दर्भ) । कुनै विचार, धर्म, समाचार, सञ्चालन विधि, अवधारणा, सिद्धान्त, अदालतको फैसला, प्रशासनिक निर्णय, लोकगीत, लोककथा, उखान, उखान टुक्का र सामान्य तथ्यांकजस्ता विषयवस्तुमा भने प्रतिलिपि अधिकारको संरक्षण हुँदैन । तर अर्काको प्रस्तुतिलाई उसको नाम उल्लेख नगरीकनै हुबहु वाचन गर्नु ठीक होइन ।

*सार्वजनिक प्रयास :* सामूहिक, सहकारी वा सार्वजनिक प्रयासहरूलाई सधैं सकारात्मक रूपमा हेर्नुपर्छ । वर्तमान नेपाली पत्रकारिता सार्वजनिक प्रयासहरूको विरुद्धमा ज्यान फालेर नै लागेको छ । पत्रकारहरूलाई व्यक्तिगत फाइदाका लागि काम गर्ने व्यापारीहरूले विभिन्न ढंगले प्रयोग गरेकै कारण यो अवस्था सिर्जना भएको हो । उदाहरणका लागि शाही नेपाल वायुसेवा निगम र सरकारी स्कुलहरू लिन सकिन्छ । व्यापारीहरूले बोर्डिङ स्कुल तथा विमान कम्पनीहरू खोलेपछि यी सार्वजनिक संस्थाप्रति नै पत्रकारिताले बारम्बार नकारात्मक आक्रमण गरेको छ । सार्वजनिक संस्थानका पदाधिकारीहरूले गरेका कमजोरी, भ्रष्टाचार र अख्तियार दुरुपयोगजस्ता कुरा प्रसारणयोग्य सामग्री हुन् । तर संस्थानकै समग्र साख गिराएर सर्वसाधारणप्रति अविश्वास पैदा गर्नु, त्यहाँ कार्यरत सम्पूर्ण कर्मचारीको मनोबल गिराउनु र सार्वजनिक प्रयासकै अस्तित्वलाई संकटमा पार्नु दुर्भाग्यपूर्ण कुरा हो ।

*प्रसारण समय :* कुन सामग्री वा सन्देश कुन समयमा प्रसारण गर्ने भन्ने कुरामा पनि आचारसंहिता लागू हुन्छ । एकाबिहानै कन्डमको विज्ञापन गर्नु नैतिक कुरा होइन । एकाबिहानैदेखि गरिने यस्ता प्रचारले युवाहरूमा यौन भावना बढाएर बलात्कारका घटना बढाउन सक्छ, बालबालिकाको मनमस्तिष्कमा नराम्रो छाप पार्न सक्छ, पारिवारिक वा सामाजिक हिसाबले असहज हुन सक्छ । तसर्थ प्रसारणका लागि सामग्रीको समय निर्धारण सही ढंगले गर्नुपर्छ ।

*बलात्कार तथा एड्स :* बलात्कार तथा एड्स रोग पीडितजस्ता विषयहरू आचारसंहिताका हिसाबले अत्यन्त संवेदनशील हुन्छन् । बलात्कृत महिला वा एड्स रोगी दुवै पीडित हुन् । उनीहरूको घटना लिएर उनीहरूकै हितमा आवाज उठाउँदासमेत पीडितमाथि नै अर्को पीडा थपिने स्थिति छ । यस्तो अवस्थामा आचारसंहिता निकै दुविधामा पर्छ । यो अवस्थासँग व्यक्तिको जीवन र मृत्युको कुरा जोडिएको हुन्छ । माया र घृणाको कुरा टड्कारो रूपमा देखा पर्छ । परिवार, छरछिमेक तथा समाजको सहयोग वा तिरस्कारको कुरा सन्दर्भ प्रधान बनेर आउँछ ।

यी व्यक्तिगत र पीडादायी घटनालाई कसरी उल्लेख गर्ने ? हामी कुन हदसम्म व्यक्तिप्रति इमानदार हुने ? विषयवस्तुप्रति कसरी सम्मान दर्शाउने ? आचारसंहितासम्बन्धी यस्ता अनगिन्ती प्रश्नहरू उठ्ने गर्छन् । यस्तो बेलामा हामीले अत्यन्त सावधानीपूर्वक निर्णय लिनुपर्छ ।

# आचारसंहिता : क्षेत्रहरू

सर्वस्वीकार्य कुरा हो- कमजोर वर्ग वा व्यक्तिलाई कानुनले शासन गर्छ । तर यसको ठीक विपरीत शक्तिशाली वर्ग वा समूहले कानुन स्वयंलाई शासन गर्छ । पत्रकार, डाक्टर, वकिल, लेखा परीक्षँकहरू समाजका शक्तिशाली वर्ग भित्र पर्छन् । त्यसैले उनीहरूका कामकारबाहीलाई सामान्यतः कानुनले शासन गर्न सक्तैन । यसर्थ यस्ता वर्गलाई अराजक हुनबाट रोक्न आचारसंहिता चाहिन्छ । पत्रकारका लागि आवश्यक सामाजिक, संस्थागत, वैयक्तिक तथा भाषिक संहिताका बारेमा यहाँ केही व्याख्या/विश्लेषण गरौं ।

## (क) सामाजिक संहिता

दोस्रो विश्वयुद्धको लगत्तै पछिदेखि पत्रकारिता क्षँत्रमा सामाजिक उत्तरदायित्वको सिद्धान्त प्रतिपादन भएको छ । सामाजिक उत्तरदायित्वको सिद्धान्तअनुसार पत्रकारहरूले विविध विचारहरूलाई प्रवाहित गर्नेमात्र होइन, तिनीहरूलाई जिम्मेवारीका साथ व्याख्या र विश्लेषण पनि गर्नुपर्छ । यो कार्य गर्न तपाईंका सामुन्नेमा कानुन हुँदैन, कुनचाहिँ उचित तथा उत्तरदायित्वपूर्ण हो भनी छुट्याउन तपाईंको विवेक र चेतनाको प्रयोग जरुरी हुन्छ । यसर्थ पत्रकारले बढीभन्दा बढी सामाजिक उत्तरदायित्व निर्वाह गर्नुपर्छ ।

*कार्यक्रमको प्रकृति*

- श्रँताप्रतिको दायित्व बोध गर्ने खालका कार्यक्रमहरू उत्पादन तथा प्रसारण गर्ने,
- सत्यको सधैं सम्मान गर्ने,
- श्रँताहरू विभिन्न रुचि र चाखका हुन्छन् भन्ने तथ्यलाई स्वीकार गरी कार्यक्रममा विविधता दिने,

- श्रोतालाई उनीहरूको खुबी र चाहनाहरू प्रदर्शन गर्ने, अनुभव आदान-प्रदान गर्ने र सहभागिता बढाउने खालका कार्यक्रम निर्माण गर्ने,
- श्रोतामा सकारात्मक सोचाइ तथा धारणाको विकास गराउने ।

*समाचार*

- समाचार तथ्यहरूमा आधारित र पूर्वाग्रहरहित हुनुपर्छ, यो वास्तविक र स्वच्छ हुनुपर्छ,
- समाचार लेखन तथा सम्पादन कार्यले श्रोतालाई भ्रमित वा गलत रूपमा प्रभावित पार्नुहुँदैन,
- विवादास्पद सार्वजनिक घटनाहरूमा सबै पक्षका कुराहरू सावधानीपूर्वक केलाउने,
- समाचार र सम्पादकीय विचारबीच नझुक्किने गरी प्रसारण गर्ने
- प्रसारणमा भएका गल्ती-कमजोरीलाई तत्काल स्वीकार गर्ने तथा सच्याउने,
- सन्दर्भ अति आवश्यक परेका बेलामा मात्र घटनासँग सम्बन्धित व्यक्तिको जात, धर्म, राष्ट्रियता तथा पूर्वसार्वजनिक हैसियतहरू खुलाउने,
- समाचारलाई सनसनीपूर्ण बनाएर प्रसारण नगर्ने,
- समाचारमा विचार वा प्रतिक्रिया समावेश नगर्ने ।

*बालबालिका*

बाल कार्यक्रम सामाजिक अवधारणामा आधारित हुनुपर्छ । बालबालिका सामाजिकीकरणको प्रक्रियामा भर्खर-भर्खर सामेल भएका हुँदा उनीहरूलाई उचित र अनुचित, आवश्यक र अनावश्यकजस्ता कुरा थाहा हुँदैन । त्यसैले उनीहरूलाई शिक्षाको जरुरत पर्छ, सही मार्गनिर्देशन चाहिन्छ । उनीहरूलाई सामाजिक प्रवृत्ति, रुचि तथा व्यवहारहरूतर्फ प्रेरित गर्नुपर्छ । अधिकार र दायित्वका बारेमा सजग गराउनुपर्छ । सामाजिक मूल्य, मान्यता, नैतिकता तथा कानुनी मापदण्डहरूसँग परिचित गराउनुपर्छ ।

घटनावस्तुलाई असाधारण रूपले सरल बनाएर प्रस्तुत गर्दा बालबालिका त्यस्तो काम गर्न प्रेरित हुन्छन् । जसले गर्दा कतिपय अवस्थामा बालबालिकाको ज्यान जाने खतरा पनि सिर्जना हुन्छ । उनीहरू असम्भव कुराको खोजीमा भौतारिन थाल्छन् । तसर्थ तल बुँदागत रूपमा वर्णन गरिएका विषयवस्तुलाई कार्यक्रममा समावेश गर्नुहुँदैन ।

- बालबालिकाको मानसिक, शारीरिक र चारित्रिक नोक्सानी हुने खालका विषयवस्तुहरू,
- ज्ञान र विवेकको अभावमा देखा पर्ने बालशुलभता, लगाव र संवेदनशीलताको शोषण गर्ने खालका विषयवस्तुहरू,
- नयाँ तया अनौठो ठाउँमा जान तथा खतरनाक कामकारबाहीमा संलग्न हुन प्रेरित गर्ने खालका विषयवस्तुहरू,
- बालबालिकालाई तुच्छ र कमजोर रूपमा चित्रण गर्ने खालका विषयवस्तुहरू,
- बालबालिकाको संवेग र अनुभूतिलाई अस्वभाविक रूपमा उत्तेजित गराउने खालका हत्या, हिंसाजस्ता जघन्य घटना वर्णनहरू र
- स्वास्थ्यलाई हानि गर्ने उत्पादन तथा पदार्थहरू र धूमपान, मादक पदार्थ सेवनजस्ता कुलततर्फ प्रेरित गर्ने खालका विषयवस्तुहरू ।

### *किशोरकिशोरी*

किशोरकिशोरीमा उच्चसंवेग हुने हुँदा उनीहरूका सामुन्ने शारीरिक तथा मानसिक खतराहरू हुन्छन् । ती खतराबाट जोगाउन मार्गनिर्देश गर्ने खालका कार्यक्रमहरू उत्पादन तथा प्रसारण गर्नुपर्छ । उनीहरूलाई ठीक बेठीक छुट्याउने, तर्क दिने र तथ्य संकलन गर्नेजस्ता कार्यमा उचित सल्लाह चाहिन्छ । केही कुरा बुझेको तर पूर्ण परिपक्कता आइनसकेको उमेर भएकाले प्रसारकले उनीहरूलाई सामाजिक दायित्वप्रति सजग गराउँदै भविष्य निर्माण गर्न मद्दत पुग्ने खालका कार्यक्रमहरू उत्पादन र प्रसारण गर्नुपर्छ ।

*सामुदायिक गतिविधि*

- रेडियो स्टेसन रहेको समुदायका इच्छा, आकांक्षा र गतिविधिहरूलाई अधिकतम स्थान दिने,
- समुदायको समग्र हितप्रति प्रतिबद्ध रहने,
- समुदायका गर्व र पहिचानहरूलाई फैलाउने र
- स्थानीय विवेक, ज्ञान र सीपको पहिचान, परिमार्जन तथा प्रबर्द्धन गर्ने ।

*अशक्त/असहायः*

- अन्धा-अपाङ्गपनलाई भयानक शारीरिक दुर्वलताका रूपमा व्याख्या नगर्ने,
- उनीहरूलाई अपमानित वा हैँला गर्ने खालका वाक्य तथा विषयवस्तुहरू प्रसारण नगर्ने र
- उनीहरूलाई सामाजिक बोझका रूपमा चित्रित नगर्ने ।

*मानवअधिकार*

- मानवतालाई अवमूल्यन गर्ने खालको सन्देश प्रसारण नगर्ने,
- व्यक्ति तथा समूहको गरिमालाई अपमानित नगर्ने,
- व्यक्तिका निजी जीवनमा हस्तक्षेप नगर्ने,
- मान्छेको ओसार-पसार तथा देहव्यापारजस्ता गतिविधिलाई बढाउने खालका सामग्री नदिने,
- जात, धर्म, लिंग, उमेर, पेशा तथा राष्ट्रियताका आधारमा कसैलाई विभेद नगर्ने र
- व्यक्तिको बाँच्न पाउने नैसर्गिक अधिकार हनन नगर्ने ।

*कानुन तथा सार्वजनिक निकाय*

- कानुनी प्रावधानहरूलाई सम्मान गर्ने,
- कानुनको कार्यान्वयनमा कुनै प्रकारको हस्तक्षेप नगर्ने,

- कानुनद्वारा संरक्षित सार्वजनिक वा सरकारी निकायहरूलाई कलंकित वा अपमानित नगर्ने,
- परराष्ट्र सम्बन्धसँग सरोकार राख्ने विषयप्रति संवेदनशील रहने,
- राष्ट्रिय तथा जातीय विषयमा जनताका संवेदना र अनुभूतिहरूमाथि प्रहार नगर्ने,
- अदालतमा विचाराधीन रहेका मुद्दालाई प्रभावित पार्ने खालका कार्यहरू नगर्ने र
- अदालतप्रति अनास्था फैलाउने काम नगर्ने ।

*परिवार र समाज*

- पारिवारिक जीवनप्रति आदर गर्ने,
- विवाह, कूलपूजा, चाडपर्वजस्ता सामाजिक कार्यहरूप्रति घृणा फैलाउने वा सामाजिक तनाव ल्याउने खालका कार्य नगर्ने,
- सामाजिक संरचना, नैतिकता तथा आचरणहरूप्रति ग्लानि थप्ने वा अनास्था फैलाउने खालका कार्य नगर्ने र
- साझा सामाजिक अभ्यास, परम्परा तथा आकांक्षाहरूलाई सम्मान गर्ने ।

*शिक्षा र संस्कृति*

- सांस्कृतिक अभ्यासहरूलाई शिक्षाको प्रक्रियाबाट समयअनुसार परिमार्जन गर्ने,
- सांस्कृतिक सम्पदाको संरक्षण, परिस्कार तथा प्रवर्द्धन गर्ने,
- दैनिक जीवनका ज्ञान तथा सीपहरूलाई अझ व्यापक बनाउने,
- सामाजिक समझदारी तथा सामान्जस्य कायम राख्न मद्दत गर्ने,
- सामाजिक तथा स्कुलमुखी शैक्षिक कार्यक्रमहरू प्रसारण गर्दा मुलुकको बृहत्तर सांस्कृतिक विकासलाई ध्यान दिने र
- व्यक्तिका मानसिक तथा सिर्जनात्मक क्षेत्रको विकास गराउने ।

*धर्म*

- धार्मिक विश्वास तथा सबै सम्प्रदायले आ-आफ्नो दृष्टिकोण राख्न पाउने स्वतन्त्रताको सम्मान गर्ने,
- कुनै धर्म वा सम्प्रदायप्रति आक्षेप लगाउने खालका सामग्री प्रसारण नगर्ने,
- धार्मिक चलन र संस्कारहरू ठीक बेठीकको कसीमा राखिनुपर्ने विषय होइनन्, यी व्यक्तिका आस्था र विश्वाससँग सम्बन्ध राख्छन् भन्ने तथ्यलाई स्वीकार गर्ने,
- कुनै निश्चित धर्मलाई प्रचार-प्रसार गर्ने खालका सामग्री प्रसारण नगर्ने र
- धार्मिक कार्यक्रम प्रसारण गर्दा आध्यामिक सामान्जस्य र मानवतालाई बढाउने खालका सामग्री प्रसारण गर्ने ।

*हिंसा/आतंक*

- जस्तोसुकै उद्देश्यका लागि गरिने भए पनि हिंसा र आतंकको विपक्षमा उभिने,
- हिंसा र आतंकको वर्णन सीमित वा ज्यादै कम गर्ने,
- महिला, बालबालिका, अशक्त तथा अल्पसंख्यक समूहविरुद्धको हिंसाप्रति अतिसंवेदनशील हुने,
- हिंसा र आतंकलाई गौरवपूर्ण घटनाका रूपमा प्रस्तुत नगर्ने र
- हत्या, यातना, आक्रमणलगायत मानसिक तथा शारीरिक दुवैखाले अमानवीय कार्यलाई हतोत्साहित गर्ने ।

*अपराध*

- अपराधलाई सकारात्मक रूपमा चित्रित नगर्ने,
- अपराधीहरूलाई बहादुरको संज्ञा नदिने,
- अभियुक्तहरूलाई अदालतले दोषी नठहर्‍याएसम्म अपराधीको कोटीमा राखेर प्रचार-प्रसार नगर्ने,

- जुवा, तास, लागू औषध ओसार-पसार तथा सेवनजस्ता घटनालाई आकर्षक रूपमा प्रस्तुत नगर्ने र
- अपहरणजस्ता आपराधिक कार्यको विवरण दिँदा अपहरणका प्रक्रिया तथा तरिकाहरूको विस्तृत व्याख्या नगर्ने ।

*यौन*

- यौन शिक्षँाका नाममा यौन गतिविधि र यौन वस्तुहरूको बखान नगर्ने,
- यौनसम्बन्धी विषयवस्तु प्रस्तुत गर्दा श्रँतालाई असहज लाग्ने वा उत्तेजित गराउने खालको हुनुनहुने र
- प्रस्तोताहरूले प्रसारणमा अश्लील प्रवृत्ति नदेखाउने ।

*पुरस्कार*

- पुरस्कारका लागि उत्कृष्ठता छनोट गर्दा व्यक्तिका क्षँमता र सीपको सही मूल्यांकन गर्ने,
- पुरस्कार दिँदा जनस्वास्थ्यलाई हानि पुऱ्याउने खालका सामग्री नदिने,
- पुरस्कारको राशि तत्कालीन सामाजिक जीवनशैलीलाई अस्वभाविक रूपमा प्रभावित पार्ने गरी नराख्ने,
- कार्यक्रम उत्पादन तथा प्रसारण लागतभन्दा बढीको पुरस्कार राशि हुनुहुँदैन । यसो भएको खण्डमा त्यो कार्यक्रमबाट निश्चित सन्देश दिने वा कार्यक्रम स्तरीय बनाउनेभन्दा पनि एक प्रकारको जुवा खेलाउनेजस्तो हुन्छ र
- श्रोता सहभागी हुने यस्ता प्रतियोगितात्मक कार्यक्रममा सहभागिताको समय, छनोट प्रक्रिया, पुरस्कारको वस्तु तथा परिणाम घोषणा गरिने तरिका र, समय सार्वजनिक गर्ने ।

*गोपनीयता*

- राष्ट्रले अवलम्बन गर्ने रणनीतिहरूमध्ये केही अति नै गोप्य कार्यहरू हुन्छन् भन्ने कुरालाई स्वीकार गर्ने,
- देश रक्षाका लागि लिइने परराष्ट्र नीति तथा फरार अपराधीको खानतलासीका लागि अपनाइएका रणनीतिहरू थाहा भइहाल्यो भने पनि तत्काल सार्वजनिक नगर्ने र
- सामरिक महत्त्वका केही विषयहरू राज्यले अति गोप्य राख्न पाउँछ र उसले यी कुरा सार्वजनिक गर्न बाध्य हुनुपर्ने अधिकारको सम्मान गर्ने ।

*राजनीति*

- रेडियो प्रसारक सक्रिय दलगत राजनीतिमा संलग्न नहुने,
- राजनीतिक गतिविधिलाई निष्पक्ष रूपमा हेर्ने, कुनै निश्चित दलको पक्षपाती नहुने,
- निर्वाचनका समयमा निश्चित दलको पक्षमा मतदातालाई प्रभावित पार्ने खालका सामग्री प्रसारण नगर्ने,
- निर्वाचनका लागि गरिएका मत सर्वेक्षणहरू दिँदा सर्वेक्षण कत्रो समूहमा गरिएको हो र सर्वेक्षण तरिका कस्तो थियो भन्ने कुरा पनि खुलाउने,
- राजनीतिक तथा आर्थिक क्रिया-प्रतिक्रियामा जिम्मेवार र आधिकारिक स्रोत उल्लेख गर्ने र
- पार्टी वा नेताका व्यवहारगत कमजोरीले सिर्जना गरेका अन्योलहरूलाई राजनीतिक सिद्धान्त वा व्यवस्थाकै कमजोरीका रूपमा व्याख्या नगर्ने ।

*जनस्वास्थ्य*

- सुन्दरता, स्वास्थ्यसम्बन्धी कार्यक्रम चलाउँदा प्रसारित सामग्रीहरूको वैज्ञानिक आधारमा प्रष्ट हुने,

- कार्यक्रम प्रस्तोताले दीर्घ रोग-व्याधीका बिरामीलाई आवश्यक र तत्काल उपचारमा लाग्न प्रेरित गर्ने,
- सुन्दरतासम्बन्धी कार्यक्रम चलाउँदा कार्यक्रममा वर्णन गरिने सामग्रीको 'साइड इफेक्ट' का बारेमा समेत श्रोतालाई सचेत गराउने,
- अर्थ बुझ्न गाह्रो पर्ने शब्दहरू सामान्यतया प्रयोग नगर्ने,
- डाक्टरको सल्लाहबिना औषधि पसलबाट सोझै औषधि किनेर सेवन गर्ने कार्यले जनस्वास्थ्यमा पार्ने भयावह परिणामप्रति सचेत गराउने,
- जनस्वास्थ्यलाई महँगो बनाउने, हानि पुऱ्याउने तथा अनुपयोगी औषधि तथा भिटामिनको प्रयोगलाई दुरुत्साहित गर्ने र
- औषधिहरूको विवेकपूर्ण प्रयोग गर्न स्वास्थ्यकर्मी तथा सर्वसाधारणलाई बारम्बार अपिल गर्ने ।

## (ख) संस्थागत संहिता

*सहकार्य :* रेडियो कार्यक्रम भनेको सामूहिक प्रयास हो । प्रसारणका लागि तोकिएको समयमा सामग्री तयार गर्नु अनिवार्य हुन्छ । कार्यक्रम संकलन, सम्पादन, रेकर्डिङ तथा प्रस्तुतिका लागि अलग-अलग सीप र क्षमता भएका व्यक्तिहरू मिलेर काम गर्नुपर्छ । एकले अर्कालाई उत्तिकै आदर तथा सम्मान गर्ने, विश्वास गर्ने, पारस्परिक सहयोगको भावना कायम राख्ने तथा आपसी सञ्चार र छलफललाई प्रोत्साहन दिनु जरुरी हुन्छ । सबैको भूमिका उत्तिकै कदरयोग्य हुनुपर्छ । हाकिम र कारिन्दा, मालिक र नोकरजस्ता सम्बन्धले सहकार्यलाई समस्याग्रस्त बनाउँछ । सहकर्मीहरूलाई जात वा लिंगका आधारमा हेप्ने, हतोत्साहित गर्ने वा आफ्नो बडप्पन प्रदर्शन गर्नुले सहकार्यलाई नराम्ररी बिथोल्छ ।

*समयनिष्ठ :* रेडियोमा कार्यक्रम प्रसारणका लागि अग्रिम रूपमा समय सार्वजनिक गरिएको हुन्छ । समय तालिकाअनुसार निर्धारित

कार्यक्रम उत्पादन भइसक्नुपर्छ । त्यसो नभएको खण्डमा रेडियो प्रसारण अवरुद्ध हुनसक्छ वा पूर्वनिर्धारित कार्यक्रमभन्दा अलग्गै सामग्री प्रसारण गर्नुपर्ने हुन्छ । यस्तो अवस्था स्टेसनको विश्वसनीयताका हिसाबले राम्रो होइन। पल-पलको समेत महत्त्व राख्ने विशेषता बोकेको रेडियोमा कार्यरत सञ्चारकर्मीहरू समयप्रति अत्यन्त निष्ठावान हुनुपर्छ ।

*निर्णयको सामना :* संस्थालाई व्यवस्थित ढंगले चलाउन संगठन र व्यवस्थापन चाहिन्छ । संगठन र व्यवस्थापनले संस्थाको कार्यविधि तय गर्छ, कार्यशैली निर्देशित तथा कार्यँन्वित गर्छ । यस्तो कार्य सम्पादनका लागि निश्चित संरचना चाहिन्छ। त्यहाँ विभागहरू हुन्छन् र पदीय संरचना हुन्छन् । यो संरचनाअनुसार व्यक्तिका काम, कर्तव्य र अधिकार फरक-फरक हुन्छन्। कामको सिलसिलामा एउटै टिम हुँदाहुँदै पनि विभागीय सम्बन्ध कायम गर्नुपर्ने हुन्छ। व्यक्तिका पदीय कर्तव्य र अधिकारहरूलाई सम्मान गर्नुपर्छ । व्यवस्थापनले निर्धारण तथा निर्देशन गरेका कार्यविधि, नियम तथा कार्ययोजनाहरूलाई सफल पार्नु प्रत्येक पत्रकार वा कर्मचारीको कर्तव्य हो ।

*स्टेसनको साख :* कार्यक्रम निर्माण वा उत्पादनका बेला प्रत्येक प्रस्तोता वा उत्पादकले आफू रेडियो स्टेसनकै प्रतिनिधित्व गरिरहेको छु भन्ने ठान्नुपर्छ । कार्यक्रम उत्पादक वा प्रस्तोताले गर्ने सामान्य कमजोरीले सिङ्गो स्टेसनको साख वा विश्वसनीयता गुमाउन सक्छ। तसर्थ सामग्री संकलन, लेखन, सम्पादन र रेकर्डिङका समयमा सम्पर्क गर्नुपर्ने व्यक्ति, पदाधिकारी तथा संघ-संस्थाहरूप्रति आदर र सम्मान गर्नुपर्छ। उनीहरूको अधिकार क्षैत्रको ख्याल गर्नुपर्छ। श्रोँतालाई सधैं केन्द्रविन्दुमा राख्नुपर्छ, श्रद्धा गर्नुपर्छ। प्रविधिले साथ दिन्छ भन्दैमा कसैको विचार वा प्रतिक्रियालाई बंग्याउनु हुँदैन। व्यक्तिविशेषलाई सम्बोधन गर्ने भाषा विभेद गर्ने वा चाकरीशैलीको हुनुहुँदैन । व्यक्तिविशेषप्रति सहानुभूति जनाउने होइन सबैप्रति सम्मानुभूति दिलाउने खालको भाषा प्रयोग गर्नुपर्छ ।

*गोपनीयता :* तपाईंले काम गर्ने स्टेसनका प्रतिस्पर्धी स्टेसनहरू हुनसक्छन् । ती स्टेसनसँगको प्रतिस्पर्धामा आफू सफल वा उत्कृष्ट हुन प्रत्येक स्टेसनले निश्चित रणनीति अवलम्बन गरेको हुन्छ । आफू कार्यरत स्टेसनका कार्यक्रम तथा विज्ञापन रणनीतिहरू थाहा हुनसक्छ वा सामूहिक छलफलद्वारा तयार पारिएको हुनसक्छ । त्यस्ता रणनीतिहरू तपाईंले स्टेसनको हितका लागि अति गोप्य राख्नुपर्छ ।

*स्टुडियो परिसर :* स्टुडियो परिसरभित्र अनाधिकृत व्यक्तिहरूलाई हातहतियारसहित प्रवेश गर्न दिनुहुँदैन, होहल्ला गर्नुहुँदैन । मादक पदार्थ खाएर कुनै पनि कार्यक्रम उत्पादक वा कर्मचारी स्टेसन जानुहुँदैन । आगन्तुक वा बालबालिकालाई स्टुडियो घुमाउँदा स्टेसनको कर्मचारी वा स्वयंसेवक साथमा जानुपर्छ । उपकरणहरूको संवेदनशीलतालाई विचार गरी सरसफाइ गर्नुपर्छ । खानेकुराहरू स्टुडियोभित्र लानुहुँदैन । काम सिद्धिएपछि उपकरणहरू उपयुक्त ढंगले थन्क्याउनुपर्छ । स्टुडियोका उपकरणहरू बाहिरफेर लानु हुँदैन । तोकिएको दक्ष व्यक्तिले मात्र उपकरण चलाउनुपर्छ ।

## (ग) वैयक्तिक संहिता

रेडियो अनुहार नदेखिने माध्यम हो । तपाईंले रेडियोबाट दिने कार्यक्रमको प्रभावकारिता वा परिपक्वताका आधारमा श्रोताले रेडियोको छवि तथा तपाईंको व्यक्तित्वका निश्चित दृश्यहरू आफ्नो मानसपटलमा खिचेका हुन्छन् । यी दृश्यमा तपाईंको व्यवहार, कार्यशैली, इमानदारीको झल्का हुन्छ । यसै आधारमा तपाईंलाई आदर र श्रद्धा गर्नेहरू पनि हुन्छन् । तर व्यक्तिगत जीवनमा आइपर्ने उठबस, संगत तथा कारोबारहरूबाट यस खाले प्रभाव छोड्न सकेन भने सञ्चारकर्मीप्रति मात्र होइन स्टेसनको विश्वसनीयतासमेत घट्न सक्छ । तसर्थ आफ्नो तथा स्टेसनको छविमाथि शंका र कलंक नलगाउन स्टेसनबाहिर पनि त्यस्तै भद्र व्यवहार गर्नुपर्छ । यसैअनुसार सञ्चारकर्मीले आफ्ना सामाजिक

तथा सार्वजनिक आचरणहरू निर्धारण गर्नुपर्छ । समाजले अनैतिक ठानेका कार्यहरूमा तपाईंको संलग्नता हुनुहुन्न । तपाईंका व्यवहारहरू दैनिक तथा निजी जीवनमा पनि त्यत्तिकै अनुकरणीय हुनुपर्छ ।

## (घ) भाषिक संहिता

### भाषा

*भाषाका मूलत :* पाँचवटा काम छन्- पुर्ख्यौली विवेक, ज्ञान र सीपको हस्तान्तरण, भावना र विचारको आदान-प्रदान, अवसर र सम्भावनाको सिर्जना, संस्कृतिको अभिव्यक्ति तथा आत्मागौरवको अनुभूति । रेडियो प्रसारकहरूले प्रसारणका लागि भाषा छनोट गर्दा भाषाको स्थानीय प्रचलन र सम्भावनालाई हेरेर गर्नुपर्छ । भाषाहरू भनेका सांस्कृतिक सम्पदा हुन् ।

२०५८ को राष्ट्रिय जनगणनापछि केन्द्रीय तथ्यांक विभागले सार्वजनिक गरेको विवरणअनुसार नेपालमा ९१ थरीका मातृभाषा बोलिन्छन् । यसको मतलव हामीले रेडियो राख्ने क्षेत्रमा कुनै न कुनै स्थानीय भाषा बोलिन्छन् । स्थानीय भाषाले निश्चित जातजातिको सांस्कृतिक अभिव्यक्ति तथा परिचय बोकेको हुन्छ । कुनै खास भाषिक समुदायभित्र आफ्नै खाले ज्ञान, विवेक र सीप हुन्छन् । परम्परागत ज्ञान, विवेक र सीपको संरक्षण तथा जातीय गौरव र पहिचानका लागि सामुदायिक रेडियोले स्थानीय भाषालाई कार्यक्रम र प्रसारणमा स्थान दिनुपर्छ । तर समुदायभित्र भिन्नभिन्न भाषाभाषी भएकाले अन्य भाषाभाषीका श्रोतालाई दिक्क नलागोस् भनेर कार्यक्रमको समयलाई निश्चित गर्नुपर्छ ।

अंग्रेजी भाषाले हाम्रा लागि अवसर र सम्भावनासँग सम्बन्ध राख्छ, व्यक्तिको वृत्ति विकासमा मद्दत गर्छ । अंग्रेजी भाषाले हामीलाई आर्थिक, सामाजिक, राजनीतिक, सांस्कृतिक तथा व्यावसायिक आदान-प्रदानको फराकिलो संसारमा प्रवेशका लागि भिसा प्रदान गर्छ । यसर्थ बृहत्तर अवसर सिर्जनाका लागि हामीले प्रसारणमा अंग्रेजी भाषालाई पनि श्रोताको अवस्था हेरी स्थान दिनुपर्छ ।

अंग्रेजी भाषा विश्वका लागि अमेरिकी वा बेलायतीहरूको मात्र भाषा नभएझैं नेपालमा पनि नेपाली भाषा खसहरूको मात्र भाषा होइन । यो भाषाले नेपालीहरूको साझा माध्यमभाषाको ऐतिहासिक जिम्मेवारीसमेत निर्वाह गर्दै आएको छ । तसर्थ प्रसारणमा नेपाली भाषाको प्रयोगले अत्यधिक महत्त्व राख्छ ।

तर नेपाली भाषाको विद्यमान प्रयोगमा केही हदसम्म विचार गर्नु आवश्यक छ । रेडियो प्रसारकले नेपाली भाषाको प्रयोगमा केही साम्प्रदायिक/वर्गीय घमण्डहरू छन् भन्ने कुरा स्वीकार्नुपर्छ । कुनै पनि भाषाले माध्यम भाषाको हैसियत ग्रहण गर्न भाषाभित्र स्वभावैले हुने जातीय अभिव्यक्तिलाई त्याग्न सक्नुपर्छ । त्यसैले नेपाली भाषालाई माध्यम भाषाका रूपमा रेडियोले प्रयोग गर्दा जात वा वर्ग विशेषका भाषिक विशेषताहरूलाई चिन्न सक्नुपर्छ । प्रसारणको भाषाले जातीय घमण्डलाई अभिव्यक्ति दिने होइन, सबै जातजातिका गर्वहरूलाई समेट्दै समानान्तर संवाद गर्न सक्नुपर्छ ।

नेपाली भाषा संयोजनको भाषिक परम्परामा लिङ्ग, वर्ग र जात विशेषको बडप्पन प्रष्ट झल्कन्छ । उदाहरणका लागि केही शब्द र उखान टुक्काहरू लियौं- *सभापति, पुरुषार्थ, लिँडेढिप्पी (लिँडा शब्द मगरलाई गरिने गाली हो), ढिलै होस् छोरो होस्, मर्दका दशवटी स्वास्नी, छोरी मरी ठूला घर परी, आइमाईसँग साचो र मालिकसँग झूठो नबोल्नु, सानो जात मात्तैन मातेपछि बाँच्दैन आदि-इत्यादि* । नेपाली भाषाले ग्रहण गरेको जातीय स्वभाव भनेको वर्णाश्रम स्वभाव हो । जसअनुसार नेपाली भाषाले श्रेणीबद्ध रूपमा संवाद गर्छ । तँ, तिमी, तपाईं, हजुरजस्ता व्यक्तिअनुसार सम्बोधन गरिने शब्द नेपाली भाषामा छन् । अझ हिजोआज त नेपाली भाषाको वर्णशंकर स्वरूप पनि देखा परेको छ- आइसियोस्, गइसियोस् आदि । प्रसारणमा प्रयोग गरिने भाषाले यस्तो खाले पक्षँलाई त्याग्नुपर्छ । कार्यक्रम प्रसारणमा कसैको मानमर्दन गर्नुहुँदैन, मान्छेमान्छेबीच विभेद सिर्जना गर्नुहुँदैन । भाषा तथा सम्बोधनले सहानुभूति व्यक्त गर्ने होइन, सबैलाई समान अनुभूति दिलाउन सक्नुपर्छ ।

सञ्चारकर्मीहरूले भाषालाई कुनै संस्कृति तथा भाषिक समूहको पक्ष वा विपक्षमा उभिने माध्यमका रूपमा प्रयोग गर्नुहुँदैन । सबै भाषाभाषीलाई सम्मान र आदर गर्नुपर्छ । जातजाति विशेषका असल कुराको विस्तार गर्न भाषाको मद्दत लिन सक्नुपर्छ ।

## नवीन दृष्टिकोण

कुनै पनि देशको भाषा नीति आर्थिक विकास नीतिबाट अलग्याएर बनाउन सम्भव छैन । तसर्थ सामुदायिक रेडियोकर्मीले भाषाको प्रयोगमा नवीन दृष्टिकोण अंगाल्नुपर्छ । राष्ट्रिय तथा अन्तर्राष्ट्रिय स्तरमा प्रयोग हुने भाषाको ज्ञानले व्यक्तिका अवसर र सम्भावनाहरूलाई व्यापक बनाउँछ । एकातिर हरेक जातजातिले आफ्नो सांस्कृतिक अभिव्यक्ति तथा आत्मगौरवका लागि मातृभाषा जान्नु आवश्यक छ भने अर्कोतिर माध्यम भाषाको स्तरीय रूपका बारेमा प्रष्ट हुनु पनि उत्तिकै महत्त्वपूर्ण छ । किनभने भाषा सामाजिक व्यवहारको अभिन्न अंग हो ।

रेडियोले प्रयोग गर्ने भाषा कथ्य भाषा हो । झन्डै एक शताब्दी पुरानो मानकमा लेखिएको व्याकरणलाई नै गुरु व्याकरण मानेर बहस चलाइरहेका व्याकरणविद्हरूले गर्ने तर्कसँग सामुदायिक रेडियोकर्मी त्यति धेरै अलमलिनु जरुरी छैन । भाषाको उपयोग क्षेत्र क्रमशः विस्तार हुने गर्छ । रेडियोकर्मीले भाषा समकालीन, जिउँदो, गतिशील तथा चञ्चल हुन्छ भन्ने कुरालाई आत्मसात गर्नुपर्छ ।

बंगाली साहित्यकार रवीन्द्रनाथ ठाकुरले भनेका छन्- व्याकरणको पूर्णता भनेको भाषाको मृत्यु हो । वास्तवमै यो कुरा सही छ । व्याकरण पूर्ण भएको एउटा भाषा संस्कृत हो । संस्कृत भाषालाई व्याकरणले बचाउन सकेन । तसर्थ हामीले भाषालाई प्राविधिक रूपमा बुझेर पुग्दैन । भाषा प्रयोगमा जब्बर परम्परावादी भएर हुँदैन । आगन्तुक शब्दहरूलाई स्वीकार्नुपर्छ । पारिभाषिक शब्दहरूलाई प्रयोग गर्ने कुरामा सञ्चारकर्मी सधैं खुल्ला रहनुपर्छ । समाजभित्र उपयुक्त भाषिक वातावरणका लागि सामुदायिक रेडियोकर्मीले काम गर्न सक्नुपर्छ । उपयुक्त भाषिक वातावरणले मात्र समयानुकूल भाषाको विकास

गराउँछ। भाषामा परिवर्तन नहुने भए हामीले अझै पनि भया, गया, भन्याको थिया जस्ता भानुभक्तकालीन शब्दहरू नै चलाउनुपर्ने थियो। भाषामा कट्टर हुने हो भने भाषिक हिसाबले हामी राष्ट्रिय पोशाक लगाउन पाउँदैनौं। हाम्रो राष्ट्रिय पोशाक दौरा, सुरुवाल, कोट र टोपी हो। यहाँ भाषिक रूपले हेर्दा दौरा, सुरुवाल र कोट नेपाली शब्द थिएनन्। तर यिनीहरूले नै राष्ट्रिय पोशाकको मान्यता पाए। हामी यस अर्थमा भाषिक हिसाबले उदार पनि हुनुपर्छ। तर यसको अर्थ प्रसारकले आमालाई ममी, बुबालाई ड्याडी, मूलढोकालाई गेट भन्ने छुट पाउनुपर्छ भन्ने होइन। सामुदायिक सञ्चारकर्मीले यही कोट, दौरा, सुरुवालदेखि आमा, बुबा, मूलढोकाले सीमांकन गरेको भाषिक मैदानभित्र चलखेल गर्नुपर्छ।

प्रसारणको भाषा निर्देशित वा अभ्यासिक होइन, सिर्जनात्मक हुनुपर्छ। सिर्जनात्मक भाषामा विषयवस्तु, प्रस्तुतीकरण शैली, वाक्य गठनजस्ता भाषिक व्यवहारहरूमा नवीनता ल्याउन सकिन्छ। सिर्जनात्मक भाषामा व्यक्तिगत पन र स्वभाव पनि हुन्छ। उदाहरणका लागि इष्टमित्र तथा साथीसंगीलाई लेखिने चिठी र कार्यँलयीय प्रयोजनका लागि लेखिने चिठीको भिन्नतालाई लिन सकिन्छ। कार्यालयीय प्रयोजनका लागि लेखिने चिठी निर्देशित वा अभ्यासिक हुन्छ।

भाषाको आफ्नो पन र स्वभाव हुन्छ। त्यसलाई चिन्न र स्वीकार्न सक्नुपर्छ। अहिले हामी पानी पिउनु, प्रस्तुत गर्न गइरहेको छु जस्ता अनेपाली वाक्य गठन प्रयोग गर्न थालेका छौं। यो भाषिक विशृङ्खलता वा विचलन हो। यस्ता वाक्य गठन हिन्दी र अंग्रेजीको अनुवाद हुन्। नेपाली भाषाको स्वभावभन्दा बाहिर छन्। नेपाली भाषाले खानु शब्दलाई उपभोगका रूपमा ग्रहण गरेको छ। यो अंग्रेजीको इटिङ को अनुवाद होइन। अंग्रेजीमा इटिङ, ड्रिंकिङ र स्मोकिङ जस्ता शब्दहरू छन्। नेपाली भाषाशास्त्री डा. माधवप्रसाद पोखे्रल भन्नुहुन्छ- खानुको समान शब्द अंग्रेजी भाषामा खोज्ने हो भने कन्ज्युम् (consume) हो। नेपालीमा चुरोट खानु, पानी खानु, भात खानु हुन्छ। खानुको नेपाली स्वभावसँग मिल्ने अन्य भाषाहरूमा बंगाली, मैथिली, उडिसा र आसामेली छन्। यी भाषाहरूमा पनि पानी, चुरोट खाइन्छ।

## कथ्य भाषा

कथ्य भाषा सामाजिक व्यवहारको अभिन्न अंग हो । कथ्य भाषा, लेख्य भाषाभन्दा विशेषतागत रूपमै पनि भिन्न हुन्छ । एउटै भावका लिखित र मौखिक अभिव्यक्तिमा समेत भिन्नता हुन्छ । कथ्य अभिव्यक्तिमा वक्ता आफ्ना कुरा बुझाउन भाषिक तत्वहरूमा मात्र भर पर्दैन । आघात, सुर, लय, तान, यति, गति अनुपातका साथै हाउभाउ, मुद्रा, चेष्टाजस्ता अभाषिक तत्वबाट समेत उसले आफ्ना विचारहरू प्रकट गर्छ । एउटै भावमा लिखित र मौखिक अभिव्यक्तिको तुलना गरौं- नेपाल मेरो देश हो (लिखित अवस्था), नेपाल् मेरो देश् हो (मौखिक अवस्था), यो लोक गीतको कार्यक्रम हो (लिखित अवस्था), यो लोक् गीत्को कार्यक्रम् हो (मौखिक अवस्था) । लिखित भाषाको स्वरूपमा नेपाल, देश, लोक, गीत र कार्यक्रम शब्दमा हलन्त लागेको छैन । तर कथ्य अवस्थामा नेपाल, देश, लोक, गीत र कार्यक्रम शब्दमा हलन्त लागेको हुन्छ । यसरी लिखित भाषा र मौखिक भाषाबीच बिराम र चिन्हहरूको प्रयोगमा भिन्नता रहन सक्छ ।

कथ्य भाषामा वक्ता आफ्ना भाव र विचारअनुसारका शब्द चयन गर्न स्वतन्त्र हुन्छ । ऊ प्रसंग अनुकूल चेष्टा, मुद्रा, कटाक्षँ, भावभङ्गी तथा हाउभाउ अपनाउन सक्छ । कुनै पनि वाक्यलाई त्यसको बनोट नखलबल्याईकन सामान्य अर्थबाहेक प्रश्नबोधक, आश्चर्यबोधक, चिन्ताबोधक आदि अर्थमा व्यक्त गर्न सक्छ । जसले अर्थमा भेदसमेत ल्याउँछ । उदाहरणका लागि एउटा सामान्य बाक्य लिऔं- हरि गएछ । सामान्य अवस्थामा यसको अर्थ हरि यहाँ छैन कतै गइसक्यो भन्ने हुन्छ । यो वँक्यलाई प्रस्तोताले आश्चर्यबोधक बनाउन सक्छ, प्रश्नबोधक बनाउन सक्छ र चिन्ताबोधकसमेत बनाउन सक्छ । यो बोलाइमा अनुतानको फरकले ल्याउने भेद हो ।

रेडियोमा प्रयोग हुने भाषँ कथ्य भाषा हो । लेख्य भाषामा मात्र प्रयोग हुने शब्दहरू पनि हुन्छन् । लेख्य भाषामा आउने तल, माथि, उल्लिखित, निम्नअनुसार, उक्त, सो, तपसिल, यस्तो, उपर्युक्त, उपरोक्त, प्रस्तुत सामग्री आदि शब्द रेडियोमा प्रयोग गर्नुहुँदैन ।

कथ्य भाषामा संरचनागत अनियमितता हुन्छ, जुन भाषाको शिष्ट प्रयोगका हिसाबले समेत क्षँम्य छ । कथ्य भाषा प्राय: भिन्न-भिन्न स्थानीय र वर्गीय भाषिक विशेषताबाट अधिकतम मात्रामा प्रभावित हुन्छ । एउटै मातृ भाषा-भाषीबीच पनि थुप्रै भाषिकागत र शैलीगत विशेषता हुन्छन् । जुन स्तरीय वा शिष्ट भाषाको मर्यादा वा प्रयोग परम्पराभन्दा भिन्न छन् । यस्तो अवस्थामा मानक वा स्तरीय भाषाको प्रयोगतर्फ उन्मुख गरेर प्रस्तुतीकरणलाई यान्त्रिक वा स्थानीय बासिन्दाका लागि अपरिचित बनाउनु हुँदैन । एउटै भाषा खलकका भाषा र भाषिकाहरुमा पाइने अन्तर एक खालको हुन्छ भने फरक भाषा खलकका व्यक्तिहरुले बोल्दा हुने अन्तर भिन्न खालको हुन्छ । यस्ताखाले अन्तरहरुलाई केलाउँदा नेपाली भाषामा मुख्य गरेर तीनवटा अन्तर फेला पर्छन्- शब्दगत, उच्चारणगत तथा व्याकरणगत ।

*उच्चारणगत अन्तर*

| स्तरीय रूप | फरक रूप |
|---|---|
| जान्छ | जान्च |
| खान्छ | खान्चम् |
| पर्छ | पर्च |
| जाऔं | जौं, जाम् |
| जाँदैनौं | जाँदैनम्, जाँदैनउँ, जाँदौन |
| जानुपर्ने रहेछ | जानुपर्ने थेछ, |
| कस्तो | कस्तो |
| गएको | गाको |
| षडानन्द | खडानन्द |
| यदि | जदि |
| त्यहाँ | त्याँ |

*शब्दगत अन्तर*

| स्तरीय रूप | फरक रूप |
|---|---|
| हँसिया | आँसी |
| अम्बा | बेलौती |
| रूपी | सारौं, डांग्रे, सारी, सारौंटे, काली |
| भएदेखि | भएपार |
| को छ ? | को ख ? |

*व्याकरणगत अन्तर*

खासगरी काल, वाच्य, क्रियाको स्वरूप, लिंग, वचन, पुरुष तथा कारक र विभक्तिहरूमा समेत व्याकरणगत अन्तर पाइन्छन् ।

| स्तरीय रूप | फरक रूप |
|---|---|
| तिनीहरू के गर्दा रहेछन् ? | तिनेरु के गर्दा रान् ?<br>तिनीहरू के गर्दा रैछन् ?<br>तिनीहरू के गर्दा रचन् ?<br>तिनारु के गर्दा रछन् ? |
| तिमीले राखेका थियौं । | तिम्ले राखेको थियो ।<br>तिमीले राख्या थियौ । |
| मनमाया गइन् । | मनमाया गयो । |
| तपाईं कुनबेला आउनुभयो ? | तपाईं कुनबेला आको ? |

जुन मुलुकमा राजधानी सहरको उच्चारण एउटै छैन (काठमाडौं, काठमाण्डौ, काठमाण्डू) त्यो मुलुकमा शब्द उच्चारणसम्बन्धी निश्चित परिधि तोक्नु आफैंमा जटिल र विवादास्पद काम हो । भाषाशास्त्रीहरूका अनुसार हरेक २० किलोमिटरको दूरीमा भाषामा भिन्नता देखापर्छ । नेपाली भाषाका थुप्रै भाषिक र उपभाषिकाहरू छन् । नेपाली शब्द उच्चारणमा स्थानीय वा आञ्चलिकताको प्रभाव छ । रूपन्देही जिल्लाकै कुरा गर्ने हो भने एकै ठाउँका बासिन्दाहरूबीच समेत लवजमा एक रूपता छैन । पाँचवटा लवज बोल्ने मान्छेहरू रूपन्देही जिल्लामा पाइन्छन् । यी सबै लवजहरू नेपाली भाषाको राष्ट्रिय मानकभन्दा भिन्न छन् । यस्तोबेला रेडियोमा कुन लवज प्रयोग गर्ने भन्ने प्रश्न उठ्छ । यस्तो स्थितिमा स्थानीय रेडियोले राजधानीको भाषिक घमण्ड बोक्नु जरुरी छैन । लवजमा स्थानीयता तथा आञ्चलिकताको प्रयोग सामुदायिक रेडियोले गर्नुपर्छ । भाषामा विविधताभित्रको सौन्दर्य खोजिनुपर्छ । यस्तो अवस्थामा भाषा भद्दा वा बोधो होइन चखिलो र छरितो बन्दै जाओस् भन्ने कुरामा ध्यान दिनुपर्छ ।

### शब्दको प्रयोग

कतिपय शब्दहरू ह्रस्व र दीर्घको फरकले अर्थ फरक लाग्ने हुन्छन् । लेखाइमा यो कुरा प्रष्ट हुनसक्छ । तर बोलाइमा ह्रस्व र दीर्घको भेद छुट्याउन धेरै गाह्रो हुन्छ । श्रोताहरू यस्ता शब्द प्रयोग गरिएको सन्देशमा झुक्किन वा अलमलिन सक्छन् । उस्तै उच्चारण हुने तर ह्रस्व र दीर्घको फरकले अर्थ भिन्न हुने शब्दहरू रेडियोकर्मीले प्रयोगमा ल्याउनुहुँदैन ।

*उस्तै उच्चारण भएका तर अलग–अलग अर्थ दिने शब्दहरू*

| | |
|---|---|
| फूल (पुष्प) | फुल (अण्डा) |
| नशा (मात) | नसा (रक्तनली) |

| | |
|---|---|
| उनी (सर्वनाम) | ऊनी (धागो) |
| को पर्छ (नाता केलाउँदा) | कोपर्छ (चिथोर्छ) |
| कोयो (आँपको) | को यो ? (चिन्नका लागि सोधेको) |
| आउँ छ (आउँको रोग छ) | आउँछ (आउने काम) |
| कृति (रचना) | कीर्ति (ख्याति) |
| कृया (जुठो वार्ने काम) | क्रिया (काम) |
| कुट (पिट) | कूट (रहस्यपूर्ण) |
| कोश (शब्दकोश) | कोष (आँखाको छेउ वा जमिनको दूरी) ? |
| नाउ (डुंगा) | नाऊ (हजाम) |
| पट्टी (उपचार पट्टी) | पट्टि (तर्फ, पूर्वपट्टि) |
| पालि (यसपालि) | पाली (छानाको एक भाग) |
| पिडा (जंगली अर्नाको बच्चो) | पीडा (शारीरिक कष्ट) |
| फेरि (अर्कोपटक) | फेरी (फेर्ने काम गरेर, जोगीले लगाउने) |
| वश (अधिन, नियन्त्रण) | बस (पुग्यो वा भयो वा गाडी) |
| जाति (जातजाति) | जाती (असल) |
| गुन (उपकार वा गुन्ने काम) | गुण (असल स्वभाव) |
| चिन (पत्ता लगाउने काम) | चीन (देश) |
| जुन (जुनसुकै) | जून (चन्द्रमाको किरण) |
| तिर (तिर्ने काम) | तीर (वाण वा नदीको किनारा) |
| दिन (तिथिमिथिको अर्थमा) | दीन (दु:खी) |
| दिशा (पूर्व, पश्चिम आदि) | दिसा (गुहू वा बिष्ठा) |
| शव (लाश) | सब (पूरा) |
| हरि (नाम) | हरी (हर्ने काम गरेर) |
| यश (कीर्ति) | यस (यो, यसको) |

*राजनीतिक शब्दहरू :* राजनीतिक पार्टीहरूलाई पलायनवादी, संशोधनवादी, मध्यममार्गी, अतिवादी, अनुदारवादी, अधिनायकवादी पूर्वपञ्च, प्रतिगामी, प्रगतिवादीजस्ता विशेषण लगाउनुहुँदैन । पार्टीको नाममात्र भन्ने गर्नुपर्छ । यस्ता विषयमा विदेशी सञ्चार माध्यमबाट साभार गर्दा दुरुस्त अनुवाद गर्नुहुँदैन । वर्णन गरिएका तथ्य वा घटनालाई लिने र त्यहाँ प्रयोग भएका विशेषण वा दृष्टिकोणलाई त्याग्ने गर्नुपर्छ ।

विदेशी सञ्चार माध्यमलाई उद्धृत गरेर समाचार वा विश्लेषण दिँदा राष्ट्रिय दृष्टिकोण (परराष्ट्र नीति) सँग बाझ्ने खालको हुनुहुँदैन । उदाहरणका लागि समाचार एजेन्सी एसोसिएट प्रेसले भारतीय जनता पार्टीलाई हिन्दु अतिवादी पार्टी भनेर सम्बोधन गर्छ । त्यो उसको शैली हो । नेपाली राष्ट्रिय दृष्टिकोणमा भारतीय जनता पार्टी हिन्दु अतिवादी पार्टी होइन । छिमेकी देशको प्रभावशाली पार्टी हो । यस्तै कश्मीरका बारेमा समाचार दिँदा कसरी भन्ने ? भारत नियन्त्रित कश्मीर क्षेत्र वा भारत अधिनस्त कश्मीर क्षेत्र वा भारत शासित कश्मीर क्षेत्र तथा तिब्बतका बारेमा चीन नियन्त्रित वा चीन अधिनस्त वा शासित के भन्ने ? यी यस्ता पक्ष हुन् जसको निर्क्यौल राष्ट्रले अवलम्बन गरेको परराष्ट्र नीतिका आधारमा गरिनुपर्छ ।

*संख्या वा तथ्यांक :* रेडियोमा संख्या वा तथ्यांकको प्रयोग गर्न उत्साहित हुनुहुँदैन । ठूलठूला संख्या श्रोतालाई सुन्न र सम्झन गाह्रो हुन्छ । सामान्यतया संख्यालाई भन्दा एकमुष्ट रूपमा भन्नुपर्छ । उदाहरणका लागि रु, ४,८५,७११।- को ठाउँमा तपाईंले रेडियोका लागि करिब पाँच लाख रुपैयाँ भन्नु राम्रो हुन्छ । यस्तै १५.७ प्रतिशतलाई झन्डै १६ प्रतिशत भन्नु राम्रो हुन्छ । हामी व्यवहारमा कतिपय संख्यालाई अंकमा होइन अक्षरमा बोल्ने गर्छौं । त्यस्ता संख्याको उच्चारण गर्दा अक्षरमै गर्नु राम्रो हुन्छ ।

उदाहरणका लागि तलको फरक हेरौंः

| अंकमा | अक्षरमा |
| --- | --- |
| एक सय पचास | डेढ सय |
| दुई सय पचास | अढाइ सय |
| चार सय पचास | साढे चार सय |
| २५ प्रतिशत | एक चौथाई |
| ३३ प्रतिशत | एक तिहाई |
| ५० प्रतिशत | आधा |
| ६७ प्रतिशत | दुई तिहाई |
| ७५ प्रतिशत | तीन चौथाई |

*भाषिक दोष :* तपाईंको शब्द प्रयोगमा भाषिक दोष रह्यो भने तपाईंले प्रयोग गर्ने शब्द सुन्न अप्ठ्यारो हुन सक्छन् । उज्यालो दीप, पिताको चिठी, स्वच्छ हावा, घाम उदायोजस्ता शब्द सुन्दा कता-कता कान बिझाउँछ । यदि तपाईं दीपको प्रयोग गर्नुहुन्छ भने उज्ज्वल दीप भन्नुहोस्, होइन तपाईं उज्यालो शब्दको प्रयोग गर्न चाहनुहुन्छ भने उज्यालो बत्ती भन्नुहोस् । यस्तैगरी पिताको पत्र वा बुबाको चिठी, स्वच्छ वायु वा सफा हावा, घाम झुल्क्यो वा सूर्य उदायो भन्नुभयो भने भाव सजिलो हुन्छ ।

*भाषिक अज्ञानता :* हामी लेख्दा कतिपय ठाउँमा एउटै अर्थ दिने दुईवटा शब्द पनि प्रयोग गरिरहेका हुन्छौं जस्तै- देशभरका तमाम न्यायप्रेमी जनता, हरि स्वयं आफैंले बोकेर ल्यायो, मसित केबल दश रुपैयाँमात्र छ, राम त ज्यादै धेरै काम गर्छ । यो भाषिक अज्ञानता वा असंवेदनशीलता हो । यी वाक्यहरूमा भर भनेपछि तमाम भन्नुपर्दैन,

आफैं भनेपछि स्वयं पर्दैन, केबल भनेपछि मात्र चाहिँदैन, धेरै भनेपछि ज्यादै चाहिँदैन ।

*भाषिक भेद :* विभिन्न भाषा क्षैत्रमा एउटै शब्दका विभिन्न अर्थ हुन सक्छन् । एउटा सामुदायिक रेडियोको प्रसारण क्षेत्रभित्र अलग-अलग भाषा बोल्ने मानिस हुन सक्छन् । कुनै एउटा भाषा-भाषीबीच सहज रूपमा बोलिने शब्द अर्को भाषीले सुन्दा अत्यन्त अश्लील लाग्न सक्छ । उदाहरणका लागि नेपाली भाषामा पेटसम्बन्धी एक खाले रोगलाई रगतमासी भन्ने गरिन्छ । तर नेवारी भाषीले सुन्दा यो रोगको रूपमा रहेको शब्द अत्यन्त अश्लील हुन्छ । नेपाली भाषीका लागि हीरा भनेको जुहारत हो । तर लिम्बू भाषीका लागि अश्लील शब्द हो । त्यस्तैगरी ठाउँअनुसार भाषिकाको अर्थ फरक हुनसक्छ । नेपालको पूर्वी भेगका बासिन्दाका लागि कन्नो निकै असहज शब्द हो, तर नेपालकै पश्चिम क्षैत्रतिर कन्नो भन्नाले ढाडलाई बुझाउँछ । यसर्थ प्रसारकले ख्याल गर्नुपर्ने कुरा कुन-कुन शब्द निश्चित ठाउँ र भाषाभाषीका लागि अनर्थ लाग्ने शब्द हुन् भनी पत्ता लगाउनुपर्छ ।

*शब्द संयोजन :* शब्दको संयोजन अघि वा पछि हुँदा पनि अर्थ फरक पर्छ । जस्तो हार-जित र जित-हारलाई लिऔं । हरिको जित हार भयो र हरिको हार जित भयो । यी दुईटा वाक्यको अर्थ ठीक विपरीत छ । यस्ता थुप्रै शब्द छन्- हरियै-हरियो (सबै ठाउँमा हरियाली छ को अर्थमा), हरियो-हरियै (कतैकतै हरियो छ भन्ने अर्थमा), सुख्खा-सुख्खै ( कतैकतै सुख्खा छ भन्ने अर्थमा) र सुख्खै-सुख्खा (सबैतिर सुख्खामात्र छ भन्ने अर्थमा) । यस्तै शब्दको अलग-अलग संयोजनमा लाग्ने अर्थ हेरौं- सुनीलले सिनेमा मात्र हेर्‍यो (सिनेमा बाहेक अरू केही हेरेन), सुनीलले मात्र सिनेमा हेर्‍यो (त्यो सिनेमा हेर्ने सुनीलबाहेक कोही थिएनन्) र सुनीलले सिनेमा हेर्‍योमात्र (त्यसको व्याख्या विश्लेषण नै गरेन) । यसरी शब्दको संयोजनका बेला पनि ध्यान दिनुपर्छ ।

*कालको प्रयोग :* रेडियो लेखनमा सधैं वर्तमान कालको प्रयोग गर्नुपर्छ । सामान्यतया नेपाली रेडियोहरूमा उद्घोषकहरूले भन्ने गर्छन्- तपाईंको आजको प्रसारण ... समाचार ... म्यागेजिन कार्यक्रम, ... गीतसंगीत ... सुन्नुहुनेछ । यो बेठीक प्रस्तुति हो । यहाँ प्रयोग भएको भविष्यकाल सुन्नुहुनेछ व्यवहार र व्याकरण दुवैको विपरीत छ । व्यवहारमा हामी कतै जानु पर्दा भन्ने गर्छौं- म अर्को साता काठमाडौं जान्छु । यहाँ जानेछु भनेर कहिल्यै प्रयोग हुँदैन । त्यस्तै व्याकरणले पनि योजनाबद्ध काममा वर्तमान कालमा लेख्नुपर्छ भनी नियमबद्ध गरेको छ । हामीले हिजोआज रेडियोमा प्रयोग गर्ने गरेको यस्तो शैलीले न त सुन्नलाई सजिलो बनाएको छ न व्यवहार र व्याकरणका नियमसँगै मेल खान्छ । भविष्यकाल अनिश्चयार्थी हुन्छ । रेडियोको लेखनमा वर्तमान कालको प्रयोगले प्रस्तुतिलाई ताजा र समकालीन बनाउँछ । अघिल्लै दिनको घटना भए पनि त्यसको प्रस्तुति वर्तमान कालमा गर्नु राम्रो हुन्छ । उदाहरणका लागि मान्नुहोस् देशको प्रधानमन्त्री गिरिजाप्रसाद कोइराला हुनुहुन्छ र उहाँले हिजो काठमाडौंको एउटा कार्यक्रममा बोल्दै वर्तमान राष्ट्रिय संकटले निकास पाएपछि आफूले पदबाट राजीनामा दिने कुरा बताउनुभएको थियो । यही कुरालाई रेडियोका लागि लेख्नु छ- हिजो बिहान काठमाडौंको एउटा कार्यक्रममा बेल्दै प्रधानमन्त्री गिरिजाप्रसाद कोइरालाले भन्नुभयो- वर्तमान राष्ट्रिय संकटले निकास पाएका दिन पदबाट राजीनामा दिन्छु ।

*सकारात्मक वाक्य :* रेडियो कार्यक्रम प्रस्तुतिमा अति धेरै नकारात्मक वाक्यको प्रयोग भयो भने श्रोता हतोत्साहित हुन सक्छन् । वाक्यको अन्त्यमा आउने भएन, गरेको छैन, जानेको छैन, यस्तो हुनुहुन्न, शब्दहरूले श्रँताको मनोबल गिराउन सक्छ । यसका लागि रेडियोमा लेख्दा भाव उही तर सकारात्मक वाक्यहरू प्रयोग गर्नुपर्छ । व्याकरणको भाषामा यस्ता वाक्यलाई करण वाक्य भनिन्छ । उदाहरणका लागि नेपाली किसानहरूलाई आधुनिक खेती प्रणालीका बारेमा थाहा छैन । यो अकरण

वाक्य हो यसले किसानहरूको क्षमतामा नै हस्तक्षेप गरेको ठानिन सक्छ । यही वाक्यलाई भाव उस्तै तर उनीहरूको क्षमतालाई चुनौती नदिईकन लेखेर हेरौं- नेपाली किसानहरूले आधुनिक खेती प्रणालीका बारेमा थाहा पाउन धेरै बाँकी छ ।

**शब्दावलीहरू**

वचनमा नम्रता, मिठास र स्पष्टता चाहिन्छ । शारीरिक, मानसिक अशक्तता, वर्ण, जात, पेशा तथा उमेरका कारणले सिर्जना हुने कमजोरीहरूका बारेमा वर्णन गर्दा विशेषणरहित शब्दहरू प्रयोग गर्नुपर्छ । यस्तो अवस्थाका बारेमा वर्णन गर्दा चलनचल्तीमा रहेका कतिपय शब्दहरूलाई प्रयोग गर्नु ती अवस्था वर्गका मान्छेप्रति अपमान वा बेइज्जती तथा गाली हुनसक्छ । यो कुरालाई रेडियो प्रसारकले राम्ररी ख्याल राख्नुपर्छ । सामाजिक आसय, बोल्दाको बखतको हाम्रो हाउभाउ, शैली तथा प्रवृत्तिले वचनलाई नाङ्गो बनाइदिन सक्छ । नाङ्गो वचन ज्यादै अप्रिय हुन्छ, अश्लील हुन्छ । त्यस्ता नाङ्गा शब्दहरूलाई रेडियो प्रसारकले प्रयोग गर्नुहुँदैन ।

- नाङ्गा शब्दहरू : नगरवधु, वेश्या, रण्डी, रण्डो, आइमाई, फ्यांग्रो, खोरुण्डो, लंगडो, व्यांग्रो, खंजाहा, डुँडो, खुँडे, अन्धो, डेरो, कुप्रे, कानो कुम्ले, आँडे, अछूत, नपुंसक, कुजात, बहुलाहा, पागल, नाकथेप्चे, नाकचुच्चे, थोते, बंगारे, गंवार, पाखे आदि ।
- जात वा वर्गलाई पेशाको प्रतिनिधि बनाएर प्रयोग गर्नुहुँदैन । उदाहरणका लागि एउटा वाक्य लिऔं : दर्जी लुगा सिउँछन् । यसको ठाउँमा सुचीकार लुगा सिउँछन् प्रयोग गर्न सकिन्छ । जसमा जातीय हिसाबले तोकिएको छैन ।

## भाषा/शब्द चयनका बेला सामुदायिक रेडियोकर्मीले ध्यान दिनुपर्ने कुराहरू

- नेपाली र अनेपाली शब्दमा नेपाली शब्दलाई रोज्ने
- भाषिक वातावरणका लागि काम गर्ने

- श्रोतामा भाषाको सिर्जनशीलतालाई ध्यान दिने
- कथ्य भाषामा हुने स्थानीय र वर्गी भाषिक विशेषताहरूलाई आत्मसात गर्ने
- मानक भाषाको शुद्ध प्रयोगले प्रस्तुतिलाई यान्त्रिक बनाउने खतरातर्फ सचेत रहने
- बोलाइको भाषामा संरचनागत अनियमिततताहरू भाषिक हिसाबले क्षँम्य हुन्छन् भन्ने तथ्यलाई ख्याल गर्ने
- लिखित र मौखिक अभिव्यक्तिको भिन्नतालाई बुझ्ने
- भाषाको शुद्धतालाई व्याकरणको सैद्धान्तिक ज्ञानमा होइन भाषाको प्रयोगात्मक अनुभवभित्र खोज्ने
- एउटै मातृ भाषा-भाषीबीच पनि थुप्रै भाषिकागत र शैलीगत भिन्नता हुन्छन् । यो भाषाको विचलन होइन भन्ने कुरालाई स्वीकार्ने
- भाषा गतिशील र चञ्चल हुन्छ भन्ने कुरालाई सधैं ख्याल गर्ने
- जातीय तथा वर्गीय घमण्ड भएका शब्दलाई प्रयोगमा नल्याउने
- भाषाबाट सहानुभूति होइन समानुभूति व्यक्त गर्ने
- भाषाको मौलिकपन तथा स्वभावलाई अवलम्बन गर्ने
- भाषालाई चखिलो र छरितो बनाउँदै लैजाने कुरामा ध्यान दिने

## आमअर्थमा प्रयोग हुने तर जातीय तथा लैंगिक पक्षपाति शब्दहरू

### पुलिङ्ग

*पुरुषार्थ, पुरुषार्थी, पौरख, पौरखी, भातृत्व, भाइचारा सम्बन्ध, विश्व बन्धुत्व, बन्धुबान्धव, राजधानी, राजनीति, राजश्व, राजदूत, राष्ट्रपति, किशोर संस्कृति, अधिपति, मालिक, सभापति, राजनेता, बाजेका पालमा, बाल कार्यक्रम, अनाथ, वृद्धाश्रम, वृद्धाभत्ता, पुर्खा, पुर्ख्यौली, स्वामित्व, नामर्द ।*

## *जातीय / वर्गीय*

*पाँडे गाली, पोडे कसम, डुम हुनु परोस्, गाइनेको घोडा, पाँडे पजनी, राँडे रुवाई, पोथी बासेको, लिंडेढिपी ।*

## *स्त्रीलिङ्ग*

*प्रकृति, दैवी संयोग, दैवी प्रकोप, शक्ति, शक्तिमान, शक्ति सम्पन्न, शक्तिशाली, बूढीरूढी, शाक्त सम्प्रदाय, बुढीऔं ।*

शब्दको उत्पत्ति विभिन्न ढंगले हुने गरेका छन् । पुरुषार्थ, पौरख, शक्तिजस्ता शब्दहरू नेतृत्वको सफलताले सिर्जना गरेका छन् भने लिंडेढिपी, पोथी बासेको जस्ता शब्द दमन र विभेदकारी छन् । उत्पत्तिका हिसाबले पुरुषवाची वा स्त्रीवाची जे भए पनि भाषाको क्षैत्र र अर्थ विस्तार हुँदै जाँदा कतिपय शब्दले समभाव अँगालिसकेका छन् । ती शब्दबाट लैंगिक तथा जातीय गन्ध हराइसकेको छ । तर कतिपय शब्दहरूमा अझै पनि आलो जातीय तथा लैंगिक गन्ध आउँछ ।

आलो जातीय गन्ध आउने शब्दहरूलाई रेडियोकर्मीले प्रयोगमा ल्याउनुहुँदैन । तर समभाव अँगालिसकेका शब्दहरूको प्रयोगलाई कसरी हेर्ने भन्ने कुरामा सबै लिङ्ग, जात र वर्गका भाषाविद्हरूबीच सहमति हुनु जरुरी छ । पत्रकारिता र नेपाली भाषा दुवैमा दखल राख्नुहुने उपप्राँध्यापक ऋषिराम भुसाल भन्नुहुन्छ- भाषामा अति नश्लवादी चिन्तन लिनु जरुरी छैन । भाषाको क्षैत्र विस्तार हुँदै जाँदा रूप र अर्थ नै फरक भइसकेका शब्दलाई प्रयोगबाट हटाउँदा भाषामा रिक्तता खड्किन सक्छ । तसर्थ तिनीहरूको प्रयोग गर्नुपर्छ । तर दमनात्मक तथा विभेद्कारी शब्दहरुलाई भने भाषाको सम्वृद्धिका नाममा प्रयोग गरिरहनु अहंकारमात्र हुनजान्छ ।

# सञ्चारमाध्यमले प्रयोग गर्न नहुने केही उखान टुक्काहरू

- अर्तीको कुरा घर्तीको पनि लिनुपर्छ
- अर्तीले घर्ती मान्दैन
- अल्छी गर्ने स्वास्नी बिग्रिन्छ, बल्छी खाने माछो बिग्रिन्छ
- आँखाको अन्धो रेलगाडी गन्दो
- आँट नभएको लोग्ने र साँच नभएकी स्वास्नी दुवै काम लाग्दैनन्
- मरेपछि डुमै राजा
- आफू त राँड जगतै भाँड
- आफ्नी छोरी नखरमाउली तन्नेरीलाई दोष
- उसै त बुहारी छोरी पाएकी
- एक घर बिष्ट दश घर कामी, जस्ता तिमी उस्तै हामी
- एक डक्किनी चल्दा सात धर्ती हल्लन्छ
- कंगालीको जात छैन बोक्सीको गाउँ छैन
- कहिले सासूको पालि कहिले बुहारीको पालि
- काँठे र आँठे एकै हुन्
- काँठेलाई चैते रायो
- कागभन्दा कोइली चंख, कोइलीभन्दा खत्री चंख
- काजीको छोरो पाजी
- कानो देशमा चोर पस्यो खोरण्डालाई गुहार
- कामीको पालो कात्तिकमा
- कामीको बिहे अठार खाँचो
- कामी दमाई माग्न जान्दैन, दाद लुतो आउन जान्दैन
- कालो बाहुन गोह्रो शूद्र, यिनदेखि डराउँछन् महारुद्र
- किन मरिस राँड आफ्नै पीरले
- कुहिरे बाहुन, कैले खस, जुंगे मगर रस न बस

- कुखुरा बास्यो, कामी नास्यो
- खसको कुरा पेटको छुरा
- खसको कोखमा दाँत हुन्छ
- खसको बिहेमा मगर नास्ती
- गजडीको गाना अफिमचीको ताल, राँडीको गहना कालो बिरालीको साल
- टुप्पीभन्दा माथि जीउ छैन, बाहुनभन्दा माथि जात छैन
- डुमको घरमा बारा पाक्यो बिष्टको घरमा हर्ष बढाइँ
- त बाहुन म बाहुन घरका पैसा कतै नजाउन्
- दमाई-कामीलाई बोलाई नुनको खती
- दमाईको थुक चोखो बाहुनको मुख चोखो
- दमाईको लुगामा तना छिनेको
- सियो हराएको दमाई जस्तो
- दाल कि खान्छ घोडाले कि खान्छ छोराले
- दिनमा कमिनी कपाल कोर रातमा कमिनी घोचा चोर
- नामर्दको भर नपर्नु, राँडीको भोज नखानु
- नेवार इष्ट र बाबु दृष्ट कहिल्यै हुँदैन
- नेवारको मुख चल्छ थाक्सेको हात चल्छ
- पश्चिमबाट घाम उदाउनु र बाहुनको चित्त बुझाउनु
- पोइला जाने राँडको हज्जार नक्कल
- वर्त बस्ने हामी फलार खाने कामी
- बाँझी आइमाई सुत्केरीको बेथा बुझ्दिन
- बाहुनको चित्त माखाको पित्त
- बाहुनको बिर्ता बोकाको मोलमा जान्छ
- बाहुनलाई खाई जाडो क्षेत्रीलाई नुहाई जाडो
- बाहुनले च्याउ खाओस् न स्वाद पाओस्
- बिष्टका घरमा भात पाक्यो दमाईका घरमा खलबल
- बेथामा को आँठे मान्छेमा को काँठे

- बेस्सेको घर छैन, बेइमानको भर छैन
- बेस्सेले खाएको धन र भैंसीले खाएको वन
- बोक्सीको आँखा ठूलो चोरको डाको ठूलो
- भँडारीको बिहेमा पाँडेको परिपञ्च
- भए अन्त नभए बुढाथोकीको जन्त
- भात बिगार्ने माड र घर बिगार्ने राँड
- भोटेको बुद्धि भेंडाको जस्तो
- मरेको मधिशेले जिउँदो पहाडेलाई ठग्छ
- मर्दका दशवटी स्वास्नी
- माझीको मतो गर्दा सात गाउँ डुबे
- मालिकलाई मही छैन चाकरलाई दही
- मियाकी दौड मस्जिद तक
- राँडीका छोराको भारमाथि खुट्टा
- राँडीको दिन जान्छ टुहुराको दिन फर्कन्छ
- राँडीफुडीलाई केको शोभा चाहिन्छ
- राँडीलाई पोतेको रहर
- राजाको काम छोडी कामीको देवाली
- लाटीको छोरीको म्वाई खाई स्वाद न व्याद
- लातकी राँड बातले मान्दिन
- लोग्ने मान्छेको किरिया टागमुनि छिरिया
- सानो जात मात्तैन माछेपछि बाँच्दैन
- सार्कीको देउता अक्षँताले मान्दैन
- सार्कीका सरापले डिगो मर्दैन
- साहेव सच्चा गरिब झुट्ठा
- क्षैत्री बिग्रियो मोजले, नेवार बिग्रियो भोजले
- भाइ भए भोरस गाई भए गोरस
- जहाँ दही त्यहीं बाहुनको सही
- जहाँ गुलियो त्यहीं बाहुन भुलियो

- जहाँ केरा त्यहीं बाहुनको डेरा
- जोगीका घरमा संन्यासी पाहुना
- ज्यापुलाई नोल भेंडालाई गोल, भुस तिघ्रेलाई कोल पापीलाई जिउँदै पोल
- कायस्थले खाएको गाउँ र बाबुले बिगारेको छोराको नाउँ कहिल्यै सुध्रिँदैन
- छोरी मरी गाल टरी
- आइमाईको किलकिले हुँदैन
- छोरी मरी ठूला घर परी
- छोरा पाल्नु सहरमा, छोरी पाल्नु कुनामा
- छोरीको जन्म हारेको कर्म
- आइमाईको हात खाली र बाख्राको मुख खाली हुनुहुँदैन
- आइमाईको साथी र राडीको कुम्लो काम लाग्दैन
- आइमाईसँग साँचो र मालिकसँग झूठो कहिल्यै नबोल्नु
- छोरीले खाएको घर र भेंडाले खाएको वन कहिल्यै पलाउँदैन
- आइमाई मनाउन र पिठो फिजाउन बेरै लाग्दैन
- आइमाईलाई चैन र बाख्रालाई मैदान हुँदैन
- आइमाईको चाला दैवले जान्दैन
- आइमाई जस्तो कचकचे
- आइमाईको बुद्धि घुचुकमा
- गर्ने भन्ने हामी ह्याकुलो खाने कामी
- ताके परे तिवारी नत्र गोतामे
- कुमाईको घुमाई पूर्वीयाको जाल, गुरुङको बुद्धि नेवारको काल
- थारूलाई दारु र मुसा भए केही चाहिँदैन
- लिम्बूको बुद्धि घुडामा
- धोबीको कुकुर घरको न घाटको
- नहुनु मामाभन्दा कानो मामा निको
- गाँडालाई गर्ची

- लाटो देशको गाँडो तन्देरी
- लंगडाको देशमा खुट्टो खोच्याउनु
- अन्धाले हात्ती छामेजस्तो
- जैसो बाहुन र भैंसे गोरु काम लाग्दैनन्

- राणीको शोक न कन्ठेको वैराग

## आचारसंहितासम्बन्धी केही प्रश्न

(१) सामाजिक मुक्ति आन्दोलनका एकजना ठूला नेताले आफ्नै श्रीमतीलाई कुटेपछि सिकिस्त भएर अस्पताल भर्ना भएकी छन् । ती नेतालाई प्रहरीले पक्राउ गरेको छ । यो समाचार तपाईंले पाउनुभयो । समाचार प्रसारण हुनेवाला छ भन्ने थाहा पाएर सामाजिक मुक्ति आन्दोलनमा संलग्न चारजना कार्यकर्ता स्टेसनमा आए । त्यो समाचार सार्वजनिक हुँदा आफ्नो पार्टीको छवि ध्वस्त हुन्छ भन्दै प्रसारण नगरिदिन तपाईंलाई अनुरोध गरे । साथै उनीहरूले भने- यदि यो समाचार प्रसारण गर्नुभयो भने हामी चारैजना आत्महत्या गर्छौं । यस्तो अवस्थामा तपाईं के गर्नुहुन्छ ?

(२) एसएलसीको परीक्षाफल प्रकाशित गर्दा पहिलो १० स्थानका लागि प्रकाशित सूचीमा व्यापक धाँधली भएको आरोप बिगतका चारवट एसएलसी परीक्षामा अग्रस्थान हासिल गर्दै आएको एउटा स्कुलले लगाएको छ। त्यो स्कुलले धाँधलीका केही आधारहरू पनि किटानी गरेको छ । यो समाचार प्रसारण हुँदैछ भन्ने थाहा पाएर परीक्षा नियन्त्रण कार्यालय सानोठिमीका नियन्त्रकले तपाईंलाई त्यो आरोप आधारहीन हो तथा त्यस्तो निराधार आरोपले विद्यार्थीको उत्साह घटाउने र परीक्षाफलप्रति सबैको अविश्वास सिर्जना हुने खतरा छ भन्दै प्रसारण नगरिदिन अनुरोध गरे । साथै उनले तपाईंलाई प्रस्ताव राखे- अहिले हामी ज्यादै व्यस्त छौं, अर्को हप्ता तपाईं हामीकहाँ आउनुहोस् हामी ती विद्यार्थीको उत्तरपुस्तिका नै देखाउनेछौं । यस अवस्थामा तपाई के गर्नुहुन्छ ?

(३) देशमा महामारी फैलिएको छ । महामारीकै कारण एक हजार जना बिरामीको ज्यान गइसकेको छ र मर्ने क्रम अझै रोकिएको छैन । महामारीका बेला अपनाइनुपर्ने आपतकालीन उपचार सेवाप्रति सरकारले देखाएको उदासीनताका कारण यति ठूलो मानवीय पीडा राष्ट्रले बेहोर्नुपरेको आरोप स्वास्थ्यकर्मीहरूले लगाएका छन् । यो आरोप सार्वजनिक भएपछि तपाईंले स्वास्थ्यमन्त्रीको अन्तर्वार्ता लिन चाहनुभयो । सुरुमा मन्त्रीले इन्कार गरे । बारम्बारको अनुरोधपछि मन्त्री अन्तर्वार्ता दिन त तयार भए तर सशर्त । शर्तहरू थिए- प्रश्नहरू लिखित रूपमा मन्त्रीलाई अग्रिम उपलब्ध गराइनुपर्ने र अन्तर्वार्ता सम्पादन भइसकेपछि प्रसारण हुनुपूर्व फेरि मन्त्रीलाई सुनाएर स्वीकृति लिनुपर्नेछ । अब के गर्नुहुन्छ ?

निश्चय नै पत्रकारको आचारसंहिता पालना नगर्दा इजाजत रद्द हुँदैन । यसको मतलव जे गरे पनि पत्रकार खतरामुक्त छ भन्ने चाहिँ होइन । तपाईंको इजाजत खोस्ने कोही नभए पनि तपाईंले दिन खोज्नुभएको सन्देशप्रति श्रोँता वा पाठकले अवज्ञा गर्छ,अविश्वास गर्छ भने यो अवस्था तपाईको पेशागत हिसाबले पूर्ण मृत्यु हो ।

एक्काइसौं शताब्दीको पूर्वार्द्धमा आइपुग्दा हामीले प्रजातन्त्र र प्रविधिको क्षेत्रमा अत्यधिक सफलता हासिल गरिसकेका छौं । प्रजातन्त्रले मानवअधिकार तथा नागरिक अधिकारका बारेमा व्यापक चासो र जिम्मेवारी बढाएको छ । यसले अधिकारका साथै मानव उत्तरदायित्वको पक्षलाई समेत उजागर गरेको छ । यस्तै विज्ञानको क्षेत्रमा भएका नयाँ-नयाँ आविष्कारले मानवीय प्रयत्नहरूलाई अकल्पनीय मोडमा ल्याइपुऱ्याएका छन् । समाजमा भएका यी परिवर्तनले मानव सम्बन्धलाई प्रत्यक्ष प्रभाव पारेको छ । समयको क्रमसँगै भौतिक, जैविक, प्राविधिक तथा सांस्कृतिक क्षेत्रमा आएको व्यापक परिवर्तनले व्यक्तिको विश्वास, विचार र चिन्तनशैलीमा समेत आमूल परिवर्तन गरिदिएको छ ।

## बदलिँदो सामाजिक प्रवृत्ति

समाजका धाराहरू परिवर्तन हुँदै जानु विकासक्रमको स्वभाविक नियम हो । हिजोआज सामाजिक मूल्य र मान्यताका धेरै पक्षहरूमा परिवर्तन आएको छ । व्यक्तिका आवश्यकता तथा रुचिमा अपत्यारिलो परिवर्तन आएको छ । सामाजिक दृष्टिकोणहरू बदलिएका छन् । दश वर्षअघि जुन कुरा अक्षम्य थियो आज त्यही कुरा नैतिक मानिन थालेको छ । यौनप्रतिको धारणा खुकुलो भएको छ । पर्दा प्रथामा बाँधिएको महिला समाज मिनीस्कटसम्म आइपुगेको छ । गर्भपतनले भ्रूण हत्याको अपराधबाट मुक्ति पाएर वैधानिकता ग्रहण गरेको छ । व्यक्तिका आनिवानीमा परिवर्तन आएको छ, रीतिरिवाजमा संशोधन भएको छ । कुनै समय शासकका अधिकारको मात्र चर्चा हुन्थ्यो, तर अहिले नागरिक तथा व्यक्तिका अधिकारको चर्चा बढी हुन थालेको छ । सामाजिक संरचना, स्वरूप र कार्य प्रणालीमा व्यापक परिवर्तन आएको छ । जसले नयाँ-नयाँ वैयक्तिक मूल्य स्थापित गर्दैछ ।

परिस्थितिको परिवर्तन सँगसँगै व्यक्ति र लोकको मानसिक, व्यावहारिक, सामाजिक, आर्थिक, नैतिक, राजनीतिक, आर्थिक तथा सांस्कृतिक व्यवस्थामा समेत परिवर्तन हुनेगर्छ ।

महिलाको सामाजिक विकासक्रमको गतिलाई उदाहरण मानेर यहाँ छोटो चर्चा गरौं । वैदिक युगमा महिलाले पढ्न लेख्न पाउँथे । अथर्ववेदमा महिलालाई घरकी सम्राज्ञीको संज्ञा दिइएको छ। त्यसबेला महिलाको हैसियत उच्च थियो। स्मृति (पौराणिक) युगको अन्त्यतिर आइपुग्दा महिलाले शिक्षाको अधिकारबाट वञ्चित हुनुपर्‍यो। क्रमशः उनीहरूको स्थिति दयनीय र सोचनीय बन्दै गयो। महिलाको स्वतन्त्रतालाई संकुचित पारिए, कार्यक्षेत्र सीमित गरियो। मध्ययुग महिलाप्रति अझ कठोर बन्यो। उनीहरूको स्थिति अझ नाजुक भयो। विधवा विवाहमा प्रतिबन्ध लगाइयो, बालविवाह र अनमेल विवाह सुरु भए, सती प्रथालाई प्रोत्साहन दिइयो। बहुविवाहलाई पुरुषको सामाजिक प्रतिष्ठाका रूपमा चित्रित गरियो। महिला पुरुषकी दासी बनेर रहन बाध्य भइन्। वर्तमान युग समाज सुधार आन्दोलनहरूको युग भएको छ । मानव अधिकार, नागरिक अधिकार, जातीय तथा मुक्ति आन्दोलन, लैंगिक समानता आन्दोलनहरूले सबैमा व्यापक राजनीतिक जागरण ल्याएको छ ।

नेपालकै सन्दर्भमा भन्ने हो भने दाइजो प्रजा, पर्दा प्रथा, बालविवाहमा धक्का लागेको छ । सम्पत्तिमाथि महिलाको अधिकार स्थापित हुँदै गएको छ। श्रीमती नै भए पनि महिलाको इच्छाविपरीतको यौन संसर्गलाई बलात्कारको परिभाषाभित्र राखिएको छ । उनीहरूको कार्यक्षेत्रलाई मझेरीमा सीमित नगरी फराकिलो पार्दै लगिएको छ ।

यस्तैगरी आर्थिक नियन्त्रणमा परिवर्तन आएको छ । सामन्तवाद, पुँजीवाद र समाजवादजस्ता सिद्धान्तबीचको द्वन्द्वले जनतालाई नयाँ-नयाँ पाठ सिकाएको छ । वितरणमा समानताको प्रश्न उठेको छ । श्रम र शोषणको परिभाषा तोकिएको छ । राज्य नियन्त्रित अर्थप्रणालीको ठाउँमा उदारीकरण र निजीकरण सुरु भएको छ। राज्यका हरेक कार्यमा जनसहभागिताको प्रश्न उठेको छ । र, उत्पादनका सम्बन्धहरू बदलिएका छन् ।

भगवान्ले रोग लगाउने मान्यता बदलिएर जीवाणुबाट रोग लाग्न थालेको छ । उपचारका नाममा पूजापात र भाकल गर्ने चलन रोकिएर

बिरामीहरू अस्पताल जान थालेका छन् । खानपिन, भेषभूषा, सिंगारपटार, मनोरञ्जनका साधन तथा लिंग, जात, वर्ग, उमेर, रंग आदिमा व्यापक परिवर्तन आएको छ ।

हिजोआज समाजसँग महत्त्वपूर्ण सम्बन्ध जोड्ने माध्यमका रूपमा प्रविधिले भूमिका खेलेको छ । प्रविधिले मान्छेका वास्तविकता, विश्वास तथा समझदारीमा आमूल परिवर्तन ल्याइदिएको छ । विज्ञानको आविष्कारले सिर्जना गरेका नयाँ-नयाँ सम्भावनाहरू सँगसँगै प्रशस्त अवसरहरू सिर्जना भएका छन् । कुनै कुरालाई प्रभावकारी हिसाबले व्यवस्थित गर्न प्रविधि सहायक बनेको छ । कम लागत र थोरै जनशक्तिमा धेरै कार्य गर्न प्रविधिले साथ दिएको छ ।

तर प्रविधिको विस्तारसँगै दुरुपयोग र खतराका सम्भावनाहरू पनि थपिएका छन् । एउटाको शरीरमा अर्काको टाउको सजिलै जोडेर फोटो छाप्न सकिने भएको छ । कुनै व्यक्तिले बोलेको कुरालाई अक्षर-अक्षर सम्पादन गरेर उसैको स्वरमा ठीक उल्टो भनाइ प्रसारण गर्न सकिने भएको छ । उदाहरणका लागि मान्नुहोस्, रामको स्वरमा तपाईंले मैले नभनेको कुरा हो यो भन्ने वाक्य रेकर्ड गर्नुभएको थियो। यसमा रेडियोकर्मीले खराब नियत राख्ने हो भने नभनेको भन्ने शब्दमा 'न' लाई मात्रै हटाउन पनि प्रविधिले साथ दिन्छ। जसको परिणाम मैले भनेको कुरा हो यो भन्ने अभिव्यक्ति रामकै स्वरमा प्रसारित हुन्छ। जुन सरासर उल्टो अभिव्यक्ति हो।

प्रविधिको आविष्कारले मान्छे मरेको कुरा घोषणा गर्न समेत विवादास्पद बनाइदिएको छ। अति परिस्कृत उपकरणहरूले मान्छेको दिमाग पूर्णरूपमा मरिसकेको भए पनि शरीरमा रक्तसंचार र श्वास-प्रश्वास कायम राख्न सक्ने भएको छ। नेपालकै पूर्व प्रधानमन्त्री मनमोहन अधिकारीको मृत्यु घोषणा यसै कारण विवादास्पद बनेको थियो । पत्रपत्रिकाहरूसमेत आफ्नो आस्थाअनुसार आपसी आरोप/प्रत्यारोपमा सामेल भएका थिए ।

पत्रकारिता सामाजिक तथा मानवीय सञ्चारको व्यवस्थित प्रक्रिया भएको हुँदा यसले समाजमा हुने हरेक परिवर्तनलाई सम्बोधन गर्न सक्नुपर्छ।

वर्तमान युग परम्परागत जीवनको समाप्ति र आधुनिक जीवनको आरम्भको चरण हो । जसले सामाजिक, सांस्कृतिक र परम्परागत मान्यतादेखि शासकहरूको दायित्वमा समेत व्यापक आन्तरिक तथा सामाजिक भूकम्प ल्याएको छ । समयको गतिअनुसार लोकको गति पनि बदलिँदै गएको छ । वैदिककाल, स्मृतिकालमा बदलियो, स्मृतिकाल ऐतिहासिक कालमा बदलियो, ऐतिहासिक काल मध्यकालमा बदलियो, मध्यकाल आधुनिककालमा बदलियो । अहिले हामी वर्तमानकालमा छौं ।

छोटकरीमा भन्दा विगतलाई वर्तमानले र वर्तमानलाई समेत भविष्यले परिवर्तन गराइरहेछ । मानवीय सम्बन्धहरूमा परिवर्तन आएको छ । व्यक्तिका आस्था, विश्वास, प्रवृत्ति, सोचाइ र दिनचर्याहरू बदलिएका छन् । समाजको बनावट, आकार र संगठन स्वरूपहरू फेरिएका छन् । राजनीतिक ढाँचा तथा उत्पादनका तरिकामा परिवर्तन भएको छ । व्यक्ति, जात र वर्गको भूमिका फरक-फरक भएको छ ।

अन्तत हामीले बुझ्नुपर्ने कुरा के हो भने पत्रकारिता भनेको प्राविधिक प्रश्नमात्रै होइन, यसमा सामाजिक तथा नैतिक प्रसंगहरू सोझै सामेल हुन्छन् । हाम्रो सार्वजनिक मूल्यांकनका बेला प्राविधिक पक्ष हराएर जान्छ । नैतिक तथा आचार व्यवहारहरूको मूल्यमा हाम्रो सामाजिक हैसियत तथा सफलताको फैसला हुनेगर्छ । तसर्थ हामीले बदलिँदो परिस्थिति सँगसँगै हाम्रा व्यवहारहरूलाई आदर्शवान्, मर्यादित र अनुकरणीय बनाउँदै लैजान सक्नुपर्छ । यो निचोडले आचारसंहिताको नयाँ सन्दर्भलाई औंल्याएको छ । बदलिँदो सामाजिक परिस्थिति सँगसँगै पेशागत मान्यताहरूमा परिवर्तन हुनुपर्छ । आचारसंहितालाई जड, स्थिर र निरपेक्ष ढंगले बुझेर पुग्दैन ।

## स्रोत विनियोजन

केही वर्षअघिसम्म बूढाबूढीलाई समाजका अनुत्पादक वर्ग ठानेर उनीहरूको अस्तित्वलाई नै समाजको किनारामा राख्ने गरिन्थ्यो । जसको कारण उनीहरूमाथि नैसर्गिक लगानीसमेत हुनुहुँदैन । खेल र

मनोरञ्जनका क्षेत्रमा व्यापारीहरूले धेरै लगानी गर्थे । राज्यले युद्धमा बढी लगानी गर्थ्यो । महिला तथा बालबालिकामाथिको लगानी गौण थियो । शिक्षा र स्वास्थ्यलगायत जनताका आधारभूत आवश्यकताको परिपूर्तिका लागि त्यति चासो थिएन । उत्पादनका क्षेत्रमा अत्यधिक लगानी गरिन्थ्यो । सञ्चार माध्यमले राजनीतिक गतिविधि, मनोरञ्जन तथा यौन गतिविधिमाथि समय, पैसा र ठाउँ लगानी गर्थे ।

अहिले त्यो बूढो होस् वा अनुत्पादक वर्ग, मानव जीवनको कुनै पनि हालतमा सम्मान गरिनुपर्छ भन्ने मान्यता स्थापित भएको छ । जसको कारण बूढाबूढी, बालबच्चा, महिला र अधवैंसे सबैमा आवश्यकताअनुसार लगानी सुरु भएको छ ।

स्वास्थ्य क्षेत्रमा प्राथमिक स्वास्थ्यका साथसाथै सघन उपचारका लागि पनि लगानी सुरु भएको छ । जसका कारण आईसीयू र सीसीयूजस्ता उपचार क्षेत्रमा अति विशिष्टीकरण र परिस्कृत इकाइहरू खुल्न थालेका छन् । आर्थिक क्षेत्रमा उत्पादनका साथै वितरण र व्यवस्थापनमा लगानी थपिएको छ । महिला तथा बालबालिकामाथिको लगानी बढाइएको छ ।

## परिवर्तित पेशागत मान्यता

पत्रकारिताको विकास सँगसँगै यसको मान्यता र भूमिकामा व्यापक परिवर्तन भइरहेको छ । चार सय वर्षअघि पत्रकारिताको थालनी हुँदा माथिका कुरा तल लैजाने नोकरशाहीतन्त्रीय मान्यताबाट सुरु भएको थियो । त्यसबेला प्रेसलाई इजाजत तथा सेन्सरजस्ता कार्यबाट सरकारले नियन्त्रित गर्थ्यो । पत्रकारितालाई सरकारी नीति तथा कामकारबाहीलाई जनतासम्म फैलाउने र शासकहरूको हितमा कार्य गर्ने औजारका रूपमा प्रयोग गरिन्थ्यो । यही भूमिकाको आधारमा त्यसबेलाको पत्रकारिताको सिद्धान्तलाई सर्वसत्तावादी सिद्धान्त भन्ने गरिएको छ ।

यो अवधारणाले पत्रकारितामा झन्डै तीन शताब्दी लामो शासन गऱ्यो । ईस्वीकै १९ औं शताब्दीसम्म आइपुग्दा राजनीतिक, आर्थिक तथा धार्मिक क्षेत्रमा व्यापक परिवर्तन भइसकेका थिए । यी परिवर्तनसँगसँगै पत्रकारितामा

पनि नयाँ मान्यता सुरु भयो। पत्रकारितालाई त्यसबेला सत्यको खोजी गर्ने साथीका रूपमा व्याख्या विश्लेषण गरियो। सरकारी नियन्त्रण र प्रभावबाट बाहिर ल्याइयो। पत्रकारिताको यो रूपलाई उदारवादी सिद्धान्तको नाम दिइयो। तर यो सिद्धान्तका अनुयायीहरू पत्रकारिताको माध्यमबाट नाफा कमाउन तथा विज्ञापनदाताको सेवातर्फ मात्र केन्द्रित रहे। श्रोता वा पाठकको हितका पक्षमा उनीहरू देखिएनन्। उनीहरूका लागि पाठक वा श्रोता भनेका उपभोक्तामात्र ठहरिए। प्रेसमाथि व्यापारी तथा समाजका अल्पसंख्यक चतुरहरूको हालीमुहाली चल्यो।

दोस्रो विश्वयुद्धपछि प्रेस स्वतन्त्रताको पुनर्व्याख्या गरियो। यो व्याख्याअनुसार समाजप्रतिको निश्चित दायित्व पूरा गर्ने शर्तमा मात्र प्रेस स्वतन्त्रता दिइएको हुन्छ। सामाजिक उत्तरदायित्वको सिद्धान्तअनुसार पत्रकारिताले विविध विचार तथा घटनाहरूलाई प्रवाहित गरेरमात्र नपुग्ने भयो। ती विचार र घटनालाई जिम्मेवारीका साथ व्याख्या र विश्लेषणसमेत गर्नु पत्रकारिताको सामाजिक दायित्व ठहरियो।

यसैबीचमा पत्रकारितामा समाजवादी सिद्धान्तको प्रादुर्भाव भयो। साम्यवादी सिद्धान्तका प्रवर्तक मार्क्स र एंगेल्सले पत्रकारितालाई समाजको विकास र प्रगतिका लागि प्रयोग गर्ने कुरामा जोड दिए। पछि सोभियत संघमा यस खाले पत्रकारिताको प्रयोग भयो। जसमा प्रेसको प्रमुख काम पार्टी तथा समाजवादी प्रणालीलाई समर्थन गर्नु, रक्षा गर्नु तथा विस्तार गर्नु रह्यो।

निजी क्षेत्रबाट सञ्चालित संचारमाध्यमको अति व्यापारीकरण तथा सार्वजनिक प्रसारण सेवाहरूको अति केन्द्रीकरण तथा नोकरशाहीकरणका विरुद्ध प्रजातान्त्रिक सहभागितामूलक पत्रकारिताको सिद्धान्त अघि सारियो। यो सिद्धान्तअनुसार पत्रकारिताले श्रोताका रुचि, उत्साह र आवश्यकताहरूलाई सम्बोधन गर्न सक्नुपर्छ।

बीसौं शताब्दीको उत्तरार्द्धमा आइपुग्दा पत्रकारिता क्षेत्रमा नयाँ आवाज उठ्यो। विकसित मुलुकको पत्रकारिताले सधैं नकारात्मक रूपमा चित्रण गर्ने विकासोन्मुख मुलुकहरू एसिया र अफ्रिकाका

सञ्चारकर्मीले यो आवाज चर्को रूपमा उठाए । विकास पत्रकारिताका नाममा अघि सारिएको यो सिद्धान्तले सकारात्मक घटनाहरू पनि पत्रकारिताका विषय हुन् भन्ने कुरामा जोड दियो । यसले गरिबीदेखि आर्थिक क्षैत्रमा भएको द्रूत प्रगतिले समाजमा पार्ने समानता तथा असमानतालाई समेत पत्रकारिताको परिधिभित्र ल्यायो ।

यसरी पत्रकारितामा मात्रात्मक पक्षमा मात्र होइन, गुणात्मक पक्षमा समेत व्यापक परिवर्तन भएको छ । प्रविधिको आविष्कार र प्रतिस्पर्धाले समाचारको एउटै स्रँतमा भर पर्नुपर्ने अवस्था अब छैन । हिजोआज प्रत्येक समुदाय आफैं सञ्चारका साधनको प्रयोग गर्न अग्रसर हुन थालेका छन् । सामुदायिक रेडियो यसैको एउटा स्वरूप हो । प्रविधि र पत्रकारिताको भिन्न-भिन्न प्रयोगसँगसँगै पत्रकारिता क्षैत्रका दायित्वहरू पनि समयअनुसार बदलिएका छन् ।

# नागरिक अधिकार

नागरिक अधिकार प्रत्येक नागरिकको जन्मसिद्ध अधिकार हो । यही अधिकारलाई संरक्षित गर्न संयुक्त राष्ट्रसंघले विश्वव्यापी घोषणापत्र जारी गरेको छ । जसमा नेपालले पनि सहमति जनाएको छ । यसबाहेक नागरिक अधिकारको संरक्षणका लागि प्रत्येक देशले अलग-अलग कानुन निर्माण गर्ने गरेका छन् ।

हाम्रो मुलुकले नागरिक अधिकारलाई मौलिक हकका रूपमा संविधानमा व्यवस्था गरेको छ। नागरिक अधिकारको प्रभावकारी कार्यान्वयनका लागि नागरिक अधिकार ऐन २०१२ को व्यवस्था गरिएको छ । यो ऐनले नागरिक अधिकारका रूपमा निम्नलिखित अधिकारलाई संरक्षित गरेको छ ।

*(१) वाक स्वतन्त्रता इत्यादिसम्बन्धी अधिकार :*

(क) वाक र प्रकाशन स्वतन्त्रता

(ख) शान्तिपूर्वक र बिनाहातहतियारको सम्मेलन सभा गर्ने

(ग) संस्था वा संघ खडा गर्ने

(घ) नेपाल अधिराज्यभर जुनसुकै भागमा पनि निवास गर्ने र घरजाम गर्ने

(च) सम्पत्ति आर्जन गर्ने, भोग गर्ने, बेचबिखन गर्ने

(छ) कुनै पेशा, रोजगार, उद्योग वा व्यापार गर्ने

*(२) धर्मसम्बन्धी हक :*

(क) धार्मिक र गुठी सदावर्त संस्थाहरू कायम गर्ने चलाउने

(ख) धर्मसम्बन्धी र सामाजिक संसर्गका लागि आफ्नो व्यवस्था गर्ने

(ग) सम्पत्ति जम्मा गर्ने, आफ्नो नाउँमा राख्ने र प्रचलन गर्ने

(३) ***सम्पत्तिसम्बन्धी अधिकार :*** प्रचलित नेपालको कानुनको अख्तियारबिना कुनै व्यक्तिको सम्पत्ति अपहरण गरिने छैन ।

(४) ***नागरिकको बासस्थानको रक्षा :*** प्रचलित नेपाल कानुनको अख्तियारबिना कुनै नागरिकको बासस्थान जबर्जस्ती प्रवेश गर्न हुँदैन ।

(५) ***वैयक्तिक स्वतन्त्रता :*** प्रचलित नेपाल कानुनबमोजिमबाहेक कुनै पनि व्यक्तिको ज्यान वा वैयक्तिक स्वतन्त्रता हरिने छैन ।

# मानवअधिकारको विश्वव्यापी घोषणा–पत्र १९४८

(१० डिसेम्बर १९४८ का दिन संयुक्त राष्ट्रसंघको महासभाको निर्णय नं. २१७ (III) द्वारा पारित तथा घोषित)

धारा १

स्वतन्त्रता मानिसको जन्मजात अधिकार हो । सबै मान्छे जन्मजात स्वतन्त्र, फुक्का हुन्छ । सबैको समान अधिकार र समान महत्त्व छ । त्यसकारण सबैले एकआपसमा आफन्तको व्यवहार गर्नुपर्छ ।

धारा २

घोषणा-पत्रमा बयान गरिएका हकहरू सबैका लागि समान छन् । जाति, वर्ण, लिंग, भाषा, धर्म, राजनीतिक, सामाजिक वा अरू कुनै मर्यादाको आधारमा भेदभाव नगरी प्रत्येक व्यक्तिसँग यस घोषणामा उल्लेखित अधिकार र स्वतन्त्रताको हक छ । यसबाहेक स्वतन्त्र वा परतन्त्र जस्तोसुकै देश होस् त्यहाँका नागरिकलाई राजनीतिक क्ष्ँत्रीय वा अन्तर्राष्ट्रिय स्थितिको आधारमा भेदभाव गरिनु हुन्न ।

धारा ३

सबैले बाँच्न तथा आफ्नो सुरक्षँा आफैंले गर्न पाउनुपर्छ । प्रत्येक व्यक्तिलाई व्यक्तिगत स्वतन्त्रता र आत्मसुरक्षँाको अधिकार हुनेछ ।

धारा ४

कसैले कसैलाई पनि बाँधा वा दासदासी बनाउन पाइँदैन । बाँधा वा दास बनाई कसैलाई पनि राखिनु हुन्न । दासत्व र दासदासीको व्यापार कुनै पनि रूपमा गर्न मनाही गरिएको छ ।

धारा ५

यातना मान्छेलाई नसुहाउने व्यवहार हो । कुनै पनि व्यक्तिलाई शारीरिक यातना दिइनु हुन्न । निर्दयी, अमानवीय वा अपमान र बेइज्जतीपूर्ण व्यवहार सजाय दिन पाइँदैन ।

धारा ६

कानुनी मान्यताको कुरा : कानुनको दृष्टिमा प्रत्येक व्यक्ति, व्यक्तिका रूपमा सम्मानित हुन पाउनुपर्छ ।

धारा ७

कानुनका अगाडि सबै समान छन् । कानुनका दृष्टिमा सबै मानिस बराबर छन् र बिनाभेदभाव कानुनको भोगचलन सबैले एकैनासले गर्न पाउनुपर्छ । यस घोषणालाई सबैले उल्लंघन गऱ्यो भने पीडित पक्ष्ँले कानुनी संरक्ष्ँण पाउनुपर्छ । भेदभावको विरुद्ध संरक्षणको अधिकार सबैलाई हुनुपर्छ ।

धारा ८

कसैको पनि मौलिक हक हनन हुनुहुँदैन । संविधान वा कानुनद्वारा दिइएका मौलिक अधिकार भंग गरिनुहुन्न । यदि कसैको मौलिक अधिकार भंग भयो भने अदालत गएर उजुरी गर्न पाइन्छ । अदालतको ढोका सबैका निम्ति खुल्ला हुन्छ ।

धारा ९

मनोमानी ढंगले कैद, नजरबन्द वा देश निकाला गर्न पाइँदैन । कसैलाई पनि मनोमानी ढंगले देश निकाला गर्नु, गिरफ्तार गर्नु, कैद वा नजरबन्द गर्नु मानवअधिकारको उल्लंघन गर्नु हो ।

धारा १०

फौजदारी आरोपका विरुद्ध सुनुवाइ हुनुपर्छ । व्यक्तिउपर लगाइएको फौजदारी आरोपका विरुद्ध उसको अधिकार र दायित्व छानबिन गरिनुपर्छ । उसले स्वतन्त्र र न्याययुक्त अदालतबाट सुनुवाइको हक पाउनुपर्छ ।

धारा ११

अपराध प्रमाणित नभएसम्म निरपराध मानिन्छ ।

(१) बचाउका निमित्त सबै आवश्यक सुविधाहरू दिइएको खुला अदालतले कानुनअनुसार अपराधी नठहऱ्याउने दण्डनीय अपराधको आरोप लागेको कुनै पनि व्यक्तिलाई निरपराध मानिन्छ ।

(२) कुनै व्यक्तिले गरे वा नगरेका कुनै काम उक्त समयमा रहेको राष्ट्रिय वा अन्तर्राष्ट्रिय कानुनअन्तर्गत अपराध मानिँदैन भने त्यस्तो काम गरेबापत कुनै पनि व्यक्तिलाई दोषी ठहऱ्याइनुहुन्न । कुनै पनि व्यक्तिलाई अपराध गरेबापत उक्त समयमा दिन सकिनेभन्दा बढी सजाय दिन पाइँदैन ।

धारा १२

गोपनीयताको हक सबैलाई छ, कुनै पनि व्यक्तिको गोप्यता, परिवार, घर वा पत्र व्यवहारमाथि मनोमानी हस्तक्षेप गरिनुहुन्न । कसैको सम्मान तथा ख्यातिमाथि चोट पुऱ्याइनुहुन्न । त्यस्तो हस्तक्षेप वा चोटका विरुद्ध प्रत्येक व्यक्तिसँग कानुनी संरक्षणको अधिकार छ ।

धारा १३

बसाइँ सराइ तथा बसोबासको स्वतन्त्रता

(१) प्रत्येक व्यक्तिलाई आफ्नो देशको सिमानाभित्र स्वतन्त्रतापूर्वक डुलफिर गर्ने वा बसोबास गर्ने अधिकार छ ।

(२) प्रत्येक व्यक्तिलाई आफ्नो देश वा अरू कुनै पनि देश छाड्ने र आफ्नै देशमा फर्की आउने पूर्णअधिकार छ ।

धारा १४

राजनीतिक शरणको हक

(१) कुनै पनि व्यक्तिलाई लगाइएको अभियोगबाट उम्किन अरू देशमा शरण लिने र शरण खोज्ने अधिकार छ । शरणको मरण गर्न पाइँदैन ।

(२) संयुक्त राष्ट्रसंघको उद्देश्य र सिद्धान्तविपरीतका कार्यहरू वा अराजनीतिक अपराधहरूको अभियोग सम्बन्धमा भने यो अधिकारको प्रयोग गर्न पाइँदैन ।

धारा १५

नागरिकताको अधिकार सुरक्षित हुनुपर्छ ।

(१) प्रत्येक व्यक्तिलाई उसले बसोबास गरिरहेको देशको नागरिकता प्राँप्त गर्ने अधिकार छ ।

(२) कुनै पनि व्यक्तिलाई मनोमानी ढंगले नागरिकताबाट वञ्चित गरिनु हुन्न । नागरिकता परिवर्तन गर्ने अधिकारलाई इन्कार गर्न पाइन्न ।

धारा १६

राजीखुसीले विवाह गर्न तथा परिवार बसाल्न पाइन्छ ।

(१) जाति, राष्ट्रियता वा धर्मको भेदभावबिना उमेर पुगेका स्त्री, पुरुषहरूलाई राजीखुसीले बिहे गर्ने र परिवार स्थापना गर्ने अधिकार छ । बिहेको विषय वैवाहिक जीवन तथा छोडपत्र गर्ने काममा समेत महिला पुरुषको समान अधिकार हुनुपर्छ ।

(२) बिहेको इच्छा गर्ने र स्त्री र पुरुषबीच उनीहरूको पूर्णसहमतिबाट मात्र बिहे हुनुपर्छ । उनीहरूको ठहरउपर कसैको दखल हुनुहुँदैन ।

(३) समाजको स्वभाविक, सामूहिक र आधारभूत एकाइ परिवार हो । समाज र राज्यद्वारा संरक्षँण पाउने अधिकार प्रत्येक

परिवारसँग हुन्छ ।

धारा १७

सम्पत्ति आर्जन गर्न पाउने अधिकार सबैलाई छ ।

(१) प्रत्येक व्यक्तिलाई एक्लै वा अरूसँग मिलेर सम्पत्ति कमाउने र राख्न पाउने अधिकार छ ।

(२) कुनै पनि व्यक्तिको सम्पत्ति मनोमानी ढंगबाट राज्य वा सरकारले हरण गर्न वा खोस्न पाउँदैन ।

धारा १८

कसैले पनि कुनै धर्म लिन वा छोड्न पाउँछ । प्रत्येक व्यक्तिले विचार, मत र धार्मिक स्वतन्त्रताको अधिकार पाउनुपर्छ । धर्म वा मत बदल्ने स्वतन्त्रता जोसुकैले पाउनुपर्छ । सार्वजनिक वा व्यक्तिगत रूपमा एक्लै वा समूहमा आफ्नो धर्म वा मत शिक्षा, आचरण, पूजा र पालनाद्वारा प्रकट गर्ने स्वतन्त्रता पनि सबैले पाउनुपर्छ ।

धारा १९

बोल्ने, लेख्ने र छाप्ने/छपाउने स्वतन्त्रता : प्रत्येक व्यक्तिले आफ्नो विचार बोलेर, लेखेर वा छपाएर खुलस्त पार्न पाउनुपर्छ । चित्तले खाएको मत लिने, बिनारोकतोक कुनै माध्यमद्वारा मत पाउन खोज्ने र प्रसार गर्ने अधिकार सबैलाई छ । त्यस काममा कसैले दखल गर्न पाउँदैन ।

धारा २०

सभा गर्ने र संस्था खोल्ने अधिकार मानव अधिकारभित्रै पर्छ ।

(१) शान्तिपूर्ण तरिकाले सभा गर्ने तथा संस्था खोल्ने अधिकार प्रत्येक व्यक्तिले पाउनुपर्छ ।

(२) कुनै पनि संस्थाको सदस्य बन्नका लागि कसैलाई पनि कर गर्न पाइँदैन ।

धारा २१

सरकारमा भाग लिन पाउने अधिकार हामी सबैको हो ।

(१) देशको शासन अंगमा स्वतन्त्र चुनावबाट छानिएर भाग लिने अधिकार प्रत्येक व्यक्तिलाई छ ।

(२) प्रत्येक व्यक्तिसँग आफ्नो योग्यताअनुसार देशको सरकारी जागिर खान पाउने हक हुन्छ ।

(३) सरकार वा शासन सत्ताको जनताको इच्छा सर्वव्यापी समान मताधिकारद्वारा समय-समयमा हुने निष्पक्ष चुनावमार्फत अभिव्यक्त गरिनुपर्छ । त्यस्तो गोप्य र स्वतन्त्र मतदानद्वारा गरिनुपर्छ ।

धारा २२

सामाजिक सुरक्षाको हक सबैले पाउनुपर्छ । समाजको सदस्यको हैसियतले प्रत्येक व्यक्तिको सामाजिक सुरक्षा हुनुपर्छ । सरकारले आफ्नो गच्छेअनुसार प्रत्येक व्यक्तिलाई आत्मसम्मान र व्यक्तित्वको स्वतन्त्र विकासका निम्ति चाहिने आर्थिक, सामाजिक र सांस्कृतिक सहयोग दिनुपर्छ ।

धारा २३

रोजगारी, समान ज्याला र युनियनको अधिकार सबैले पाउनुपर्छ ।

(१) प्रत्येक व्यक्तिले काम गर्ने, आफ्नै इच्छाबमोजिम नोकरी रोज्ने उचित र अनुकूल परिस्थिति पाउनुपर्छ । बेरोजगारीबाट मुक्त हुन पाउनु सबैको अधिकार हो ।

(२) प्रत्येक व्यक्तिले बिनाभेदभाव समान कामका लागि समान ज्याला पाउनुपर्छ ।

(३) काम गर्ने प्रत्येक व्यक्ति र उसको परिवारका लागि आवश्यक जीविकाको बन्दोबस्त हुनुपर्छ । उसका निम्ति उचित र अनुकूल

पारिश्रमिक तथा अन्य प्रकारको सामाजिक संरक्ँ णको व्यवस्था हुनुपर्छ ।

(४) प्रत्येक व्यक्तिले आफ्नो हितको रक्ँ ाका निम्ति ट्रेड युनियनको स्थापना गर्न वा त्यसमा संगठित हुन पाउनुपर्छ ।

धारा २४

छुट्टी र कामको निश्चित समय तोकिनुपर्छ । तोकिएबमोजिमको समयभित्र काम गर्ने प्रत्येक व्यक्तिले वेतनसहितको बिदा र मौका पाउनुपर्छ ।

धारा २५

जीवनस्तरको अधिकार

(१) प्रत्येक व्यक्ति र उसको परिवारलाई स्वास्थ्यलगायत सबै सुविधा प्रँ प्त हुनुपर्छ । यसमा खाना, कपडा, घर तथा औषधोपचारका सुविधा र आवश्यक सामाजिक सेवाहरू पनि पर्छन् । बिरामी असमर्थता, विधवा भएर असहाय हुनुपरेको स्थिति, बुढेसकाल वा शक्तिबाहिरको अरू कुनै परिस्थितिमा साधनको अभाव भएमा प्रत्येक व्यक्तिले सुरक्षा पाउनुपर्छ ।

(२) मातृकाल वा बाल्यावस्थामा रहेका प्रत्येक व्यक्तिलाई विशेष हेरचाह, सहायता प्राप्त हुनुपर्छ । विवाहित र अविवाहिता दुवै किसिमका आमाबाट जन्मेका बालकले समान सामाजिक संरक्ँ णको भोग चलन गर्न पाउनुपर्छ ।

धारा २६

शिक्ँ ा पाउने अधिकार सबैलाई छ ।

(१) प्रत्येक व्यक्तिले शिक्षा आर्जन गर्न पाउनुपर्छ । शिक्ँ ा कमसेकम प्रँ रम्भिक अवस्थामा निःशुल्क हुनुपर्छ । प्रारम्भिक शिक्ँ ा अनिवार्य र प्रँ विधिक व्यावसायिक शिक्ँ ा सर्वसुलभ हुनुपर्छ । उच्चस्तरको

शिक्षा योग्यताको आधारमा सबैले समान रूपले पाउनुपर्छ ।

(२) मानिसको व्यक्तित्वको पूर्ण विकास र मानवअधिकार तथा स्वतन्त्रतालाई बलियोपन गरी शिक्षाको प्रसार गरिनुपर्छ । शिक्षा राष्ट्र, जाति र धार्मिक समूहबीच आपसी सद्भावना, सहनशीलता र मित्रताको विकास गर्दै शान्ति कायम गर्नका लागि संयुक्त राष्ट्रसंघका प्रयत्नहरूलाई अघि बढाउने किसिमको हुनुपर्छ ।

धारा २७

कलाको आनन्द लिन र वैज्ञानिक उपलब्धिको उपयोग गर्न पाउनुपर्छ ।

(१) प्रत्येक व्यक्तिलाई स्वतन्त्रतापूर्वक समाजको सांस्कृतिक जीवनमा भाग लिने, कलाहरूको आनन्द लिने तथा विज्ञानले दिएका सुविधाको भोग चलन गर्ने अधिकार छ ।

(२) प्रत्येक व्यक्तिले उसले सिर्जना गरेको कुनै वैज्ञानिक, साहित्यिक वा कलात्मक कृतिबाट आउने नैतिक र भौतिक लाभहरूको संरक्षण गर्न पाउनुपर्छ ।

धारा २८

सामाजिक र अन्तर्राष्ट्रिय व्यवस्थाको हक । यस घोषणापत्रमा उल्लेख गरिएका अधिकार र स्वतन्त्रताहरू पूर्णरूपले प्राप्त गर्नका लागि प्रत्येक व्यक्तिले सामाजिक र अन्तर्राष्ट्रिय व्यवस्थाको सहायता लिन पाउनुपर्छ ।

धारा २९

अरूको अधिकारको पनि ख्याल गर्नुपर्छ ।

(१) प्रत्येक व्यक्तिको समाजप्रतिका कर्तव्यहरू छन् । त्यस्ता कर्तव्यभित्र रहेरमात्र व्यक्तिको स्वतन्त्र र पूर्णविकास सम्भव हुन्छ ।

(२) आफ्नो अधिकार र स्वतन्त्रताको उपभोग गर्दा प्रत्येक व्यक्तिले अरूको अधिकार र स्वतन्त्रताप्रति पनि आदर र सद्भाव राख्नुपर्छ ।

प्रजातान्त्रिक समाजका नैतिकता, सार्वजनिक सुव्यवस्था र सर्वसाधारणका कल्याणका कुरा पाउनका लागि सबैले कानुनद्वारा तोकिएको सीमाभित्र रहनुपर्छ ।

(३) यी अधिकार र स्वतन्त्रताको संयुक्त राष्ट्रसंघको सिद्धँन्त र उद्देश्यविपरीत हुने हालतमा दुरुपयोग गर्न पाइँदैन ।

धारा ३०

यो घोषणापत्रको अपव्याख्या गर्न पाइँदैन । कुनै राष्ट्र, वर्ग वा व्यक्तिले यस घोषणापत्रमा उल्लेख गरिएका अधिकार र स्वतन्त्रतालाई कुठाराघात गर्ने उद्देश्यले वा त्यस्तो किसिमको काम गर्न पाउने गरी यसको व्याख्या गर्न पाउँदैन ।

## गोपनीयताको हक

गोपनीयताको हक नेपालमा संवैधानिक हक हो। संविधानको धारा २२ ले व्यक्तिको गोपनीयताको हकलाई मौलिक हकका रूपमा सुरक्षित गरेको छ। संवैधानिक रूपमा व्यवस्था भएको यो हकका सम्बन्धमा धारा २२ को व्यवस्था यस्तो छ- 'कुनै पनि व्यक्तिको जीउ, आवास, सम्पत्ति, लिखत, पत्राचार वा सूचनाको गोपनीयता कानुनद्वारा तोकिएको अवस्थामा बाहेक अनतिक्रम्य हुनेछ ।'

गोपनीयताको हकसम्बन्धी संविधानको भावनाअनुरूप अहिलेसम्म छुट्टै कानुनको निर्माण भएको छैन । विभिन्न सन्दर्भमा विभिन्न ऐनमा उल्लेख भएका कुरालाई नै हालसम्म गोपनीयताको हकसम्बन्धी भएका कानुनी व्यवस्थाका रूपमा लिनुपर्ने हुन्छ । यसरी छरिएर रहेका कानुनी व्यवस्थामा प्रमाण ऐन २०३१ मा भएका आठवटा दफाले पेशागत गोप्यतासम्बन्धी अधिकारलाई सुरक्षित गरेका छन् । यसैगरी दूरसञ्चार ऐन २०५३ र हुलाक ऐन २०१९ ले गोपनीयतासम्बन्धी प्रँवधानको पनि व्यवस्था गरेको छ । लिखतको गोपनीयतासम्बन्धी ऐन २०३९ जारी भएर पनि हालसम्म लागू हुन सकेको छैन ।

## प्रमाण ऐन

प्रमाण ऐन २०३१ को दफा ४० देखि ४६ सम्म व्यवस्था भएका ८ वटा पेशागत गोप्यतासम्बन्धी प्रँवधान :

(१) कुनै पक्षका विरुद्ध गवाही दिन निजका आमा, बुबा, छोरी, लोग्ने वा स्वास्नीलाई कर लाग्ने छैन ।

(२) कुनै लोग्नेले स्वास्नीलाई वा स्वास्नीले लोग्नेलाई आफ्नो दाम्पत्य सम्बन्ध कायम रहेको अवस्थामा व्यक्त गरेका कुनै कुरा प्रकट गर्न कर लाग्ने छैन ।

(३) न्यायाधीशको हैसियतले गरेको कुनै कार्य प्रकट गर्न कर नलाग्ने

(४) सरकारी कार्यालयमा रहेका अप्रकाशित लिखितका कुरा प्रकट गर्न नहुने

(५) सरकारी कर्मचारीलाई प्राप्त भएको जानकारी प्रकट गर्न कर नलाग्ने
(६) प्रहरी कर्मचारीलाई अपराध घटेको कुराको जानकारीको स्रोत प्रकट गर्न कर नलाग्ने
(७) कानुन व्यवसायीले आफ्नो पक्षले दिएको जानकारी प्रकट गर्न नहुने
(८) कुनै व्यक्ति र निजको व्यावसायिक कानुनी सल्लाहकारको बीचमा भएको कुरा प्रकट गर्न पक्षलाई कर नलाग्ने

## दूरसञ्चार ऐन

दूरसञ्चार ऐन २०५३ को दफा १९ मा व्यवस्था गरिएको श्री ५ को सरकारको विशेषाधिकारसम्बन्धी प्रावधानले संकटकालीन अवस्था परी वा राष्ट्रिय सुरक्षाका कारणले खबर आदान-प्रदानमा रोक लगाउन सक्ने व्यवस्था गरेको छ । त्यसका लागि दफा १९ (ख) अनुसार कुनै खास किसिमको विषय, व्यक्ति वा समुदायसँग सम्बन्धित खबर टेप गर्न त्यस्तो खबर पठाउने व्यक्ति पहिल्याउन वा त्यस्तो खबरको प्रसारण रोक्न आदेश दिन श्री ५ को सरकारले सक्नेछ ।

यो अवस्थाबाहेक संविधानको धारा २२ ले व्यवस्था गरेको गोपनीयताको हक अनतिक्रम्य मानिने कुरा स्पष्ट छ ।

## मुलुकी ऐन

मुलुकी ऐन अदालती बन्दोबस्त महलको १७२ नम्बरमा अपराध अनुसन्धानको सिलसिलामा खानतलासी वा अपराधसँग सम्बन्धित प्रमाण संकलन गर्दा सरकारी पक्षले पुऱ्याउनुपर्ने विधिका बारेमा उल्लेख गरिएको छ ।

## नजिर

सर्वोच्च अदालतले अन्नपूर्ण राणाविरुद्ध काठमाडौं जिल्ला

अदालतसमेतको चर्चित मुद्दामा गोपनीयतासम्बन्धी महत्त्वपूर्ण व्याख्या गरेको छ । 'मञ्जुरीबेगर कसैको जीउ आदि जाँच गराउँदा गोपनीयताको अतिक्रमण हुनजाँन्छ । त्यसमा पनि मञ्जुरीबेगर महिलाको योनि जस्तो गुप्ताङ्गको जाँच गराउँदा संविधानको धारा २२ ले प्रदान गरेको हकबाट वञ्चित हुनजान्छ । गोपनीयताको हकको व्यवस्थाबाट व्यक्तिको निजी जीउ अंगको गोपनीयतामा अतिक्रमण गर्न नपाइने गरी गोपनीयताको हकको संवैधानिक सुनिश्चितताको स्पष्ट व्यवस्था भएबाट अदालतकै आदेश भए पनि यदि शरीरको त्यस्तो गोप्य अंग निजको मञ्जुरीबेगर जाँच गर्न लगाइन्छ भने त्यसबाट व्यक्तिलाई सो गोपनीयताको हकबाट वञ्चित गर्नुसरह नै हुने स्पष्ट देखिन आउँछ ।' (ने.क.पा. २०५५ अंक ८ पृष्ठ ४७६) ।

## घोषणापत्र

गोपनीयताको हक सम्बन्धमा नोर्डिक सम्मेलन अर्को महत्त्वपूर्ण उपलब्धि हो । सन् १९६७ मा सम्पन्न नोर्डिक सम्मेलनले निजी, पारिवारिक र गृहस्थ जीवनमा हस्तक्षेप गर्नु, व्यक्तिको शारीरिक वा मानसिक, नैतिक वा बौद्धिक स्वतन्त्रतामा अतिक्रमण गर्नु, व्यक्तिको मानप्रतिष्ठामा आक्रमण गर्नु, झूठा कुराको प्रदर्शन गर्नु, उसको निजी जीवनका असान्दर्भिक र अप्ठ्यारो पार्ने तथ्यहरू खुलासा गर्नु, जासुसी गर्नु, पिछा गर्नु, पत्राचारमा हस्तक्षेप गर्नु, व्यक्तिको निजी सञ्चारमाध्यमको दुरुपयोग गर्नु, विश्वासका आधारमा प्राप्त कुराहरूको भेद खोल्नु आदि कार्य गोपनीयताको हकको प्रतिकूल हुने निचोड निकालेको छ ।

प्रतिलिपि अधिकारसम्बन्धी कानुनले मान्छेका दिमागी उत्पादनहरूको संरक्षणका विषयमा सरोकार राख्छ । सर्जक तथा रचयिताहरूलाई सम्मानित गर्न र उनीहरूका सिर्जना तथा मौलिक कार्यहरूको रक्षा गर्न थुप्रै देशहरूले प्रतिलिपि अधिकारसम्बन्धी कानुन बनाएका छन् । नेपालमा पनि पछिल्लोपटक प्रतिलिपि अधिकार ऐन, २०५९ जारी भएको छ । प्रतिलिपि अधिकारको सन्दर्भ रेडियो प्रसारकहरूका लागि निकै जटिल विषयवस्तु हो । प्रसारणका समयमा कुन बेला प्रतिलिपि अधिकारसम्बन्धी समस्या आउँछ भनी निक्र्यौल गर्न त्यति सजिलो छैन ।

## प्रतिलिपि अधिकार ऐनको कार्यक्षेत्र

प्रतिलिपि अधिकार ऐन २०५९ ले सिर्जनशील कार्यहरूको व्यापक क्षेत्रलाई समेटेको छ :

- साहित्यिक कार्य : किताब, पर्चा, लेख, शोधपत्र
- नाटकीय कार्य : नाटक, नाट्यसंगीत, मुक चित्र र त्यस्तै किसिमले मञ्चनका लागि तयार गरिएका रचना
- संगीत : शब्दसहित वा शब्दरहित साँगीतिक रचना
- श्रव्यदृश्य रचना
- आर्किटेक्चरल डिजाइन
- चित्रकला, पेन्टिङ, मूर्तिकला, काष्ठकला, लिथोग्राफी र आर्किटेक्चरसम्बन्धी अन्य रचना
- फोटोजन्य रचना
- प्रयोगात्मक रचना
- प्रयोगात्मक कलासम्बन्धी रचना
- उद्दरण, मानचित्र, योजना, भूगोलसम्बन्धी त्रिआयामिक रचना, टोपोग्राफी र वैज्ञानिक लेख रचना
- कम्प्युटर प्रोग्राम

## अनुमतिबिना नै प्रतिलिपि अधिकार भएका सामग्री प्रयोग गर्न सकिने अवस्था :

- उद्दरण गर्न सकिने : प्रतिलिपि अधिकार ऐन २०५९ मा केही अपवादहरू पनि रहेका छन् । कुनै प्रकाशित रचनाको केही अंश सत्कार्यका लागि रचयिता वा प्रतिलिपि अधिकार धनीको आर्थिक अधिकारमा प्रतिकूल असर नपर्ने गरी निजको अनुमतिबिना नै उद्दरण गर्न पाइनेछ । यसरी उद्दरण गर्दा स्रोत र रचनाकारको नाम उल्लेख गर्नुपर्छ ।
- सर्वसाधारणलाई जानकारी गराउने लक्ष्य लिएर अनुमतिबिना नै कुनै रचनाको स्रोत र रचयिताको नाम उल्लेख गरी रचनाको पुनर्उत्पादन तथा प्रसारण गर्न सकिनेछः
  - कुनै समाचारपत्र वा पत्रपत्रिकामा छापिएका लेख, राजनीतिक वा धार्मिक शीर्षकको लेख वा यस्तै प्रकृतिको प्रसारणलाई कुनै समाचारपत्र वा पत्रपत्रिकामा छाप्न वा प्रसारण गर्न,
  - कुनै ताजा घटनाका सम्बन्धमा जानकारी गराउने उद्देश्यले पुनर्उत्पादन, प्रसारण वा अन्य किसिमको सञ्चार गर्न वा कुनै घटनालाई पुष्टि गर्न,
  - ताजा सूचना प्रवाह गर्ने उद्देश्यले प्रस्तुत गरिएका वा अदालती कारबाहीका सम्बन्धमा गरिएको बहस कुनै समाचारपत्र वा नियमित रूपमा प्रकाशन हुने पत्रिकाको केही अंश पुनर्उत्पादन तथा प्रसारण गर्न ।
- श्रुति रचना : अन्तर्वार्ता, टस्टीमोनी, भाषण आदिलाई पटक-पटक प्रयोग गर्न पाइन्छ,
- समीक्षा : कुनै कृतिको समीक्षा गर्दा अनुमतिबिना नै समीक्षा गरिएको कृतिको केही अंश साभार गर्न सकिनेछ,
- छोटो अंशको प्रयोग : प्रतिलिपि संरक्षित रचनाको छोटो अंश

अनुमतिबिना नै प्रयोगमा ल्याउन सकिनेछ,

- संयोगपूर्ण अवस्था : कुनै घटना भइरहेको ठाउँमा कसैले रचना गरेका संगीत वा दृश्यहरू छन् भने त्यो घटनाको प्रसारण गर्दा रेडियो वा टेलिभिजनले प्रतिलिपि अधिकारअनुसारको अनुमति लिनुपर्दैन,
- संगीतको रोयल्टी दिने व्यवस्था स्टेसनले गरेको छ भने संगीत बज्नुअघि नै अनुमति लिनु आवश्यक छैन,
- एकपटक अनुमति लिएर प्रसारण गरिसकेको सामग्रीलाई प्रसारण संस्थाले पुनः प्रसारण गर्न पाउनेछ,
- आफ्नो प्रसारणको समायोजन गर्न पाउनेछ,
- आफ्नो प्रसारणको समायोजनको पुनर्उत्पादन गर्न पाउनेछ ।

# गाली र बेइज्जती

कुनै व्यक्तिको प्रतिष्ठामा आघात पुऱ्याउने कार्य गाली-बेइज्जतीअन्तर्गत पर्छ । कुनै पनि व्यक्तिलाई आफ्नो प्रतिष्ठा वा इज्जत जोगाउन पाउने पूर्णअधिकार छ । व्यक्तिको इज्जत वा प्रतिष्ठामा अनाधिकृत हिसाबले क्षति पुऱ्याउने अधिकार कसैलाई छैन । तसर्थ गाली-बेइज्जती गर्नुलाई नेपाली कानुनले प्रकृति हेरी देवानी वा फौजदारी अपराधको कोटीमा राखेको छ । देवानी मुद्दाको क्षतिपूर्ति र फौजदारी मुद्दाको दण्ड-सजाय दुवै सजायको व्यवस्था गाली-बेइज्जती कानुनमा पाइन्छ ।

सर्वसाधारणको इज्जत र मानमर्यादाको रक्षाका लागि नेपालमा गाली-बेइज्जती ऐन २०१६ तर्जुमा गरिएको छ । जसले गाली-बेइज्जती हुने र नहुने अवस्थालाई बुँदागत रूपमा परिभाषित गरेको छ ।

## गाली-बेइज्जती गरेको ठहरिने अवस्था

(१) कुनै व्यक्तिको इज्जतमा धक्का पुऱ्याउने नियतले वा धक्का पुग्छ भन्ने जानी-जानी वा विश्वास गर्ने कारण भई त्यस्तो व्यक्तिलाई कुनै दोष लगाएमा वा त्यस्तो कुरा प्रकाशित/प्रसारित गरेमा,

(२) मरिसकेको कुनै व्यक्तिलाई कुनै दोष लगाइएको भएमा सो गरेको समय निज जीवित रहेको भए निजको इज्जतमा धक्का पुग्ने रहेछ र निजको परिवार वा नजिकको अन्य नातेदारको भावनामा चोट पुऱ्याउने मनसायले गरिएको रहेछ भने,

(३) व्यंग्य गरी वा अरू कुनै घुमाउरो तवरले लगाइएको दोष,

(४) जानाजान कसैको चरित्रहत्या गर्न वा अनुचित लाञ्छना लगाउने नियतले दोष लगाइएमा वा प्रचार-प्रसार गरेमा ।

## गाली-बेइज्जती गरेको नठहरिने अवस्था

- सर्वसाधारणको हितका लागि आवश्यक भएमा कुनै व्यक्तिलाई साँचो कुराको दोषारोपण गर्नु,
- कुनै राष्ट्रसेवकले आफ्नो ओहदाको काम कर्तव्य गर्दा निजको आचरणलाई लिएर वा सो आचरणबाट बुझिनेसम्मको मात्र निजको चरित्रलाई लिएर असल नियतले कुनै विचार प्रकट गर्नु,
- कुनै व्यक्तिको सार्वजनिक प्रश्नसँग सम्बन्ध पर्ने आचरण र सो आचरणबाट बुझिनेसम्मको मात्र निजको चरित्रलाई लिएर असल नियतले कुनै विचार प्रकट गर्नु,
- कुनै अदालती कारबाहीमा त्यसको नतिजाको वास्तविक रूपमा साँचो प्रतिवेदन प्रकाशित गर्नु,
- कुनै अदालतले छिनेको कुनै मुद्दाको गुण-दोषलाई लिएर वा त्यस्तो कुनै मुद्दाको वादी, प्रतिवादी, साक्षी वा वारिस भएको कुनै व्यक्तिको आचरणलाई लिएर वा सो आचरणबाट बुझिनेसम्मको निजको चरित्रलाई लिएर असल नियतले कुनै विचार प्रकट गर्नु,
- कुनै कुरा गर्ने व्यक्तिले सर्वसाधारणको रायका लागि सो कुरा पेस गरेकोमा सो कुराको गुण वा दोषलाई लिएर वा त्यसबाट बुझिनेसम्मको मात्र सो कुरा गर्ने व्यक्तिको चरित्रलाई लिएर असल नियतले कुनै विचार प्रकट गर्नु,
- सर्वसाधारणको हितका लागि असल नियतले कसैको चरित्रलाई दोष लगाउनु,
- सर्वसाधारणको हितका लागि असल नियतले कुनै व्यक्तिविरुद्ध जनसाधारणलाई सचेत गराउनु ।

यस्ता कुनै पनि कुरा प्रकाशन वा प्रसारण गर्दँ सो कुरा सार्वजनिक हितका लागि र असल नियतले गरेको हो भनी प्रमाणित गर्ने दायित्व प्रकाशन वा प्रसारण संस्थाको हुनेछ ।

# अदालतको अवहेलना

अदालती प्रक्रियामा रहेका विषयहरूलाई न्याय प्रक्रियामा समेत प्रभावित पार्ने गरी गरिने कार्य वा अभिव्यक्ति अदालतको अवहेलनाका विषयमा पर्छन् । मानहानीको यो न्यायिक अधिकार राज्यका संवैधानिक अंगहरू सरकार, संसद्देखि प्रकाशन, प्रसारण तथा सर्वसाधारणसमेतका विरुद्धमा अदालतले प्रयोग गर्न सक्छ ।

अदालतसँग अवहेलनासम्बन्धी असीमित अधिकार छ । अदालतको विचाराधीन विषयमा संसद्मा समेत छलफल गर्न मनाही छ । अदालतको विचाराधीन विषयमाथि सार्वजनिक रूपमा प्रकाशन तथा प्रसारणबाट मतमतान्तर गर्न पाइँदैन । यस सम्बन्धमा सर्वोच्च अदालतविरुद्ध हरिहर विरहीसमेतको मुद्दामा सर्वोच्चले नजिर कायम गरेको छ । सर्वोच्च अदालतमा विचाराधीन रहेको टनकपुर सन्धिसम्बन्धी मुद्दाको विषयलाई लिएर साप्ताहिक विमर्शले बाँदरको हातमा नरिवल झल्किने कार्टुन छापेको थियो । यो कार्टुनले अदालतको अवहेलना भएको ठहर गरी तोकिएबमोजिम क्षमा प्रार्थना नगरे सम्पादकलाई ७ दिनको कैदको सजाय हुने निर्णय भएको थियो ।

न्याय प्रशासन ऐन २०४८ को दफा १८ र सर्वोच्च अदालत ऐन २०४८ को दफा ७ मा भएको व्यवस्थाबमोजिम अदालतको अवहेलना गरेमा बढीमा १ वर्ष कैद र १० हजार रुपैयाँसम्म जरिवाना वा दुवै सजाय हुन सक्छ ।

अदालतको अवहेलनासम्बन्धी विषय सामान्यतया मुद्दाको कार्यविधि सक्रिय रहेको बेलामा संवेदनशील हुन्छ । अधिकांश फौजदारी मुद्दामा अभियुक्त पक्राउ परेदेखि नै सक्रिय अवधि मानिन्छ । यसैगरी देवानी मुद्दामा मुद्दाको सुनुवाइको प्रक्रिया सुरु भएपछि सक्रिय अवधि मानिन्छ ।

## अदालतको अवहेलना गरेको ठहरिने अवस्था

- कुनै अदालतमा विचाराधीन मुद्दालाई प्रभावित पार्ने उद्देश्यले तयार पारिएका सामग्रीहरूः
  - (क) मुद्दाको सुनुवाइ भइरहेको बेलामा प्रत्यक्षँदर्शीको अन्तर्वार्ता प्रसारण, प्रकाशन गरेमा,
  - (ख) प्रत्यक्षँदर्शीसँग मिलेर मुद्दाका प्रमाणहरूलाई प्रभावित पार्ने गरी विचार वा तथ्य प्रसारण, प्रकाशन गरेमा,
  - (ग) मुद्दामा संलग्न पक्षँहरू प्रत्यक्षँदर्शी, न्यायाधीश, वकिल, घटनामा संलग्न वादी, प्रतिवादीलाई प्रभावित पार्ने खालका टिप्पणी वा सामग्री प्रसारण, प्रकाशन गरेमा,
  - (घ) मुद्दाका बारेमा न्यायाधीशहरूले गर्नुपर्ने तर बिर्सिएका विषयहरू भनी रिपोर्टिङ गरेमा,
  - (ङ) मुद्दामो फैसला र त्यसले सिर्जना गर्ने परिणामको पूर्वानुमान गरी सामग्री प्रसारण, प्रकाशन गरेमा ।
- अदालतबाट भएको कुनै कामकारबाही वा निर्णयको सम्बन्धमा अदालतको मर्यादामा आघात पुग्ने गरी कुनै सामग्री प्रसारित गरेमा,
- अदालतप्रतिको जनआस्थामा प्रतिकूल असर पर्ने सामग्री प्रकाशित गरेमा,
- अदालतको निर्णयको कार्यान्वयनमा बाधा हुने कुनै सामग्री प्रकाशित गरेमा ।

# नेपाल

## पत्रकार आचारसंहिता– २०५५

पत्रकारले देहायका कार्यहरू गर्न हुँदैन :

(१) समाचार एवं विचारको प्रकाशन प्रसारणमा पत्रकारहरूले सत्य र न्यायको पक्षँमा इमानदार तथा निष्पक्षँ भई प्रस्तुत हुनुपर्छ । यी अभिष्टविरुद्ध कुनै कार्य गर्नुहुँदैन ।

(२) नेपाल अधिराज्य बहुभाषिक, बहुधार्मिक र बहुजातीय नेपाली जनताको साझा फूलबारी भएकाले पत्रकारहरूले प्रत्यक्ष वा परोक्षँ यस मान्यताको प्रतिकूल हुने समाचार प्रकाशन तथा प्रसारण गर्नुहुँदैन ।

(३) समाचारको मर्म र यथार्थता तोडी बङ्ग्याएर र विज्ञापनलाई समाचारका रूपमा प्रस्तुत गर्नुहुँदैन ।

(४) पत्रकारले व्यक्तिको चरित्रहत्या हुने र गोपनीयताको हक हनन हुने प्रकृतिको समाचार प्रकाशन तथा प्रसारण गर्नुहुँदैन ।

(५) पत्रकारले समाचारको स्रँत खोल्नुहुँदैन ।

(६) पत्रकारितालाई व्यक्तिगत स्वार्थपूर्तिका निम्ति प्रयोग गर्नुहुँदैन । समाचारलाई माध्यम बनाएर अनुचित आर्थिक वा अन्य लाभ लिने नियत राख्नुहुँदैन ।

(७) सामाजिक संरचनामा आघात पुऱ्याउने तथा व्यावसायिक मर्यादाको उल्लंघन गर्ने विकृत र उत्तेजक सामग्रीलाई समाचार र विचारका रूपमा प्रकाशन तथा प्रसारण गर्नुहुँदैन ।

# पत्रकारहरूको आचारसंहितासम्बन्धी घोषणा–पत्र

सन् १९५४ अप्रिल २५-२८ मा बोर्दोमा सम्पन्न अन्तर्राष्ट्रिय पत्रकार महासंघको दोस्रो सम्मेलनद्वारा पारित एवं सन् १९८६ जुन २-६ मा हेल्सिंगरमा सम्पन्न अन्तर्राष्ट्रिय पत्रकार महासंघको १८ औं सम्मेलनद्वारा संशोधित

(१) सत्यलाई स्वीकार गर्ने, सर्वसाधारणलाई सत्य, तथ्य सूचना दिने कामलाई पत्रकारको पहिलो कर्तव्य मानिएको छ ।

(२) आफ्नो कामलाई प्रोत्साहित गर्न, इमानदारीपूर्ण तरिकाले समाचार संकलन र प्रकाशन, प्रसारण गर्न र स्वस्थ आलोचना गर्न पत्रकारले जहिले पनि स्वतन्त्रतासम्बन्धी सिद्धान्त अवलम्बन गर्नुपर्छ ।

(३) सत्य, तथ्य घटना वा तथ्यपूर्ण घटनाको स्रोत खोलेरमात्र पत्रकारले सूचना प्रवाहित गर्नुपर्छ । पत्रकारले आवश्यक जानकारी लुकाउन हुँदैन र आवश्यक प्रमाण अदल-बदल पनि गर्नुहुँदैन ।

(४) पत्रकारले सूचना वा जानकारी प्राप्त गर्न वा फोटा खिच्न स्वस्थ तरिका अपनाउनुपर्छ, छलकपट गर्नुहुँदैन ।

(५) हानि पुऱ्याउन सक्ने वा अविश्वसनीय रूपमा प्राप्त सूचना वा जानकारीलाई शुद्ध वा तथ्यपूर्ण बनाउन पत्रकारले हरतरह कोसिस गर्नुपर्छ ।

(६) विश्वासमा परेर सूचना वा समाचार दिने, स्रोत गोप्य राख्ने व्यावसायिक धर्मलाई पत्रकारले सदैव पालन गर्नुपर्छ ।

(७) सञ्चारमाध्यमबाट हुनसक्ने भेदभावपूर्ण व्यवहारको खतराप्रति पत्रकार सचेत हुनैपर्छ । जात, जाति, लिंग, यौन, व्यवहार, भाषा, धर्म, राजनीतिलगायत अन्य विचार, राष्ट्रिय वा सामाजिक उत्पतिस्थान आदिमा आधारित भेदभावपूर्ण व्यवहार हटाउन सकेसम्म कोसिस गर्नुपर्छ ।

(८) पत्रकारले निम्न कुरामा ध्यान पुऱ्याउनुका साथै बच्ने कोसिस गर्नुपर्छ ।

- लिखत-चोरी,
- द्वेष या ईर्ष्यापूर्वक झूठा कुरा गर्नु,
- बद्ख्वाई, कलंक, मानहानि, झूठा आरोप,
- प्रकाशन वा अप्रकाशन गरेबापत जुनसुकै स्वरूपमा घूस लिने ।

(९) माथि उल्लिखित आचारसंहिता पालना गर्ने र विश्वासपूर्वक काम गर्ने भएकाले पत्रकारहरूको नाम आदरपूर्वक लिइने गरिन्छ । सामान्यत: कामका लागि सरकारलगायत अन्य कसैले हस्तक्षेप नगरे पनि आ-आफ्नो देशको कानुनबमोजिम नै पत्रकारले आ-आफ्नो काम गर्नुपर्छ ।

# डेनमार्क

## राष्ट्रिय आचारसंहिता

*(सन् १९९२ मा राष्ट्रिय पत्रकार युनियनको सहमतिमा डेनिस संसद्द्वारा कानुनै हैसियत प्रदान गरिएको)*

### आधारभूत दृष्टिकोण

सूचना तथा समाचारको संकलन तथा तिनको यथासम्भव सही र तथ्यपरक रूपमा प्रकाशन गर्नेजस्ता प्रेस स्वतन्त्रतासँग डेनमार्कमा अभिव्यक्ति स्वतन्त्रताको अक्षँूणताले गहिरो सम्बन्ध राख्छ। स्वतन्त्र रूपमा टिप्पणी गर्नु पनि अभिव्यक्ति स्वतन्त्रताभित्र पर्ने कुरा हो। तर, यो स्वतन्त्रताको अभ्यास गर्दा प्रेसले हरेक नागरिकको व्यक्तिगत मर्यादा तथा गोपनीयताको कदर गर्दै तिनको अन्यायी उल्लंघन हुन दिनुहुँदैन।

यसबाहेक आमजनता र बाहिरी दुनियाँका लागि महत्त्वपूर्ण सूचनालाई प्रकाशित नगर्नु पनि पत्रकारिताको धर्मको उल्लंघन गरिएको मानिनेछ। त्यसमाथि सूचनालाई लुकाउने प्रयासले आमसञ्चार माध्यमको स्वतन्त्रतामा पनि आँच आउन सक्छ। माथिका यी नियमहरू उल्लंघन हुने कुनै काम कुनै प्रत्रकारलाई लगाइएमा पनि त्यो पत्रकारिताको धर्मविपरीत हुन्छ। यसका अतिरिक्त कुनै पनि पत्रकारलाई उसको इच्छाविपरीत कुनै काममा लगाउनुहुँदैन।

यी नियमहरू छापा, रेडियो तथा टेलिभिजन तथा अन्य आमसञ्चारबाट प्रकाशित/प्रसारित हुने सबैखाले सम्पादित सामग्रीहरू (तस्वीर लेख) समेतमा लागू हुन्छन्।

अर्को कानुन नबनेसम्म यी नियमले छापा, रेडियो, टेलिभिजन र अन्य आमसञ्चारका माध्यममा प्रकाशित/प्रसारित हुने विज्ञापनहरूसमेतमा लागू हुनेछ।

यी नियमले उल्लेख गरिएको वा नगरिएको व्यक्ति, संस्था र

त्यस्तैखाले संस्थाहरूसमेत समेट्नेछ ।

## संहिताका नियमहरू

### (क) सही सूचना

१. प्रेसको मुख्य दायित्व सही र प्रमाणित सूचना प्रकाशित गर्नु हो। सम्भव भएसम्म सूचनाको विश्वसनीयता जाँच गर्नुपर्छ,

२. स्रोतहरूबाट प्राँप्त समाचारलाई आलोचनात्मक रूपमा हेर्नुपर्छ । विशेषगरी सूचनाहरू व्यक्तिगत रुचि र गलत अभिप्रायले तोडफोड गरी आउन सक्ने अवस्थामा त अझ बढी नै ध्यान दिनुपर्छ ।

३. कसैको अपमान हुने खालको वा कसैको विचारलाई खण्डन गर्ने खालको सूचनालाई सचेत भएर परीक्षण गर्नुपर्छ ।

४. प्रश्न र जवाफहरू स्पष्ट पार्नका लागि सिलसिलाबार र उस्तै शैलीमा प्रकाशित गर्नुपर्छ ।

५. कुन समाचार हो र कुन टिप्पणी हो भन्ने स्पष्ट पारिनुपर्छ ।

६. शीर्षक/उपशीर्षक आदि दिँदा प्रकाशित/प्रसारित समाचारबाटै दिनुपर्छ र बाहिरबाट दिने हो भने प्रश्न वाचक आदि चिह्न प्रयोग गरेरमात्र दिनुपर्छ ।

७. कुनै सूचना/समाचार गलत प्रकाशित भएमा तिनलाई सम्पादककै अग्रसरतामा सच्याएर भूल सुधार गरिनुपर्छ । यसरी भूल सुधार छापिँदा/प्रसारण गर्दा पाठक/श्रोँताले भूल सुधार गरिएको हो भन्ने थाहा पाउन सक्ने अवस्था हुनुपर्छ ।

### (ख) पत्रकारिताको धर्म

१. अत्यन्त जनचासोका विषयबाहेक कसैको व्यक्तिगत जीवनमा आँच पुग्ने खालका सूचनालाई सकभर प्रकाशित/प्रसारित

गर्नुहुँदैन । किनकि हरेक मानिसलाई व्यक्तिगत जीवनलाई आफ्नो किसिमले बिताउने अधिकार हुन्छ ।

२. अत्यन्त जनचासोको अवस्थामा बाहेक आत्महत्या र आत्महत्याका प्रयासहरूलाई प्रकाशित/प्रसारित गर्नुहुँदैन ।

३. अपराध वा दुर्घटना पीडितलाई सहानुभूतिपूर्वक हेरिनुपर्छ । प्रत्यक्षँदर्शी पीडितका आफन्तहरूमा पनि त्यही नियम लागू हुन्छ । फोटा संकलन र संयमित तरिकाले गर्नुपर्छ ।

४. विज्ञापन र सम्पादित लेख समाचारहरूबीच स्पष्ट फरक देखिनुपर्छ । प्रत्यक्षँ र अप्रत्यक्षँ व्यावसायिक उद्देश्य भएका तस्वीर वा शब्दहरूलाई पत्रकारिताको अत्यन्त कुशल रचना भएमा मात्र प्रकाशित/प्रसारित गरिनुपर्छ ।

५. अन्य मानिसको गोप्यताको विशेष सम्मान गर्नुपर्छ । त्यसमाथि आफूले दिएको त्यसका असरको वक्तव्यले के प्रभाव पर्छ भन्ने थाहा नपाउनेबारेमा बताइदिनुपर्छ । यसका अतिरिक्त अरूको भावना, अनुभूति र आत्मनियन्त्रणका कमजोरीहरूको शोषण गराउनुहुँदैन ।

## (ग) अदालती रिपोर्टिङ

१. क र ख मा उल्लेख भएका सामान्य आचारसंहिताहरू अदालती रिपोर्टिङमा पनि लागू हुन्छन् ।

२. अदालती रिपोर्टिङका नियमहरू प्रहरीले मुद्दाको तयारी गर्दादेखि बहस-पैरवी सुनुवाइ र निर्णयसम्म लागू हुन्छन् ।

३. अदालती रिपोर्टिङ वस्तुपरक हुनुपर्छ । अदालती रिपोर्टिङका क्रममा पक्षँ र विपक्षका भनाइहरूमा पत्रकार तटस्थ बस्नुपर्छ । फौजदारी मुद्दाहरूमा रिपोर्टिङ गर्दा त्यो मुद्दा दर्ता भएको मात्र समाचार लेख्ने होइन, सरकारी पक्षँले अभियुक्तलाई निर्दोष ठानेर मुद्दा नै फिर्ता लियो कि अदालतले नै उसलाई निर्दोष भन्यो वा दोषी

करार दियो जस्ता कुरालाई निरन्तर समाचार दिइरहनुपर्छ ।

४. समाचारमा उल्लेख गरिने व्यक्तिको पारिवारिक पृष्ठभूमि, व्यवसाय, राष्ट्रियता, जात-जाति, सम्प्रदाय वा कुनै संस्थाको सदस्यताजस्ता तथ्यहरूलाई तबसम्म उल्लेख गर्नुहुँदैन जबसम्म त्यस्ता विषयवस्तुले मुद्दासँग प्रत्यक्ष सरोकार राख्दैनन् ।

५. फौजदारी मुद्दाका हकमा अदालती निर्णयलाई असर पुऱ्याउने गरी पक्ष/विपक्षका कुनै कुरा प्रकाशित/प्रसारित गर्नुहुँदैन । निर्णय नभएसम्म अभियुक्त दोषी वा निर्दोष हो भन्नु पनि हुँदैन । त्यसमाथि अभियुक्तले आफूलाई निर्दोष वा दोषी के ठानेको छ, स्पष्टसँग रिपोर्टिङमा उल्लेख गर्नुपर्छ ।

६. कस्ता खालका मुद्दालाई समाचार बनाउने र कस्ता खालका मुद्दाहरूमा संलग्न व्यक्तिको नाम उल्लेख गर्ने सम्बन्धमा एउटा स्पष्ट सीमा छुट्याउनुपर्छ । जनसरोकारका कारण कुनै नाम उल्लेख गर्नुपर्न नभएसम्म कुनै पनि अभियुक्तको नाम र परिचयको जानकारी समाचारबाट दिनुहुँदैन ।

७. अपराधका सम्बन्धमा अत्यन्त प्रचारित व्यक्ति वा प्रहरी वा सरकारी पक्षबाट कुनै अनुसन्धान नगरिएसम्म प्रहरीमा दर्ता हुन आएको अपराध र त्यसमा संलग्न व्यक्तिका बारेमा सूचना बाहिर ल्याउनुहुँदैन ।

८. कुनै अपराधमा सजाय पाएको व्यक्ति कुनै अर्को अपराधमा पक्राउ पर्दा पहिलेको अपराध र नयाँ अपराधमा प्रत्यक्ष सरोकार भएका अवस्थामा बाहेक उसको पूर्व सजायका बारेमा जानकारी बाहिर ल्याउनुहुँदैन ।

# बेलायत

*(सन् १९९४ मा बेलायती राष्ट्रिय पत्रकार युनियनले स्वीकार गरेको)*

१. उच्च व्यावसायिकता तथा नैतिकतामा काम गर्नु हरेक पत्रकारको कर्तव्य हो ।

२. हरेक पत्रकारले प्रेस स्वतन्त्रताका सिद्धान्त र आमसञ्चारसँग सम्बन्धित सूचना संकलन, विचार तथा टिप्पणीको स्वतन्त्र प्रवाहजस्ता सिद्धान्तको सधैं प्रतिरक्षा गर्नुपर्छ । पत्रकार सधैं समाचार दबाउने प्रयास, प्रेस सेन्सरसीप र सत्यको तोडफोडको अन्त्य गर्न प्रयासरत रहन्छ ।

३. सम्प्रेषित समाचारको शुद्धता, निष्पक्ष्ँता पुष्टि गर्न तथा गलत प्रतिनिधित्व वा तोडफोडबाट स्थापित गरिएको प्रतिक्रियाबाट बच्न पत्रकार सधैं प्रयत्नरत रहनेछ ।

४. पत्रकारले सधैं भयंकर त्रुटिबाट बच्ने र गल्ती भइहालेमा भूल सुधार र क्ष्ँमायाचना गर्नेछ र महत्त्वपूर्ण मुद्दामा आलोचित व्यक्तिलाई आलोचनाको जवाफ दिने अधिकार प्रदान गर्नेछ ।

५. पत्रकारले सूचना, फोटोग्राफ र रेखाचित्रहरूको प्रस्तुति सीधा एवं स्पष्टताको माध्यमबाट प्रस्तुत गर्नुपर्छ । अरू माध्यमबाट प्रस्तुत गर्दा जनचासोलाई ध्यान दिएर गरिएको पुष्टि गर्नसक्ने हुनुपर्छ । पत्रकारले त्यस्ता माध्यमहरू प्रयोग गर्दा व्यक्तिगत चेतनाको उपयोग गर्नुपर्छ ।

६. जनचासोको विषयलाई जोडदार प्रस्तुति गर्ने नाममा पत्रकारले अरूलाई व्यक्तिगत दु:ख र पीडा हुने कुरा गर्नुहुँदैन ।

७. हरेक पत्रकारले सूचनाको गोप्य स्रँतलाई संरक्ष्ँण गर्नुपर्छ ।

८. हरेक पत्रकारले व्यावसायिक काममा आँच आउने गरी कुनै खालको उपहार घूस वा प्रभावमा पर्ने अन्य कुराहरू स्वीकार गर्नुहुँदैन ।

९. विज्ञापन वा अन्य कारणले पत्रकारले सत्यलाई लुकाउने वा तोडमोड गर्नुहुँदैन ।

१०. हरेक पत्रकारले अत्यन्त सान्दर्भिकतामा बाहेक कुनै पनि व्यक्तिको रङ्ग, जाति, वर्ण, धर्म, वैवाहिक स्थिति वा लिंग आदिका बारेमा उल्लेख गर्नुहुँदैन । तर सान्दर्भिकता देखाउने नाममा पनि जातीय, धार्मिक विवाद बढाउने, अन्याय गर्ने खालका सूचना उत्पादन वा प्रवाह गर्नुहुँदैन ।

११. सूचना सार्वजनिक नहुँदै, कुनै पत्रकारले सूचनाको आधारमा कुनै व्यक्तिगत फाइदा लिनुहुँदैन ।

१२. आफ्नो कामको सुरक्षा गर्न वा आफू जागिर खाने संस्थाको प्रवर्द्धन गर्न एउटा पत्रकारले कुनै व्यावसायिक उत्पादन वा सेवाको विज्ञापन हुने गरी कुनै भनाइ, आवाज र दृश्यलाई ठाउँ दिनुहुँदैन ।

(संयुक्त राज्य अमेरिका)

# रेडियो टेलिभिजन समाचार निर्देशक संघ

*(सन् २००० मा स्वीकार गरिएको)*

## नैतिक तथा व्यावसायिक आचारसंहिता

विद्युतीय पत्रकारितामा उच्च व्यावसायिक स्तर कायम गर्न, जनचेतना अभिवृद्धि गर्न र आत्मविश्वासपूर्ण विद्युतीय पत्रकारिताको प्रवर्द्धन गर्न, सूचनाको निर्वाद संकलन र सम्प्रेषण गर्न पाउने स्वतन्त्र पत्रकारिताका सिद्धान्तलाई मजबुत बनाउन, रेडियो/टेलिभिजन समाचार निर्देशक संघ, यो नैतिक तथा व्यावसायिक आचारसंहिता स्थापित गर्छ ।

*प्रस्तावना :* व्यावसायिक विद्युतीय पत्रकारहरूले जनउत्तरदायी, सत्यवादी, निष्पक्ष तथा मर्यादित सूचनाको सम्प्रेषण गर्ने र आफ्नो कामप्रति जिम्मेवार भएर काम गर्नुपर्छ ।

*जनविश्वास :* व्यावसायिक विद्युतीय पत्रकारहरूले उनीहरूको पहिलो जिम्मेवारी जनताप्रति हुन्छ भन्ने बुझ्नु जरुरी छ ।

*व्यवसायी विद्युतीय पत्रकारहरूले–*

- जनसेवकबाहेक अन्य कुनै प्रतिबद्धताले सत्य र विश्वसनीयतालाई घटाउँछ भन्ने बुझ्नुपर्छ,
- जनचासोका विषयमा जनताको सेवा गर्दा समाजको विविधतालाई प्रतिविम्बित गर्दै मुद्दा वा घटनाको अति सामान्यीकरणबाट जोगाउनुपर्छ भन्ने बुझ्नुपर्छ,
- जनसरोकारसम्बन्धी कामहरू सार्वजनिक रूपमै गर्नका लागि बाध्य गर्न प्रयासरत हुनुपर्छ ।

*सत्यता :* व्यावसायिक विद्युतीय पत्रकारले सकेसम्म पूर्णरूपमा सत्य र तथ्यपरक समाचार प्रसारण गर्नुपर्छ ।

*व्यावसायिक विद्युतीय पत्रकारहरूले*

- सधैं सत्यता खोज्नुपर्छ,
- घटनाको महत्त्वलाई कम पार्ने किसिमले गरिने क्रियाकलापको प्रतिवाद गर्नुपर्छ,
- वास्तविक सूचनालाई छर्लङ्ग पारी अन्यत्रबाट प्रँप्त सूचनालाई प्रष्ट्याई दिनुपर्छ ।

*व्यावसायिक विद्युतीय पत्रकारहरूले गर्न नहुने कार्य :*

- गलत व्याख्या हुनेगरी दृश्य वा आवाजलाई बंग्याउने,
- एकपक्षीय भनाइ,
- जनतालाई सूचना नदिई कुनै दृश्य वा आवाजलाई दोहोऱ्याउनुहुँदैन,
- थाहा हुँदाहुँदै पनि गलत समाचार दिनु ।

*निष्पक्षता :* व्यावसायिक विद्युतीय पत्रकारले समाचारको महत्त्व र सान्दर्भिकतालाई ध्यान दिँदै निष्पक्ष रूपमा प्रस्तुत गर्नुपर्छ ।

*व्यावसायिक विद्युतीय पत्रकारहरूले :*

- समाचारका सबै विषयलाई समानता तथा सम्मानका साथ प्रस्तुत गर्नुपर्छ । साथै अपराध र दुर्घटना पीडितहरूलाई विशेष सहानुभूति देखाउनुपर्छ,
- बालबालिका समावेश भएको समाचारलाई विशेष सजगताका साथ प्रस्तुत गर्नुपर्छ । साथै ठूला मान्छेहरूको भन्दा उनीहरूको व्यक्तिगत गोप्यतालाई बढी सुरक्षित राख्नुपर्छ,
- सामुदायिक विविधालाई बुझ्ने प्रयास गर्दै पक्षपातबिना सूचना दिनु,
- भनाइ, विचार, दृष्टिकोणमा विविधता प्रस्तुत गर्नु,

- विश्लेषणात्मक रिपोर्टिङ गर्दा व्यक्तिगत पूर्वाग्रहभन्दा व्यावसायिक दृष्टिकोणबाट प्रस्तुत गर्नुपर्छ,
- पूर्वाग्रहविहीन सुनुवाइको अधिकारलाई सम्मान गर्नुपर्छ ।
- नैतिकता/इमानदारिता : व्यावसायिक विद्युतीय पत्रकारहरूले नैतिकता र इमानदारिताका साथ समाचार सम्प्रेषण गर्नुपर्छ । वास्तविक वा देखावटी खालको स्वार्थहरूको टकरावलाई स्थान नदिएर दर्शक तथा श्रोताको मर्यादा र बौद्धिकको कदर गर्दै समाचारको विषयलाई समेत ख्याल गर्नुपर्छ ।

*व्यावसायिक विद्युतीय पत्रकारहरूले के गर्नुपर्छ ?*

- सम्भव भएसम्म स्रोतको परिचय दिनुपर्छ । स्रोतको गोपनीयता तबमात्रै कायम राख्नुपर्छ जब यसले जनहितको महत्त्वपूर्ण सूचना सम्प्रेषित हुन्छ वा सूचना दिने मान्छेलाई कुनै नोक्सानी हुन्छ । गोप्य स्रोतहरूप्रतिको प्रतिबद्धता पालना गर्नुपर्छ ।
- विचार र टिप्पणीलाई स्पष्टसँग छुट्याई दिनुपर्छ ।
- जनतालाई ज्ञान दिन नसक्ने र महत्त्वपूर्ण समाचार बन्न नसक्ने व्यक्ति वा घटनालाई निरन्तर समाचार बनाई राख्नुहुँदैन ।
- हिंसाको स्थिति सुध्रँदैछ भने यसमा सम्बद्ध मान्छेहरूको सम्पर्कबाट जोगिनुपर्छ ।
- विचार पुऱ्याएरमात्र प्रविधिको प्रयोग गर्नुपर्छ । तथ्य तोडमोड हुने, वास्तविक छिप्ने वा घटनालाई बढी संवेदनशील बनाउने खालको प्रविधिलाई उपयोग गर्नुहुँदैन ।
- जनसरोकारको अत्यन्त महत्त्वपूर्ण समाचार संकलनमा अन्य कुनै उपाय नलाग्दामात्र गोप्य क्यामरा वा माइकको प्रयोग गर्नुपर्छ ।
- अरू निजी संस्थाको प्रसारणलाई पुनः प्रयोग गर्दा अनुमति लिनुपर्छ ।

*के गर्नुहुँदैन ?*

- गलत उद्देश्य भएको सूचनाको स्रोतलाई उपभोग गर्नु ।
- रिपोर्टिङलाई प्रभाव पार्नेहरूबाट घूस, उपहार आदि लिनुहुँदैन ।
- आफ्नो इमानदारिता वा स्वतन्त्रतामा सम्झौता गर्नुपर्ने खालका क्रियाकलापमा संलग्न हुनुहुँदैन ।

*स्वतन्त्रता :* व्यावसायिक विद्युतीय पत्रकारहरूले समाचारको विषयमा प्रभाव पार्ने वा नियन्त्रण गर्न चाहनेहरूबाट पत्रकारको स्वतन्त्रता कायम राख्न प्रतिबद्ध रहनुपर्छ ।

*व्यावसायिक विद्युतीय पत्रकारले गर्नुपर्ने काम :*

- विज्ञापनदाता, स्रोतहरू, समाचारको विषय, शक्तिशाली व्यक्तित्व, विशेष समूहहरूजस्ता कुनै पनि प्रभावमा नपरी बिनाडर, बिनापक्षपात समाचारको संकलन र प्रसारण गर्नुपर्छ ।
- समाचारलाई प्रभाव पार्नका लागि नजिक हुन चाहने वा किन्न वा राजनीतिक प्रभाव पार्न चाहिनेहरूबाट जोगिनुपर्छ ।
- बाहिरका प्रभावभन्दा सम्पादकीय छानबिनबाट समाचार निर्धारण गर्नुपर्छ ।
- पत्रकारको धर्म र जनताको सेवामा प्रभाव पार्ने निजी स्वार्थ वा समकक्षीको दबाबबाट जोगिनुपर्छ ।
- प्रायोजित समाचारका तथ्यको तोडमोड हुन दिनुहुँदैन ।
- मालिकहरू स्वार्थ वा व्यवस्थापनको प्रभावमा कुनै पनि समाचारको कुनै तथ्य हटाउन वा तथ्य तोडमोड हुन दिनुहुँदैन ।
- सबै पत्रकार प्रेस स्वतन्त्रताका लागि प्रतिबद्ध हुनुपर्छ ।

*उत्तरदायी :* व्यावसायिक विद्युतीय पत्रकारहरू आ-आफूले गरेको काम जनता, पेसा र उनीहरु आफैंप्रति उत्तरदायी छन् भन्ने बुझ्नुपर्छ ।

*व्यावसायिक विद्युतीय पत्रकारले गर्नुपर्ने काम :*

- यी माथिका नियमहरूलाई सबै पत्रकार र मालिकहरूले पालना गरुन् भनी प्रोत्साहित गर्नुपर्छ ।
- जनचासोहरूलाई ख्याल गर्ने, पूर्ण अनुसन्धान तथा त्रुटि सच्याउने र सकेसम्म वास्तविक रिपोर्ट तयार पार्नुपर्छ ।
- विशेषगरी रिपोर्टले प्रश्न र विवाद सिर्जना गर्दा जनतालाई पत्रकारिताको शैली बताउनुपर्छ ।
- व्यावसायिक विद्युतीय पत्रकारहरू नैतिकवान् र कर्तव्यपरायण छन् भन्ने स्पष्ट पार्नुपर्छ ।
- त्यस्ता काम गर्नुहुँदैन, जसले मालिक/व्यवस्थापकहरूलाई अनैतिक काम गर्न प्रँ त्साहित गर्छ ।
- मालिक/व्यवस्थापकहरू जसले नैतिकताका प्रश्न उठाउँछन् र आपसी छलफलको वातावरण बनाउँछन् भने तिनीहरूको कुरा सुन्नुपर्छ ।
- तालिमप्रँ प्त मालिक/व्यवस्थापकलाई नैतिकतासम्बन्धी प्रश्नको निर्णय गर्ने काममा सहयोग गर्नुपर्छ ।

रेडियो/टेलिभिजन समाचार निर्देशक संघले यो संहिता महत्त्वपूर्ण मुद्दाहरूको पहिचान गर्न, यसका सदस्यलाई मार्गदर्शन प्रदान गर्न, आत्म संयमताको प्रवर्द्धन गर्न र भविष्यको छलफलका लागि खाका तयार पार्न निर्माण गरिएको हो ।

# संयुक्त राज्य अमेरिका

## *अमेरिकी समाचारपत्र सम्पादक समाज*

(अमेरिकी समाचारपत्र सम्पादक समाजद्वारा सन् १९२२ मा 'पत्रकारिताको मान्यता' का रूपमा स्वीकार तथा सन् १९७५ मा संशोधन गरी 'सिद्धान्तहरूको घोषणापत्र' का नाममा जारी गरिएको)

**प्रस्तावना:**

कुनै पनि कानुनले संकुचित नपार्ने गरी अभिव्यक्ति स्वतन्त्रता पत्रकारिताको माध्यमबाट समेत संवैधानिक हकका रूपमा आमजनतालाई प्रत्याभूत गर्ने गरिन्छ र त्यसका लागि पत्रकारहरूका यसप्रतिको गहन दायित्व निहित छ। यसैले पत्रकारिता क्षेत्रमा कार्यरतहरूले आफ्नो भूमिकालाई केबल एउटा उद्योग वा ज्ञान प्रवाहका रूपमा नलिएर उच्च इमानदारिताका साथ आफ्नो आचरण प्रदर्शन गर्नुपर्छ ।

अमेरिकी समाचारपत्र सम्पादक समाजले उच्च नैतिक तथा व्यावसायिकताको मापदण्डलाई प्रोत्साहित गर्न यो घोषणापत्र जारी गरेको हो ।

दफा १

*उत्तरदायित्व :* समाचार तथा विचार संकलन र प्रवाहको आधारभूत मान्यता जनतालाई सूचित गर्ने तथा उनीहरूलाई समयअनुसारका मुद्दामा आफ्नो राय दिन सक्षम बनाई जनहितमा काम गर्नु हो। कुनै पत्रकारले आफ्नो स्वार्थ तथा गलत उद्देश्य पूर्तिका लागि व्यावसायिक पत्रकारिताको भूमिका निर्वाह गर्दैन भने त्यो जनविश्वासमाथिको कुठराघात हो। अमेरिकी प्रेसलाई स्वतन्त्रता दिनुको कारण सूचना दिनका लागि अथवा छलफल गर्ने मञ्चका लागि मात्रै होइन, यसको अर्थ सरकारलगायत समाजका सबै शक्तिलाई आचरणभित्र राख्न सक्ने स्वतन्त्र सामाजिक शक्ति निर्माण गर्नुसमेत

हो ।

दफा २

*प्रेस स्वतन्त्रता :* प्रेस स्वतन्त्रतामाथि जनताको स्वामित्व छ । यसैले कुनै पनि क्षेत्र चाहे त्यो सरकारी होस् वा निजीबाट हुने स्वतन्त्रतामाथिको अतिक्रमण वा स्वतन्त्रता कुण्ठित गर्ने प्रयासको प्रतिकार गर्नुपर्छ । पत्रकारहरूको सधैं 'जनताको काम जनताकै लागि' भन्ने कुरामा सचेत रहनुपर्छ । कसैले प्रेसलाई आफ्नो निजी स्वार्थका लागि प्रयोग गर्न सक्छ भन्ने कुरामा सदैव सतर्क रहनुपर्छ ।

दफा ३

*स्वतन्त्र :* पत्रकारले सदैव गलत आचरण र स्वार्थहरूको टकरावबाट टाढा रहनुपर्छ । आफ्नो इमानदारितामा सम्झौता हुने वा देखिने किसिमको कुनै वस्तु स्वीकार गर्ने वा कुनै क्रियाकलापमा भाग लिनुहुँदैन ।

दफा ४

सत्य र तथ्यपरक : पाठकमाथिको इमानदारिता नै असल पत्रकारिताको आधारशीला हो । समाचारलाई तथ्यपरक र पक्षपातरहित बनाउँदैन सम्बन्धित सबै पक्षको भनाइ समाहित गर्न यथासम्भव प्रयास गर्नुपर्छ । सम्पादकीय, विश्लेषणात्मक लेख/टिप्पणीहरू, समाचार जसरी नै तथ्यपरक हुनुपर्छ । तथ्यमा भएका गल्तीलाई इमानदारिताका साथ भूल सुधार गर्नुपर्छ ।

दफा ५

भेदभावरहित : निष्पक्षताका नाममा प्रेसले सम्पादकीय/टिप्पणी आदिबाट कसैको आलोचना नै नगर्ने भन्ने होइन । तर पाठकका लागि समाचार र विचारको बीच स्पष्ट फरक देखाउनुपर्छ । व्यक्तिगत विचार वा प्रस्तुति पनि स्पष्टसँग छुट्टिनुपर्छ ।

दफा ६

*न्यायसंगत :* पत्रकारले समाचारसँग सम्बद्ध व्यक्तिहरूको अधिकारको कदर गर्नु, साझा सामाजिक मर्यादाको निगरानी गर्नु तथा समाचारलाई न्यायसंगत बनाउनुपर्छ । सार्वजनिक रूपमा आरोपित व्यक्तिलाई जतिसक्दो चाँडो प्रतिक्रिया दिने अवसर दिनुपर्छ । गोप्य सूचाना दिने स्रोतको जुनसुकै हालतमा पनि संरक्षण गर्नुपर्छ । यसलाई हल्का रूपमा लिनुहुँदैन ।

यी सिद्धान्तहरू अमेरिकी जनता र अमेरिकी प्रेसबीचको आदर र विश्वासको बन्धनलाई जोगाइराख्न, संरक्षण दिन र दरिलो बनाउन अवलम्बन गर्नु परेको हो ।

## अनुसूची– १

# प्रेस कमिसनले तयार पारेको पत्रकारका आचरणसम्बन्धी केही नियमहरू, २०१५

१. व्यक्तिगत तथा दलगत जेसुकै स्वार्थलाई बिर्सी राष्ट्रिय हितलाई जहिले पनि सर्वोपरि राखी यसमा कुनै किसिमको आँच पर्न नदिनु र राष्ट्रिय भावनालाई जागृत गर्नु/गराउनु वर्तमान नेपालमा पत्रकारहरूको एक महत्त्वपूर्ण कर्तव्य हुनु आवश्यक छ ।

२. राष्ट्रिय एकताको प्रतीक तथा राष्ट्रका सर्वोच्च नायक श्री ५ महाराजाधिराज तथा शाही परिवार, सार्वजनिक आलोचनाभन्दा माथि रहने एक पवित्र र उच्च संस्था भएको हुनाले त्यसप्रति कुनै किसिमको विवाद र आलोचना पैदा गर्ने भावनालाई बढावा दिन हुँदैन ।

३. पत्रकारहरू विशेष तवरले प्रयत्नशील रहनुपर्छ । पत्रकारले आफ्नो कर्तव्य पालन गर्दा मौलिक, मानव तथा सामाजिक अधिकार र प्रतिष्ठाको उचित कदर गर्नुपर्छ तथा पत्रपत्रिकामा आफ्नो विचार प्रकट गर्दा र समाचारहरू प्रकाशित गर्दा सच्चाई र इमानदारीको नीति अपनाउनुपर्छ ।

४. प्रेस (पत्रपत्रिका) जनमतको सिर्जना गर्ने एक प्राथमिक साधन हो । तसर्थ यस व्यवसायमा लागेका महानुभावले कुनै पनि कार्य सार्वजनिक स्वार्थसित सम्बद्ध भएको सम्झी हरबखत सचेष्ट रही कुनै पनि त्यस्तो कार्य जानाजान गर्नबाट पछि हट्नुपर्छ जसबाट जनजीवनमा विषवृक्षँ रोपियोस्, विकास पैदा गरोस् ।

५. पत्रकारहरूले देशका साम्प्रदायिक भावना बढाउने, धार्मिक कटुता पैदा गर्ने, आतंक, अशान्ति, संघर्ष र हिंसालाई प्रँत्साहन गर्ने

खालका समाचार र सम्पादकीय टिप्पणीहरू छाप्न/प्रकाशित गर्नमा बडो होसियार रहनुपर्छ ।

६. पत्रकारहरूले समाचार संकलन र प्रकाशन स्वतन्त्रता तथा स्वच्छ आलोचना गर्ने हक निर्भीकतापूर्वक प्रयोग गर्नुपर्छ, तर आफूले प्रकाशित गरेको समाचार सत्य र आफ्नो सम्पादकीय विचार सत्य र तथ्यमा आधारित होस् भन्ने कुरामा विशेष सतर्क रहनुपर्छ ।

७. पत्रकारहरूको एक विशेष कर्तव्य यो पनि हुनुपर्छ कि उनीहरूले कुनै पनि सत्य कुरालाई तोडमोड गरेर अथवा तथ्यलाई दबाएर जनसमक्षँ राख्नुहुँदैन । जनतालाई जानाजान भ्रममा पार्ने कोसिस गर्नुहुँदैन ।

८. झूठो भनी थाहा भएको अथवा साँचो भनी विश्वास नगरिएको समाचारलाई प्रकाशित गर्नु पनि पत्रकारहरूले पाप सम्झनुपर्छ ।

९. बरु पुष्टि हुन नसकेका समाचार छाप्नुपरेको छ भने प्रष्ट शब्दमा पुष्टि नभएको भनी छाप्ने गर्नुपर्छ, ताकि जनता भ्रममा नपरुन् ।

१०. आफूले प्रकाशित गरेको समाचार पछि गएर असत्य अथवा झूठो ठहरियो भने थाहा हुनासाथ भूल सुधार गरिहाल्नुपर्छ । साथै असत्य समाचारको सुधार, स्पष्टीकरण अथवा खण्डन सम्बन्धित व्यक्ति अथवा समुदायबाट प्रँप्त भयो भने त्यसलाई पनि उत्तिकै महत्त्वका साथ प्रचार गरिदिनुपर्छ, जत्तिको पूर्व समाचारलाई गरिएको थियो ।

११. पत्रकारिताजस्तो महत्त्वपूर्ण र पवित्र व्यवसायमा कहिल्यै पत्रकारहरूले व्यक्तिगत निजी स्वार्थको प्रभाव पर्न दिनुहुँदैन ।

१२. आफ्नो अखबार बिकाउने अथवा आफ्नो निजी स्वार्थपूर्ति गर्ने उद्देश्यले भए/नभएका काल्पनिक समाचार प्रकाशित गरी सनसनी पैदा गर्ने, कसैप्रति ईर्ष्या, द्वेष, वैमनस्य पैदा गर्ने, कलहको बीउ रोप्ने जस्ता घृणित कार्यबाट पनि पत्रकार विल्कुल टाढा रहनुपर्छ ।

१३. पत्रकारहरूले आफ्नो व्यवसाय पत्रकारिताप्रति जनताको आस्था, विश्वास, श्रद्धा र मर्यादा प्रँप्त गरी त्यसलाई कायम राख्न खोज्नुपर्छ ।

१४. आफूलाई विश्वास गरिएको गोप्य कुरा प्रकाश गर्ने विषयप्रति इमानदारी बन्नुपर्छ र अरूको गोपनीयताको पनि हरबखत आदर गर्नुपर्छ ।

१५. व्यक्तिविशेषको घरायसी अथवा व्यक्तिगत कुरासित सम्बन्धित कुनै हल्ला अथवा रीसइबीले झूठो निन्दा र लाञ्छना प्रचार गर्नु पत्रकारका निम्ति अशोभनीय विषय हो ।

१६. आफ्नो व्यापक प्रचारको शक्तिको आधारमा कुनै पत्रकारले कसैलाई डर देखाउने, धम्काउने, प्रष्टरूपले अनुचित आर्थिक फाइदा उठाउने, व्यक्तिगत स्वार्थपूर्ति गर्नु साह्रै घृणित र अमानुषिक कार्य हो ।

१७. पत्रकारले आफ्ना पत्रपत्रिकाहरूमा यौनसम्बन्धी अश्लीलता, कामात्पादक, जननैतिकतामा नराम्रो असर पार्ने, अपराध गर्ने भावनालाई प्रँत्साहन दिने किसिमको विज्ञापन छाप्न तथा अरू तरहले प्रकाशन हुन रोक्नु पनि विशेष कर्तव्य हुनुपर्छ ।

१८. यस सम्बन्धमा अरू नियमहरू आवश्यकताअनुसार प्रेस सल्लाहकार समितिले बेला-बेलामा बनाउनेछ ।

# प्रेस सल्लाहकार परिषद्ले जारी गरेको पत्रकार आचारसंहिता, २०२५

१. समाचार सूचना र विचारको आदान-प्रदान तथा प्रकाशनद्वारा देशमा पञ्चायती व्यवस्था अनुकूल स्वच्छ र स्वस्थ जनमत र जनव्यवहारको सृष्टि र विकास गर्ने प्राथमिक साधन पत्रकारिता भएकाले पत्रकारहरूले आफ्नो व्यवसायलाई सार्वजनिक विश्वास प्रँप्त गहन जिम्मेवारी ठानेर सार्वजनिक हित र मानवताका, शान्तिको संरक्षँण र सेवकका रूपमा अघि बढ्न कटिबद्ध हुनुपर्छ ।

२. आफ्नो कर्तव्य पालनमा पत्रकारहरूले मानवअधिकार र सामाजिक न्यायलाई पूर्ण कदर गरी राष्ट्रका विभिन्न जाति, समुदाय र क्षँत्रका बीच एकता र परस्पर सद्भावको निमित्त तथा हिंसात्मक र अनुचित सामाजिक व्यवहारका विरुद्ध आफ्नो क्षँमताको विशेष उपयोग गर्नुपर्छ ।

३. समाचार तथा विचारको प्रकाशनमा पत्रकारहरूले विश्वास, इमानदारी, सत्यता, निष्पक्षँता र न्यायलाई आफ्नो व्यवसायको मौलिक कर्तव्य ठानी सूचनात्मक, शिक्षँाप्रद तथा स्वस्थ मनोरञ्जनात्मक प्रकाशन विषयक सामाजिक दायित्वलाई बहन गर्नुपर्छ ।

४. आफूमाथि राखिएको विश्वासको कदर र व्यावसायिक तथा समाचारको स्रँतको गोपनीयताको रक्षँा गर्नुपर्छ ।

५. प्रकाशित समाचार असत्य ठहरेको थाहा पाएपछि वा त्यस्तो समाचार र सो समाचारमाथिको टिप्पणीलाई पत्रकारले आफैं सच्याउनुपर्छ ।

६. समाचार र तथ्यहरूको इमानदार संकलन तथा प्रकाशनको स्वतन्त्रता तथा उचित आलोचना र टिप्पणी गर्ने अधिकारजस्ता

सिद्धान्तलाई पत्रकारहरूले सदासर्वदा अनुमोदन र रक्षा गर्नुपर्छ ।

७. समाजका कुनै पनि तहका व्यक्तिको निजी जीवनबारे हल्ला वा खुकुला चर्चालाई स्थान दिनु सुहाउँदो कुरा ठहर्दैन र समाजको सार्वजनिक जीवनमाथि प्रभाव पार्ने खालका छैनन् भन्ने व्यक्तिको निजी जीवनको सत्य ठहर्ने घटनाहरूले पनि स्थान पाउनुहुँदैन ।

८. दुराचार वा अपराधले प्रश्रय वा प्रोत्साहन पाउने सामग्रीको प्रकाशनबाट छापाहरूले विमुख रहनुपर्छ ।

९. अक्षुण राष्ट्र देशका सबै जनताको अधिकार र लक्ष्य भएकाले पत्रकारले आफ्नो सम्पूर्ण प्रयासलाई यतै लगाउनुपर्ने र राजभक्ति, देशभक्ति तथा राष्ट्रिय भावना बढाउनमा जनमतलाई प्रोत्साहित गर्नुपर्छ ।

१०. जाति, समुदाय, वर्ण र क्षेत्रको सीमित स्वार्थलाई राष्ट्रको सर्वाङ्गीण स्वार्थको मातहत राख्नुपर्छ ।

११. जनतामा अस्वस्थ, बिग्रह खडा गर्ने र मुलुकलाई खण्डित गर्ने जस्ता कुनै पनि व्यक्ति वा डफ्फाको कोसिसलाई हतोत्साहित गर्नुपर्छ ।

१२. जनता-जनताबीचको मतभेदलाई हिंसाद्वारा समाधान गर्न उत्साहित गर्ने सबै प्रयासलाई निःसंकोच विरोध गर्नुपर्छ ।

१३. राष्ट्रिय एकता र सम्मान, देश विकास र निर्माण, शिक्षा, स्वास्थ्य, संस्कृतिसम्बन्धी राज्य र सार्वजनिक गतिविधिको समाचारलाई प्रमुखता दिँदै जानुपर्छ ।

१४. राष्ट्रिय संकटको समयमा प्रेस स्वतन्त्रता स्वभावतः सीमित हुन जान्छ भन्ने कुरालाई यो व्यवसायले स्वीकार गरी त्यस्तो अवस्थामा जनताको साहस, नैतिकता र सहयोगी भावनालाई राज्यको अनुकूल गराउनु छापाको अविभाज्य कर्तव्य हो ।

१५. राष्ट्रिय सुरक्षालाई कायम राखेर बलसमेत पुऱ्याउनुमा छापामाथि विशेष उत्तरदायित्व रहने भएकाले सो सुरक्षा गोपनीयताको कुनै पनि प्रकारले भंग हुन नदिनुमा पत्रकारले सकेसम्म जागरुकता लिनुपर्छ ।

१६. राज्यका आधारभूत सामाजिक र आर्थिक कार्यक्रम र नीतिप्रति पत्रकारले समाचार र विचार दिँदा विवेक, सन्तुलन, सहानुभूति र सहयोगी भावनालाई आफ्नो मूल्यांकनको मूल आधार बनाउनुपर्छ ।

१७. समाचार र विचार प्रकाशित गर्दा शिष्ट भाषाको अवलम्बन गर्नु र आलोचना-प्रत्यालोचनामा अशिष्ट भाषा वा शैलीलाई ठाउँ नदिनमा सकेसम्म ध्यान दिनु आवश्यक छ ।

१८. यौन र अपराधसम्बन्धी समाचार प्रकाशित गर्दा उत्तेजना र विकृतिले प्रँ त्साहन नपाउन् भन्ने विचार राख्नुपर्छ ।

१९. पत्रकारले निजी स्वार्थलाई व्यावसायिक कर्तव्यमाथि विपरीत प्रभाव पार्न दिनुहुँदैन, नत पत्रकारले आफ्नो पूनीत व्यवसायलाई पत्रकारिताको क्षँ त्रबाहिर कुनै स्वार्थसिद्धिमा लगाउनुहुन्छ ।

२०. कुनै पनि समाचार र विचारको प्रकाशन वा विरोध गर्ने उद्देश्यले पत्रकारले आफ्नो निजी स्वार्थपूर्ति निमित्त आर्थिक वा कुनै प्रकारको भौतिक सहायता र प्रँ त्साहनका निम्ति कसैसित माग गर्नु वा प्रँ प्त गर्नु अत्यन्तै गर्हित ठहर्छ ।

२१. व्यक्तिगत मतभेदले पत्रकारहरूका बीच मनोमालिन्य जन्माउनु हुँदैन । एकले अर्काको व्यवसायमा आघात पुऱ्याउने प्रकाशन वा पत्रकारका रूपमा अर्काको अस्तित्वको औचित्यलाई लिएर प्रश्न गर्ने वा सार्वजनिक हितसित सम्बन्ध नभएको विषयमा व्यक्तिगत कारणवस परस्परमा सार्वजनिक वादविवाद र आक्रमण-प्रत्याक्रमण चलाउन अनुचित ठहर्छ ।

# प्रेस काउन्सिलले जारी गरेको छापाखाना र प्रकाशन आचारसंहिता, २०३३

१. राजमुकुटप्रति भक्ति र आस्था बढाउने तथा राजसंस्थाको गौरव र गरिमाको महत्त्वको बोध गराउने उद्देश्य लिई पत्रपत्रिकाहरूमार्फत समाचार, अग्रलेख, सम्पादकीय तथा टिप्पणीहरू प्रचार गर्नु पत्रकारको कर्तव्य हुनेछ ।

२. देशको स्वतन्त्रता, सार्वभौमिकता र राष्ट्रिय एकताको संरक्षँण तथा सम्बर्द्धन गर्दै श्री ५ को गतिशील एवं सक्रिय नेतृत्वमा दलविहीन प्रजातान्त्रिक पञ्चायत व्यवस्थाले अंगालेको शोषणरहित समाजको सिर्जना गर्ने उद्देश्यअनुरुप जनकल्याणको अभिवृद्धिका लागि सञ्चालित राष्ट्रिय विकास कार्यक्रमहरूको पत्रपत्रिकाहरूद्वारा प्रचार गराउने काममा पत्रकारहरूले सदैव तत्पर रहनुपर्छ ।

३. गाउँफर्क राष्ट्रिय अभियान केन्द्रीय समितिद्वारा प्रतिपादित सिद्धान्त, त्यसको व्याख्या र कार्यक्रमहरूलाई मुख्य आधार मानी समाचारहरू पत्रपत्रिकामा प्रकाशित गर्न पत्रकारहरू कटिबद्ध रहनुपर्छ ।

४. मुलुकले अपनाएको असंलग्न परराष्ट्र नीति प्रतिकूल मित्रराष्ट्रहरूसँगको सम्बन्धमा आघात पुग्न सक्ने किसिमको समाचार र टिप्पणी प्रकाशित गर्नुहुँदैन ।

५. अराष्ट्रिय अथवा अवाञ्छनीय तत्वहरूको क्रियाकलापका विरुद्ध जनतालाई सतर्क तुल्याउने उद्देश्यबाट प्रकाशित गर्ने समाचार, लेख, टिप्पणीहरूमा त्यस्ता तत्वको गतिविधिको दिग्दर्शन बिल्कुलै हुन नपाओस् भन्ने कुरामा सावधान हुनुपर्छ ।

६. श्री ५ को सम्बोधन भाषण, श्री ५ को सरकारले कार्यान्वयन गर्ने सार्वजनिक हितका कारबाहीको समर्थन र मुलुकमा हुने प्रत्येक राष्ट्रियस्तरको गतिविधिका निम्ति समाचार, लेख, सम्पादकीयहरू प्रकाशित गर्नुपर्छ ।

७. समाचार, सूचना र विचारको आदान-प्रदान तथा प्रकाशनद्वारा पत्रपत्रिकाहरूलाई देशमा पञ्चायती व्यवस्थाअनुकूल स्वच्छ र स्वस्थ जनमत र जनव्यवहारको सृष्टि र विकास गर्ने बनाउन पत्रकारहरू कटिबद्ध हुनुपर्छ ।

८. श्री ५ को सरकार र अन्य कसैले प्रकाशित नगर्ने भनी वस्तुस्थितिको यथार्थ बोधको निमित्त मात्र सुनाएको कुरालाई प्रकाशित गर्ने कार्य नैतिक अपराध मानिनेछ ।

९. श्री ५ को सरकारको अन्य पक्षँको कुनै पनि काम-कारबाहीको आलोचना गर्दा तथ्यमा आधारित विषयवस्तु र औचित्यलाई ध्यानमा राखेरमात्र गर्नुपर्छ । विषयवस्तुलाई अतिरञ्जित गर्ने प्रयास हुनुहुँदैन ।

१०. व्यक्तिगत ईर्ष्या, द्वेषका कारणले अथवा आफ्नो स्वार्थपूर्ति नभएको कारणले कसैको बहकावमा या प्रलोभनमा परी बिनासबुत कसैको काम-कारबाहीको आलोचना गर्नुहुँदैन ।

११. प्रकाशित समाचार असत्य हो भन्ने विधिवत अथवा निश्चित एवं आधारपूर्ण तरिकाले थाहा भएपछि त्यस्तो समाचार र सो समाचारको टिप्पणीलाई पत्रकारहरूले पत्रपत्रिकामार्फत तुरुन्त सुधार गर्नुपर्छ ।

१२. देशको सामाजिक, ऐतिहासिक, सांस्कृतिक उन्नति र आर्थिक विकास एवं निर्माणमा राष्ट्रिय अभियानमा र राष्ट्रिय कार्यक्रमहरूलाई प्रँत्साहन दिने समाचारहरूलाई प्रमुखता दिई अत्यधिक मात्रामा प्रकाशित गर्नुपर्छ ।

१३. आफ्नो कर्तव्य पालनमा समाचार प्रकाशन गर्दा मानवअधिकार, सार्वजनिक कल्याण र सामाजिक न्यायलाई पूर्ण कदर गरी राष्ट्रका विभिन्न जाति, समुदाय र क्षैत्रकाबीच एकता, शान्ति र परस्पर सद्भावनालाई प्रँत्साहन मिल्ने किसिमको समाचार प्रकाशित गर्नुपर्छ ।

१४. समाचार र विचार प्रकाशित गर्दा शिष्ट भाषाको अवलम्बन गर्नुपर्छ ।

१५. अनावश्यक होहल्लामा आधारित समाचारहरूलाई पत्रपत्रिकामा स्थान दिनुहुँदैन र कसैको जीवनमा प्रभावित गर्ने खालका हल्ला, तर्क वा असत्य समाचार प्रकाशित गर्नुहुँदैन ।

१६. दुराचार, अपराध र गैरकानुनी गतिविधिलाई प्रँत्साहन मिल्ने किसिमका र अश्लील सामग्री (विज्ञापनसमेत) पत्रपत्रिकामा प्रकाशित गर्नुहुँदैन ।

१७. कुनै समाचार वा टिप्पणीलाई छाप्ने वा नछाप्ने आफ्नो अधिकारको आडमा पत्रकारले घूस लिन वा कुनै किसिमको प्रलोभनमा पर्नु हुँदैन । व्यावसायिक चरित्रको विपरीत आफ्नो स्वार्थपूर्तिका लागि कसैको अनावश्यक प्रचार गर्नु अथवा कसैमाथि दबाब गर्नु हुँदैन ।

१८. हिंसात्मक भावना वा प्रवृत्ति, विद्रँह र अशान्ति फैलिने किसिमका समाचार प्रकाशित गर्नु हुँदैन ।

१९. व्यक्तिगत मतभेदले पत्रकारहरूका बीच मनोमालिन्य जन्माउनुहुँदैन । एकले अर्काको अस्तित्वको सत्यलाई लिएर प्रश्न गर्न र सार्वजनिक हितसित सम्बन्ध नभएको विषयमा व्यक्तिगत कारणवस सार्वजनिक वादविवाद वा आक्रमण/प्रत्याक्रमण गर्नुहुँदैन ।

२०. पत्रकारहरूले आफ्नो पेशाप्रति पूर्णइमानदार रहेर आफूमाथि राखिएको विश्वासको सम्मान गर्नुपर्छ र व्यावसायिक गोपनीयताको रक्षँा गर्नुपर्छ ।

२१. राष्ट्रिय जीवनलाई प्रभावित पार्ने दैवीप्रकोप र दुर्घटनाबाट हुने संकटको समयमा जनताको साहस, नैतिकता र सहयोगी भावना बढाउने, व्यवस्थाले चालेको हरकदमा पत्रकारहरूले पूर्ण सघाउ पुऱ्याउनुपर्छ ।

# प्रेस काउन्सिलले जारी गरेको छापाखाना र प्रकाशन आचारसंहिता, २०४०

१. समाचार प्रस्तुत गर्दा समाचारको मूख्य अंशमा कुनै टिप्पणी र समाचार संकलकको निजी धारणा व्यक्त गर्न पाइने छैन ।

२. अविश्वसनीय, व्यक्तिगत लाञ्छना तथा तथ्यहीन समाचारलाई बढाइ-चढाई र सार्वजनिक रूपमा बेफाइदा हुने निजी समाचार प्रकाशित गर्न पाइने छैन ।

३. समाचार यथार्थमा आधारित हुनुका साथै समाचार तथा समालोचना, प्रत्यालोचना स्वतन्त्र एवं निष्पक्ष हुनुपर्ने र प्रकाशनलाई कुनै अनुचित दबाबबाट असर पर्न दिनुहुन्न ।

४. समाचार चयन र सम्पादन गर्दा देशको संविधान र राष्ट्रले अंगीकार गरेको मूलभूत सिद्धान्तविपरीतको धारणालाई प्रश्रय दिन पाइने छैन ।

५. समाचार छनोट, लेखन तथा सम्पादन गर्दा कुनै समुदाय विशेषलाई धक्का पर्ने खालका अनर्गल समाचारहरू मनोगत रूपले प्रकाशनमा ल्याउन र धार्मिक तथा अन्य यस्तै कुनै पनि समुदायको विषयमा वैमनस्यता उत्पन्न हुने किसिमको टिकाटिप्पणी गर्न पाइने छैन ।

६. सार्वजनिक क्षेत्रसँग सम्बन्धित नभएसम्म कुनै पनि नागरिकको निजी जीवनको क्रियाकलापलाई प्रेसको विषय बनाउन पाइने छैन ।

७. कुनै पनि अपराधसम्बन्धी मुद्दामा संलग्न व्यक्तिको चरित्रमा अदालती निर्णय नभएसम्म कुनै प्रकारको लाञ्छना लगाउन पाइने छैन ।

८. अभिव्यक्ति स्वतन्त्रताको नाममा सम्पादकले कुनै पनि व्यक्ति वा संस्था आदिको समाचार पत्रिकामा प्रकाशन गर्दा आलोचित व्यक्तिको धारणालाई स्थान दिनुपर्नेछ ।

९. पत्रकारहरूले आफ्नो व्यावसायिक इमानदारिताको संरक्षण र सम्बर्द्धन गर्न सरल व्यवहार अपनाउनुपर्ने र कुनै प्रकारको भौतिक तथा संकुचित र भ्रष्ट धारणालाई पत्रकार वर्गले प्रश्रय दिनुहुँदैन ।

१०. समाचार संकलन गर्दा व्यक्ति वा संस्थालाई विशेष सहयोग दिनुका साथै 'अफ द रेकर्ड' गरिएको बाहेक अन्य संकलित समाचार प्रकाशित गर्ने वा नगर्ने सम्बन्धमा कुनै मोलतोल गर्न पाइने छैन ।

११. पत्रकार वर्गले प्राप्त समाचारको स्रोतलाई संरक्षण दिन सदैव तत्पर रही समाचार पत्रपत्रिका संस्था आदिमा प्रकाशित समाचार सामग्रीलाई आफ्नो प्रकाशनमा प्रकाशित गर्दा मूल प्रकाशनको स्रोत उल्लेख गर्नुपर्नेछ ।

# पत्रकारहरूको भेलाद्वारा जारी पत्रकार आचारसंहिता, २०४२

काठमाडौंबाट प्रकाशित हुने दैनिक तथा साप्ताहिक गरी १४ वटा पत्रिकाका सम्पादकहरूको एक भेलाले २०४२ साल साउन २५ गते पत्रकारका लागि एउटा आचारसंहिता जारी गरेको थियो । सो आचारसंहितामा हस्ताक्षर गर्नेहरूमा पत्रकारहरू मणिराज उपाध्याय, मदनमणि दीक्षित, मणिन्द्रराज श्रेष्ठ, चन्द्रलाल झा, गोपाल सिवाकोटी, शक्ति लम्साल, इन्द्रकान्त मिश्र, गोविन्द वियोगी, कृष्णसुन्दर मल्ल, हिरण्यलाल श्रेष्ठ, कृष्णप्रसाद सिवाकोटी, पदम ठकुराठी र गोविन्द प्रधान थिए ।

१. मुलुकमा प्रबुद्ध जनमतको सिर्जना गरी राष्ट्र र समाजको वृहत्तर हित अभिवृद्धि गर्नका लागि नेपाली प्रेसले आफ्नो निम्ति कार्यको स्वतन्त्रता र विचारको स्वधिनतालाई अत्यावश्यक मानेको छ । प्रेस स्वतन्त्रताको उच्चतम आदर्शहरूको मर्यादा गर्ने आफ्नो प्राथमिक जिम्मेवारीका क्रममा नेपाली प्रेसले आफ्नो अभिव्यक्तिलाई अमर्यादित, असंयमित र उत्तेजनात्मक बनाउनुहुँदैन भन्ने हाम्रो दृढ धारणा छ ।

२. भाषाको शिष्टता र आचरणको पवित्रतालाई पालना गर्दै नेपाली प्रेसले आफ्नो क्रियाकलापलाई स्वेच्छाले यसरी निर्देशित र सञ्चालित गर्नेछ, जसबाट समाजको उपयोगी संयन्त्रका रूपमा प्रेसलाई प्रतिष्ठित पार्न सकोस् र नेपालीहरूको वैयक्तिक गरिमा एवं सम्मानलाई सुनिश्चित गर्न सकियोस् ।

३. समाजलाई सुसूचित पार्ने आधारभूत दायित्व निर्वाह गर्न नेपाली प्रेसले सुरक्षाका उपयुक्त संख्यात्मक प्रत्याभूतिको अपेक्षा राख्छ

भने त्यो सुरक्षालाई कुनै अवस्थामा पनि समाजका स्वीकृति, मान्यता एवं मूल्यहरूप्रति आक्रमण गर्ने, प्रतिरक्षा र प्रतिवादको स्थितिमा नरहेकाहरू माथि चढाई गर्ने र प्रेसको सर्वमान्य प्रबुद्ध स्वार्थविपरीतका अन्य गैरप्रेसीय स्वार्थहरू अभिवृद्धि गर्ने उन्मुक्तिका रूपमा प्रयोग गर्नेछैन ।

४. नेपालको संविधान र प्रचलित कानुनहरूको मर्यादा गर्नुपर्ने दायित्वलाई नेपाली प्रेसले कबुल गर्छ भने ती कानुनहरूको विवेकरहित प्रयोग प्रेसलाई दुःख दिने र यसलाई समाजलाई सुचित पार्ने आधारभूत कर्तव्यबाट विचलित गर्ने उद्देश्यका लागि हुनुहुँदैन भन्ने अडानप्रति त्यत्तिकै दृढ छ ।

५. प्रेस र सत्ता तथा प्रेस र समाजबीच सौहार्दपूर्ण सम्बन्ध कायम रहनुपर्छ भन्ने तथ्यप्रति नेपाली प्रेस सचेत छ र यो सचेतनाले नेपाली प्रेसले गर्ने आलोचना निर्देशित हुनुपर्छ भन्ने कुरामा हामी सहमत छौं । प्रेसमा यदाकदा उठ्ने विवाद नेपाली समाजको चेतनाको स्तरलाई उकासेर एउटा सुखमय संवादको विकासका लागि प्रयुक्त हुनुपर्छ भन्ने हाम्रो धारणा छ ।

६. यी अभिव्यक्तिको घोषणा स्वेच्छाले आत्मानुभूतिबाट प्रेरित भएर आफूलाई बढी उत्तरदायी र जवाफदेहीपूर्ण बनाउने क्रममा प्राथमिक पाइला हो । आफूलाई मर्यादित बनाएर समाजबाट हामी आदर, सम्मान र सुरक्षा प्राप्त गर्न चाहन्छौं ।

# पत्रकार आचारसंहिता, २०४७
# प्रेस काउन्सिल

१. पत्रकारिता सम्पूर्ण मानवप्रति जिम्मेवार हुनुपर्ने पेशा हो । तसर्थ यस पेशमा संलग्न पत्रकारले मानवीय मूल्य, प्रजातान्त्रिक संस्कार, देशहित र सार्वजनिक कल्याण निम्ति सदा समर्पित रहनुपर्छ ।

२. खबर तथा विचारको प्रकाशन र प्रसारणमा पत्रकारहरूले सत्यता, विश्वास र इमानदारिताका साथै न्याय र निष्पक्षतालाई आफ्नो व्यवसायको मौलिक पहिचान बनाउनुपर्छ ।

३. विभिन्न जात, जाति, धर्मावलम्बी, सम्प्रदाय र क्षेत्रका बीच वैमनस्य, फाँटो र हिंसा बढाउने समाचार र विचारलाई स्थान दिनुहुँदैन ।

४. प्रकाशित समाचारबाट कसैको अकारण अहित हुन गएको छ वा समाचार असत्य रहेछ भन्ने थाहा भएमा त्यस्तो समाचारलाई सच्याउनु वा सप्रमाण खण्डन आएमा उचित स्थानमा प्रकाशित गर्नु प्रत्येक प्रकाशनले आफ्नो कर्तव्य मान्नुपर्छ ।

५. पेशागत गोपनीयता, खासगरी समाचारको गोप्य स्रोत खोल्नुहुँदैन ।

६. पत्रकारितालाई व्यक्तिगत स्वार्थपूर्तिका निम्ति दुरुपयोग गर्नुहुँदैन । समाचारलाई माध्यम बनाएर आर्थिक वा अन्य लाभ लिनु वा लिन खोज्नु गम्भीर नैतिक अपराध हो ।

७. कुनै पनि व्यक्ति वा परिवारको चरित्रहत्या हुने, निजी जीवनमा

दखल हुने स्वभावका कपोलकल्पित समाचार वा टिप्पणीलाई आफ्नो प्रकाशनमा स्थान दिनुहुँदैन ।

८. दुर्भावना राखी वा व्यक्तिगत स्वार्थको कारणले कुनै संस्था वा निकायको साख (क्रेडिबिलिटी) माथि आघात पुऱ्याउनुहुँदैन ।

९. अश्लील, अशिष्ट एवं अमर्यादित भाषा र सामग्रीलाई आफ्नो प्रकाशनमा स्थान दिनुहुँदैन । अपराध र बलात्कारसम्बन्धी समाचार दिँदा पनि उत्तेजना र विकृतिले स्थान नपाओस् तथा अन्यायमा परेका पक्षँमाथि पीडा थप्ने कार्य हुन नजाओस् भन्नेतर्फ सतर्क रहनुपर्छ ।

१०. पत्रकारहरूको आपसी सम्बन्ध व्यावसायिक हुनुपर्छ । एकले अर्काको प्रकाशनका सम्बन्धमा गालीगलौज गर्नु व्यावसायिक नैतिकताविपरीत मानिनेछ ।

# पत्रकार आचारसंहिता, २०४९

१. पत्रकारिता सम्पूर्ण मानवप्रति जिम्मेवार हुनुपर्ने पेशा हो । तसर्थ यस पेशामा संलग्न पत्रकारहरूले मानवीय मूल्य, प्रजातान्त्रिक संस्कार, देशहित र सार्वजनिक कल्याण निम्ति सदा समर्पित रहनुपर्छ ।

२. खबर तथा विचारको प्रकाशन र प्रसारणमा पत्रकारहरूसमेतले सत्यता, विश्वास र इमानदारीका साथै न्याय र निष्पक्षताालाई आफ्नो व्यवसायको मौलिक पहिचान बनाउनुपर्छ ।

३. विभिन्न जात, जाति, धर्मावलम्बी, सम्प्रदाय र क्षेत्रका बीच वैमनस्य, फाँटो र हिंसा बढाउने समाचार विचारलाई स्थान दिनुहुँदैन ।

४. प्रकाशित समाचारबाट कसैको अकारण अहित हुन गएको छ वा समाचार असत्य रहेछ भन्ने थाहा भएमा त्यस्तो समाचारलाई सच्याउनु वा सप्रमाण खण्डन आएमा उचित स्थानमा प्रकाशित गर्नु प्रत्येक पत्रकारले आफ्नो कर्तव्य मान्नुपर्छ ।

५. पत्रकारले खासगरी समाचारको गोप्य स्रोत खोल्नुहुँदैन ।

६. पत्रकारितालाई व्यक्तिगत स्वार्थपूर्तिका निम्ति दुरुपयोग गर्नुहुँदैन । समाचारलाई माध्यम बनाएर आर्थिक वा अन्य लाभ लिनु वा लिन खोज्नु गम्भीर नैतिक अपराध हो ।

७. कुनै पनि व्यक्ति वा परिवारको चरित्रहत्या हुने, गोपनीयताको हक हनन हुने, निजी जीवनमा दखल हुने स्वभावका कपोलकल्पित समाचार वा टिप्पणीलाई आफ्नो प्रकाशनमा स्थान दिनुहुँदैन ।

८. दुर्भावना राखी वा व्यक्तिगत स्वार्थको कारणले कुनै संस्था वा निकायको साखमाथि आघात पुऱ्याउनुहुँदैन ।

९. अश्लील, अशिष्ट एवं अमर्यादित भाषा र सामग्रीलाई आफ्नो प्रकाशनमा स्थान दिनुहुँदैन । अपराध र बलात्कारसम्बन्धी समाचार दिँदा पनि उत्तेजना र विकृतिले स्थान नपाओस् तथा अन्यायमा परेका पक्षँमाथि पीडा थप्ने कार्य हुन नजाओस् भन्नेतर्फ सतर्क हुनुपर्छ ।

१०. पत्रकारहरूको आपसी सम्बन्ध व्यावसायिक हुनुपर्छ । एकले अर्काको प्रकाशनका सम्बन्धमा गालीगलौज गर्नु व्यावसायिक नैतिकताविपरीत मानिनेछ ।

# नेपाल पत्रकार संघले जारी गरेको पत्रकार आचारसंहिता, २०५०

१. जनताको सुसूचित हुने नेपाल अधिराज्यको संविधानको धारा १६ द्वारा अभिनिश्चित हकको प्रयोग, प्रचलन र रक्षाका निम्ति सदैव तत्पर तथा क्रियाशील रहनुपर्छ ।

२. पत्रकारिता पेशामा संलग्न पत्रकारहरूले मानवीय मूल्य, प्रजातान्त्रिक संस्कार, देशहित र सार्वजनिक कल्याणका निम्ति समर्पित रहनुपर्छ ।

३. समाचार तथा विचारको प्रकाशन र प्रसारण गर्ने कार्यमा पत्रकारले सत्यता, विश्वास, इमानदारी, तत्परता, न्याय र निष्पक्षतालाई आफ्नो व्यवसायका मूल आधार बनाउनुपर्छ ।

४. समाचारलाई जानाजान बंग्याउनुहुँदैन र विज्ञापनलाई समाचारको रूपमा प्रस्तुत गरेर पाठकमा भ्रम फैलाउनु हुँदैन ।

५. पत्रकारहरूले खासगरी आफूद्वारा प्रकाशित प्रसारित समाचारको गोप्य स्रोत प्रकट गर्नुहुँदैन ।

६. देशका नागरिकहरू खासगरी नारी, बालबालिकाजस्ता संवेदनशील वर्ग र समाजमा असमानता, असहायपन र विपन्नताका उत्पीडनमा परेकाहरूको परिचयमा धुमिल छायाँ पार्ने उद्देश्यले निजात्मक खालका समाचारलाई प्रोत्साहन र प्रश्रय दिनुहुँदैन ।

७. कुनै व्यक्ति वा परिवारको चरित्रहत्या हुने, गोपनीयताको हक

हनन हुने, निजी जीवनमा दखल हुने स्वभावका कपोलकल्पित समाचार वा टिप्पणीलाई आफ्नो प्रकाशनमा स्थान दिनुहुँदैन ।

८. यौन, हिंसा र अपराधजस्ता कुराले सजिलैसित जनध्यान आकर्षित गर्छ भन्दैमा त्यस्ता नकारँत्मक विषयलाई व्यावसायिक आर्जन निम्ति प्रयोग गर्नुहुँदैन । अमर्यादित, अशिष्ट र अश्लील सामग्रीलाई प्रकाशनमा ठाउँ दिनुहुँदैन । बलात्कार र अपराधसम्बन्धी समाचार दिँदा पनि विकृति र उत्तेजनाले स्थान नपाओस् तथा अन्यायमा परेका पीडित पक्षँमाथि पीडा थप्ने काम हुन नजाओस् भन्नेतर्फ सतर्क रहनुपर्छ ।

९. विभिन्न धर्मावलम्बी, जात-जात, क्षँत्र र सम्प्रदायका बीच वैमनस्य, फाँटो, अविश्वास तथा हिंसा बढाउने समाचार र विचारलाई ठाउँ दिनुहुँदैन । नेपाल बहुभाषिक, बहुजातीय, बहुधार्मिक देश भएबाट पत्रकारिताले प्रत्यक्षँ वा परोक्षँ कुनै पनि रूपले सम्पूर्ण नेपालीको साझा फूलबारी भन्ने मान्यतामाथि प्रतिकूल प्रभाव पार्ने काम गर्नुहुँदैन ।

१०. समाचारलाई आर्थिक वा अन्य लाभ दिने माध्यम बनाउन खोज्नु अपराध भएबाट कुनै व्यक्ति वा संस्थामाथि नै दुर्भावना राखी व्यक्तिगत स्वार्थको कारणले कुनै व्यक्ति वा संस्थामाथि आघात पार्नुहुँदैन ।

११. प्रकाशित समाचारबाट कसैका अकारण अहित हुन गएको छ वा समाचार असत्य रहेछ भन्ने थाहा भएमा त्यस्तो समाचारलाई सच्याउनु वा सप्रमाण खण्डन आएमा उचित स्थानमा प्रकाशित गर्नु प्रत्येक पत्रकारले आफ्नो कर्तव्य ठान्नुपर्छ ।

१२. समाचारको प्रभावकारी शक्ति तिनको नैतिक बल हुनुपर्नेमा

समाचार नै सामाजिक दुर्वलताको स्रोतमा परिणत हुने गरेको पनि यदाकदा देखिने गरेबाट समाजमा विभिन्न प्रकारका ठूला-साना अपराध कार्यका साथै शान्ति र व्यवस्था खल्बलिने दिशामा प्रयाससमेत भइरहेका छन् । त्यस्ता घटना समाचारको रूपमा प्रकाशन गर्दा ती समाचार अपराध मनोवृत्तिका सर्जक हुन नपाउन् भन्ने कुरामाथि विशेष ध्यान दिनु र सावधान रहनुपर्छ ।

१३. संविधान प्रदत्त स्वतन्त्रताको मौलिक हकलाई राष्ट्रको स्वाधीनता, गरिमा र संविधानको प्रजातान्त्रिक मर्यादाको प्रतिकूल हुने कुनै पनि रूपमा उपयोग गर्नुहुँदैन ।

१४. विचार खण्डन-मण्डन स्वस्थ हुनुपर्छ । पत्रकारहरूले एकआपसमा हिलो छ्यापाछ्याप गर्नुहुँदैन । एकले अर्काको प्रकाशनका सम्बन्धमा गाली-गलौज गर्नु व्यावसायिक नैतिकताकताविपरीत हुनेछ । पत्रकारहरूको आपसी सम्बन्ध व्यावसायिक हुनुपर्छ ।

# सन्दर्भ सामग्री

## पुस्तक

Reporting the World, by Jake Lynch, Conflict & Peace Forums 2002.
Producers' Gudidelines, The BBC's Values & Stamdards. Communication and Sociak Change by Michal Kunozik, FES.
Conceots of Journalism, North and South, by Michal Kunozik, FES.
Ethics in Nursing, by Thompson & Thompson, Macmillan publishing Co. Inc, Newyork, 1981.
Radio Television Hong Kong Producers's Guidelines, 1998
public Service Broadcasting, Cultural and Educational Dimensions, 1996, UNESCO, paris.
News Reporting and Writing, Fourth Edition, The Missouri Group.
News Writing, and Reporting for Today's Media, Third Edition, by Itule & Anderson.
Ethical Guidelines, Radio-Television News Directors Asso ciation, Canada.
Community Broadcasters Code of Conduct, Tambuli, Philippines.
Dictionary of Sociology, by Jary & Jary, Collins Publishers.
Broadcasting Standard, The National Association of Commercial Broadcasters in Japan.
Code of Ethics, Canadian Association of Broadcasters (CAB).
International Federation of Jourmalists Code of Ethics.
Nationalism & social communication, k.w. Dontsch, 1966.
An Introduction to Social Psycholigy, H.C. Lindgren, wiley estern Ltd.
Doing Ethics in Journalists, by Black, Steele & Barney

Paramount Publishing, 1995.

कौटिल्यको अर्थशास्त्र, सं. सोमनाथ शर्मा, नेराप्रप्र २०२४ ।

ऐन संग्रह (एक टिप्पणी), ज्ञाइन्द्रबहादुर श्रेष्ठ, पैरवी प्रकाशन, २०५५ ।

नेपालमा पत्रकार आचारसंहिता, प्रेस काउन्सिल, नेपाल, २०५६ ।

नेपाली बृहत् शब्दकोश, सं. कृष्णप्रसाद पराजुली, नेराप्रप्र, २०५५ ।

सामुदायिक रेडियो प्रसारण निर्देशिका, सामुदायिक रेडियो सहयोग केन्द्र (नेवापस), २०५८ ।

मुलुकी ऐन (नवौं संशोधनसमेत), कानुन किताब व्यवस्था समिति ।

अदालती रिपोर्टिङ, शिव गाउँले, हिमाल किताब, २००२ ।

आम र कानुन, काशीराज दाहाल, नेपाल प्रेस इन्स्टिच्युट, २०५८ ।

नेपाली उखान-टुक्काको कोश, पुष्कर शमशेर, साभा प्रकाशन, २०५० ।

गोरखापत्र शैली पुस्तिका, गोरखापत्र, २०५५ ।

नेपाली भाषा शिक्ँण हेमाङ्गराज अधिकारी, कुञ्जल प्रकाशन, २०५० ।

शिक्ँा दिग्दर्शन, नागेश्वर सिंह, ज्ञानज्योति प्रकाशन, २०५० ।

समाजशास्त्र, सत्यकेतु विद्यालंकार डी,लिट, श्री सरस्वती सदन, नई दिल्ली, १९९५ ।

ग्रँमीण समाजशास्त्र, वीरेन्द्रनाथ सिंह, विवेक प्रकाशन, दिल्ली, १९९४ ।
मानहानी एवं विश्लेपूर्ण अभियोजन, दिनेशचन्द्र गुप्ता, मल्होत्रा पब्लिसिङ

हाउस, इलाहवाद, १९९१ ।

राम्रो रचना मीठो नेपाली, कृष्णप्रसाद पराजुली सहयोगी प्रेस, २०५५ ।

राष्ट्र भाषा, बालकृष्ण पोखरेल, साझा प्रकाशन ।

नेपाल अधिराज्यको संविधान २०४७, कानुन किताब व्यवस्था समिति ।

महाकाली सन्धि र सूचनाको हक, सं/सं राष्ट्रिय सरोकार समाज, काठमाडौं, २०५३ ।

समाजशास्त्र र मानवशास्त्रको परिचय, कृष्णप्रसाद भण्डारी, एम.के. पब्लिसर्स एन्ड डिस्ट्रिब्युटर्स काठमाडौं, २०५८ ।

मानवअधिकार संगालो, सं. पवनकुमार ओझा, इन्सेक, २०५३ ।

नेपालको छापाखाना र पत्रपत्रिकाको इतिहास गृष्मबहादुर देवकोटा, साझा प्रकाशन, २०५१ ।

भाषाको माया, कृष्णप्रसाद पराजुली, रत्नपुस्तक भण्डार, २०४४ ।

रेडियो नेपाल तथा नेपाल टेलिभिजन समाचार नीति, २०५७ ।

## वेव साइट

Online Guide to Ethics & Moral Philosophy. Rebert Cavaller. Philosophy Department, Carnegie Mellon, 2002.
Amnesty International, Health Professional Networkonline.
History of the IBA, www.ibanet.org.
History of Modern Ethics, by Stephon Darwall,
www.la.utexas.edu.
www.egs.edu.introduction, Technology and media.

